# नेपाली भाषाको मझौला व्याकरण.

MIDDLE NEPALI GRAMMAR.

# मध्यचन्द्रिका ।

श्रीयुत मान्यवर गुरुराज हेमराज पण्डितज्यूबाट
बनाइबक्सेको ठूलो चन्द्रिका व्याकरणका
आधारमा मजकूरकै मर्जी मुताबिक
बनेको छोटकरी नेपाली
व्याकरण ।

लेखक र प्रकाशक—

सोमनाथ शर्मा.

# मद्ध्यचन्द्रिका ।



## नेपाली भाषाको मझौला व्याकरण.

## A
## Middle Nepali Grammar.

श्रीयुत मान्यवर गुरुराज हेमराज पण्डितज्यूबाट
बनाइबक्सेको ठूलो चन्द्रिका व्याकरणको
आधारमा मजकूरकै मर्जी मुताबिक
बनेको छोटकरी नेपाली
व्याकरण ।



लेखक र प्रकाशक—
सोमनाथ शर्मा.

Printed at the Shree Yucksal
Bhagavatee Press- Nepal.

संवत् १९७६ साल.

मूल्य १।५०

# भूमिका ।

संसारमा मातृ-भाषा संग मानवजातिको कत्तिको गाढा नाता छ सो कुरा प्रसिद्धै छ. हामी नेपाली पर्वते जातिको मातृ-भाषा **गोरखाली-भाषा** हो, जो आजकाल **नेपाली-भाषा** भनि व्यवहार गरिन्छ. यसमा अघि विद्वान्हरूको सुधारण-दृष्टि बहुतै कम परेको थियो ता पनी परमविद्यानुरागी **श्री ३ महाराज** बाट नेपाल-राज्यमा धेरै पाठशालाहरू खोली मातृ-भाषाको उन्नति गराइबक्सेको हुनाले अब यस तर्फ धेरैको दिल झुकेको देखिन्छ, यसैले यसमा पहिले मुख्य चाहिनुपर्ने कुराको पूर्तिलाई **श्रीमान् मान्यवर गुरुराज हेमराज पण्डितज्यू** बाट सर्व-प्रथम ठूलो विचार-पूर्ण **चन्द्रिका** व्याकरण बनाई ६९ सालमा प्रकाश गरिबक्सियो. सो व्याकरण अति-विस्तृत भई बालकहरूको निमित्त संक्षिप्त व्याकरणको आवश्यकता भएको हुनाले वाहाँकै आज्ञानुसार सोही ‘ चन्द्रिका ’ को आधारमा यो छोटकरी व्याकरण बनाई मातृ-भाषाका प्रेमीहरूको सेवामा उपस्थित गराएको छु.

यसमा पूर्वोक्त श्रीमान्बाट जहाँ जस्तो परिवर्तन र शैलीको अवलम्बनलाई निगाह साथ राय बक्सिएथ्यो, सोही बमोजिम परिवर्तनहरू गरी भए जति आफ्नो बुद्धि बगंतलाई काम लगाई लेखेको छु.

धेरै ग्रन्थको अवलम्बन नभई प्राथमिकै लेख हुनाले र मनुष्यको दृष्टि योग्यताको हद भित्रै रहने हुनाले पनी यसमा अझ सुधार गर्नुपर्ने विषय धेरै नै बाँकि हुनन् ता पनी विद्वान्हरूबाट विचार साथ सुधार गर्नुपर्ने कुराको सूचना पाउँदै रहे आर्को आर्को संस्करणमा बराबर सुधार हुँदै जानेछ भन्ने पूरा उमेद गर्दछु.

**७६ साल पौष.**
**काठमाण्डू, नेपाल.**

**प्रार्थयिता—**
**लेखक.**

# विषयसूची.

| विषय. | पृष्ठ. | विषय. | पृष्ठ. |
| --- | --- | --- | --- |


१ भाषा र व्याकरण १
२ वर्ण ४
३ पद १३
४ नाम १५
५ रूपभेद २१
६ लिङ्ग २४
७ वचन ३१
८ विभक्ति ३६
९ नामको रूपावली ४०
१० सर्वनाम ४६
११ सर्वनामको रूपावली ५९
१२ विशेषण ६८
१३ क्रियापद ८२
१४ क्रियापदको रूपभेद ८९
१५ सरल र संयुक्त क्रियापद ९७
१६ क्रियापदको रूपावली १०९
१७ अकरण १३४
१८ कर्मवाच्य र भाववाच्य १४१
१९ प्रेरणार्थक र नामधातु १४७
२० मिलितक्रिया १५२
२१ क्रियायोगी १५७
२२ नामयोगी १६१
२३ संयोजक १६४
२४ विस्मयादिबोधक १७०
२५ शब्दरचना १७३
२६ पदव्याकरण १८६
२७ वाक्य १८८
२८ वाक्यव्याकरण २०७
२९ चिन्ह २१८




॥ श्रीः ॥

# मध्य चन्द्रिका

## Middle Nepali Grammar.



## १—भाषा र व्याकरण.

## ( Language and Grammar )

१. आफ्नो मनको आशय अर्कालाई बुझाउनु मुख्य गरी दुइ रीतले हुन्छ; एक बोल्नाले, दोस्रो लेख्नाले.

२. सो बोलिने र लेखेर बुझाइने कुरालाई **भाषा** ( Language ) भन्दछन्.

टिप्पणी-भाषा भनेको मनको कुरा बुझाउन बोलिने शब्द हो. बोलीबाट झैं सो शब्द बुझाउन कल्पना गरेको सङ्केतरूप लेखबाट पनी कुरा बुझिने हुनाले भाषाको लेखलाई पनी 'भाषा' भन्ने व्यवहार हुन्छ, यस्तै वर्ण पद वाक्य पनी शब्दै हुन्ता पनी तिनलाई बुझाउने लेखलाई समेत 'वर्ण, पद, वाक्य' भन्ने व्यवहार हुन्छ.

---

( १ ) माथि ठाउं ठाउंमा टि. को सङ्केत दिई राखेका साना अक्षरका टिप्पणीहरू विशेष कुरा हुनाले निम्न ( तला ) श्रेणीका विद्यार्थीहरूले सो याद गर्नाको आवश्यकता छैन, ठुला अक्षरका मूल नियमका कुरा मात्र याद गरे पुग्दछ; संझन शक्ने ल्याकत भए तिनलाई अध्यापकले सो टिप्पणीका कुराको ठाउं ठाउंमा चाहिनेजति मतलव संम बुझाइदिने गरे बेस हुन्छ. उच्च ( माथिल्ला ) श्रेणीका विद्यार्थीहरूले भने ठुला अक्षरका मूल नियमका कुरा झैं साना अक्षरका टिप्पणीका कुरा पनी याद गर्नुपर्दछ.

३. हाम्रो पर्वते बोलीलाई **नेपाली-भाषा** ( Nepali Language ) भन्दछन्.

टि. हाम्रो पर्वते भाषा ' गोरखाली-भाषा ' हो. सोही भाषा राज भाषा भएर नेपाल राज्यभर फैलिएको हुनाले ' नेपाली—भाषा ' कहलाएको छ.

४. वर्णात्मक शब्द ( Sound ) बाट भाषा बन्दछ.

टि. शब्द अर्थात् अवाज दुइ किसिमको हुन्छ; कोही ध्वन्यात्मक ( Inarticulate ) अर्थात् अक्षर नछुट्टिने अस्पष्ट शब्द हुन्छ, जस्तो प्रायः बाजाहरूबाट निस्कन्छ. कोही वर्णात्मक ( Articulate ) अर्थात् अक्षर छुट्टिने स्पष्ट शब्द हुन्छ, जस्तो प्रायः मानिसहरूले बोलिन्छ. यी दुइ थरीमा वर्णात्मक स्पष्ट शब्दबाट भाषा बन्दछ.

५. सो वर्णात्मक शब्द तीन किसिमको हुन्छ :—

( १ ) वर्ण. ( Letter )
( २ ) पद. ( Word )
( ३ ) वाक्य. ( Sentence )

( १ ) ' अ. आ. क. ख ' इत्यादि एकेक अक्षरलाई **वर्ण** भन्दछन्.

( २ ) ' मानिस. घर. कलम. एक ' इत्यादि अर्थ बुझाउने वर्णसमुदायलाई **पद** भन्दछन्.

( ३ ) ' म जान्छु. तिमी पाठ पढ. बाबाले मलाई बोलाउनु भयो ' इत्यादि एकेक पूरा कुरा बुझाउने पदसमुदायलाई **वाक्य** भन्दछन्.

६. वर्ण मिलेर पद, पद मिलेर वाक्य बन्दछ.

७. भाषामा कुन शब्द कस्तो हो ? कसरी बन्दछ ? शुद्ध कसरी बोल्नू ? कसरी लेख्नू ? इत्यादि कुरा बुझाउने ग्रन्थलाई **व्याकरण** ( Grammar ) भन्दछन् .

८. नेपाली व्याकरणबाट नेपाली भाषा शुद्ध गरी बोल्ने लेख्ने कायदा जानिन्छ.

९. व्याकरणमा तीन मुख्य विभाग हुन्छन् :–

( १ ) वर्णविचार. ( Orthography )
( २ ) पदविचार. ( Etymology )
( ३ ) योजनाविचार. ( Syntax )

( १ ) वर्णको स्वरूप, भेद, उच्चारणहरू बयान गर्ने भागलाई **वर्णविचार** भन्दछन्.

( २ ) पदको स्वरूप, भेद, रूपहरू बयान गर्ने भागलाई **पदविचार** भन्दछन्.

( ३ ) वाक्यमा पद जोड्ने रीत, त्यस भित्रका पदको प-

रस्पर सम्बन्ध क्रमहरू बयान गर्ने भागलाई **योजनाविचार** भन्दछन्.

प्रश्नः—

भाषा भनेको के हो ? भाषाबाट के काम हुन्छ ? हाम्रो भाषा कुन हो ? भाषा केबाट बन्दछ ? शब्द कति थरी हुन्छन् ? व्याकरण भनेको के हो ? व्याकरण जान्नाले के फायदा हुन्छ ? व्याकरणमा के के कुरा हुन्छन् ? वर्ण, पद, वाक्य, भनेको के के हो ? पद वाक्य भाषा कसरी बन्दछ ? नेपाली व्याकरणबाट के फायदा हुन्छ ?

---

# I वर्णविचार ( Orthography )

## २—वर्ण ( Letter )

१०. वर्णविचारमा वर्णको स्वरूप, भेद, उच्चारण, मात्रा, संयोगहरूको बयान हुन्छ.

११. जुन शब्दको अर्को टुक्रा हुन शक्तैन त्यस्ता साना साना शब्द ( ध्वनि ) लाई र तिनलाई बुझाउने ' अ, आ, क, ख, ' इत्यादि चिन्हलाई पनी वर्ण ( Letter ) भन्दछन्.

१२. वर्ण तीन किसिमका हुन्छन् :—

---

( १ ) पाठ पाठका आखिरमा परेका प्रश्नहरू अध्यापकले सबै श्रेणीका प्रत्येक विद्यार्थीलाई सोधी तिनको जवाफ तिनीहरूबाट लिने गर्नुपर्दछ; जवाफ दिन नशक्नेलाई फेरी सो पाठका नियमहरू संझाई याद गराउने गर्नुपर्दछ.

( १ ) स्वर ( Vowel ).
( २ ) अयोगवाह.
( ३ ) व्यञ्जन. ( Consonant )

१३. अर्को वर्णको मद्दत नलिईकन पूरा उच्चारण हुने वर्णलाई **स्वर** वा **अच्** ( Vowel ) भन्दछन्. ती स्वर चौध छन:—

' अ आ इ ई उ ऊ ऋ ॠ ऌ ॡ ए ऐ ओ औ '

टि. यी स्वरमा ' ॠ ऌ ॡ ' यिनको हाम्रो भाषाका शब्दमा प्रयोग छैन. ' ऋ ' पनी संस्कृतबाट आएका ' कृष्ण. कृपा ' आदि कुनै शब्दमा मात्र प्रयोग हुन्छ.

१४. ती स्वरमा उच्चारण गर्दा थोरै काल लाग्नेचाहीं **ह्रस्व**, धेरै काल लाग्नेचाहीं **दीर्घ**, यस्ता दुइ भेद हुन्छन्. जस्तैः-

**ह्रस्व** ( Short ) अ इ उ ऋ ऌ
**दीर्घ** ( Long ) आ ई ऊ ॠ ॡ ए ऐ ओ औ.

१५. कहीं स्वरको दीर्घ भन्दा पनी लामो उच्चारण हुने हुन्छ, त्यस्तो स्वरलाई **प्लुत** ( Protracted-vowel ) भन्दछन्; तिनमा परतिर '₃' यस्तो चिन्ह लेखिन्छ. जस्तैः-

'अ₃ यस्तो कहिले हुन्थ्यो₃. आ₃ यसो नगर्. ए₃ बाबू₃ पण्डितजी₃. '

१६. स्वर कहीं नाके बोलीले उच्चारण हुने हुन्छ, यस्तो स्वर

लाई अनुनासिक ( Nasal ) भन्दछन; तिनमा डिकोमाथि ँ यस्तो चिन्ह रहन्छ. जस्तै :–

अँ. आँ. इँ ईँ. तँ. भाँडा. नाँल. वाँश.

टि. १ अनुनासिकमा कोही डिकोमाथि ˙˙ यस्तो, वा अनुस्वारकै झैं ˙ यस्तो चिन्ह दिएर पनी लेख्तछन्. त्यस्तामा अनुनासिक र अनुस्वार शब्द हेरेर छुत्त्याउनुपर्दछ. जस्तै :–

अनुस्वार–' विद्वान्को संगले भलो हुन्छ. संस्कृत पढ्नुपर्दछ.'

अनुनासिक–' याहांसंग तं जा. भांडा माझ्छ.'

टि. २ लेख्ताखेरि अनुनासिक स्वरमा चिन्ह दिनुपर्दछ; चिन्ह नदिएमा कहीं अर्थ फरक पर्ने पनी हुन्छ. जस्तै :–

' भाँडा–भाडा. नाँल–नाल. वाँश–वास. अँ३ अ३ '

१७. अर्को स्वरसंग मिलेर अर्थात् एक जिउ भएर मात्र उच्चारण हुने अनुस्वार र विसर्गलाई अयोगवाह भन्दछन्.

( अ ) अनुस्वार अर्थात् शिरविन्दु '˙'

जस्तै :– ' अं आं इं ईं उं ऊं ' इ०

( आ ) विसर्ग अर्थात् दवासबिन्दु :

जस्तै :– ' अः आः इः ईः उः ऊः ' इ०

टि. १ अनुस्वार र विसर्गलाई कहीं स्वरमा कहीं व्यञ्जनमा गणना गरेको छ ता पनी यी एकलै प्रयोग नभई अर्को स्वरसंग मिली एक जिउ भएर मात्र रहने, स्वर व्यञ्जन दुवै थरी भन्दा बेगलै वर्ण हुनाले यिनलाई अयोगवाह भन्दछन्.

टि. २ संस्कृतमा एक पद भित्रको अनुस्वारदेखि पर क–च–ट–त–प वर्गको वर्ण भए सो अनुस्वारका ठांउमा सोही वर्गको पाचौं वर्ण ( ङ् ञ् ण् न् म ) हुने, अरू वर्ण पर भए अनुस्वार अर्थात् शिरबिन्दु नै हुने हुन्छ. जस्तै :–

'रङ्ग. पञ्च. घण्टा. मन्त्र. मन्द. कम्बल. संयोग. संवत्. संस्कृत. संहार' इ०

भाषामा संस्कृतबाट आएका शब्दमा प्रायः यहीबमोजिम, अरू भाषाका शब्दमा यही बमोजिम वा सबैमा अनुस्वारै गर्ने पनी व्यवहार छ. जस्तै :–

' बेंच, बेञ्च. पंत, पन्त. लंठ, लेण्ठ. बंगाल, बङ्गाल. अंबा, अम्बा. सन्देह. संयोग. अङ्गीकार. खण्ड. ' इ०

नकारै भएका ' हुन्छ. जान्छ. जान्ने. सुन्दछु. अन्कनाउँछ. ' इत्यादि शब्दमा भने अनुस्वार लेख्न हुंदैन.

१८. स्वरको मदत लिएर मात्र पूरा उच्चारण हुने वर्णलाई व्यञ्जन वा हल् ( Consonant ) भन्दछन. ती व्यञ्जन चौंतीस छन् :–

' क् ख् ग् घ् ङ् च् छ् ज् झ् ञ् ट् ठ् ड् ढ् ण् त् थ् द् ध् न् प् फ् ब् भ् म् य् र् ल् व् श् ष् स् ह् ळ् '

टि. १ ' अ आ ' इत्यादि स्वरको उच्चारणलाई अर्को वर्णको सहायता चाहिंदैन; ' क ख ' आदि व्यञ्जनको भने पहिलेतिर स्वर राखी ' अक्, आक् ' इत्यादि वा पछाडितिर स्वर जोडी ' क का ' इत्यादि उच्चारण हुने हुनाले स्वरको सहायता नलिई यिनको पूरा उच्चारण हुंदैन.

टि. २ कुनै वर्ण लेख्तामा वा छापामा अनेक किसिमका हुने पनी हुन्छन्. जस्तै :—

छ, छ. झ, झ. ण, ण. ल, ल. श, श. अ, अ.

टि. ३ य को मन्तिर बिन्दु दिई य़ यस्तो लेख्नाले ' ज्य ' जस्तो उच्चारण हुन्छ. क्ष ज्ञ यी वर्ण ' क+ष ' मिली ' क्ष ', ' ज+ञ ' मिली ' ज्ञ ' हुने हुनाले संयुक्त वर्ण हुन्, बेग्लै वर्ण होइनन्.

टि. ४ हाम्रो भाषामा ' पाळो घोळा पळेको चळेको ' इत्यादिमा ' ड ढ ' को भन्दा बेग्लै किसिमको ळ् को उच्चारण हुनाले ळ अक्षर पनी मान्नु आवश्यक छ. कोही त्यसका ठाउंमा ' ड ढ ' को मन्तिर बिन्दु दिई ड़ ढ़ यस्तो पनी लेख्तछन्.

१९. ती व्यञ्जन वर्ग वर्ग गरी यसरी विभक्त हुन्छन् :—

(अ) **कवर्ग** (Gutturals) ' क् ख् ग् घ् ङ् '.
(आ) **चवर्ग** (Palatals) ' च् छ् ज् झ् ञ् '
(इ) **टवर्ग** (Linguals) ' ट् ठ् ड् ढ् ण् '
(ई) **तवर्ग** (Dentals) ' त् थ् द् ध् न् '
(उ) **पवर्ग** (Labials) ' प् फ् ब् भ् म् '
(ऊ) **अन्तःस्थ** (Semi-vowels) ' य् र् ल् व् '
(ऋ) **ऊष्म** (Sibilants) ' श् ष् स् ह् '

२०. मुखको जुन भागबाट जुन वर्ण निस्कन्छ, त्यस वर्णको त्यो ठाउं उच्चारण-स्थान हुन्छ; ती स्थान यी हुन् :—

| वर्ण. | | स्थान. |
|---|---|---|
| ' अ आ क् ख् ग् घ् ङ् ह् : ( विसर्ग ) ' | को | कण्ठ. |
| ' इ ई च् छ् ज् झ् ञ् य् श् ' | को | तालु. |
| ' ऋ ॠ ट् ठ् ड् ढ् ण् र् ष् ळ् ' | को | मूर्द्धा. |
| ' ऌ ॡ त् थ् द् ध् न् ल् स् ' | को | दन्त. |
| ' उ ऊ प् फ् ब् भ् म् ' | को | ओष्ठ. |
| ' ए ऐ ' | को | कण्ठ-तालु. |
| ' ओ औ ' | को | कण्ठ-ओष्ठ. |
| ' व् ' | को | दन्त-ओष्ठ. |
| ' ङ् ञ् ण् न् म् ं ( अनुस्वार ) ' | को | नासिका. |

टि. १ वर्णमा कोही ष को ख, य को ज, क्ष को छय ज्ञ, को ग्य इत्यादि अकैं उच्चारण गरी ' खड्ग मूर्ख. मुखिया ' आदि लेख्नुपर्नेमा ' षड्ग. मूर्ष. मुषिया ' इत्यादि, ' युद्ध. यजमान. योगी ' आदि लेख्नुपर्नेमा ' जुद्ध. जजमान. जोगी ' इत्यादि, ' शिक्षा. क्षत्रिय. क्षमा ' आदि लेख्नुपर्नेमा ' शिछ्या. छ्य ( छे ) त्रिय. छयमा ' इत्यादि, ' ज्ञान. यज्ञ. आज्ञा ' आदि लेख्नुपर्नेमा ' ग्यान. जग्य. आग्या ' इत्यादि लेख्तछन्; सो ठीक होइन.

टि. २ कोही तवर्ग टवर्गका वर्णको उच्चारण उल्टापाल्टी गरी सोही माफिक लेख्ने पनी गर्दछन्, त्यसो गर्न हुंदैन. त्यसरी एक वर्णका ठांउमा अर्को वर्ण उच्चारण गर्ने लेख्ने गर्नाले कहीं कुरै न बुझिने, कहीं एक थोक बुझिनुपर्नेमा अर्को थोक बुझिनगई साहै अनर्थ हुने पनी हुन्छ. जस्तै :-

दश तोप पठाऊ—दश टोप पठाऊ.

कोटको माल ल्याऊ—कोतको माल ल्याऊ.

पाथी किन—पाठी किन. डर लाग्यो—दर लाग्यो.

पाळो देऊ — पारो देऊ. धोका पाएं—दोका पाएं. इ०

२१. व्यञ्जन संग स्वर जोडिएर एकै व्यञ्जन पनी धेरै थरीका अक्षर बन्दछन्, तिनलाई **बाह्राखरी** भन्दछन्. सो व्यञ्जनमा जोडेको स्वरलाई **मात्रा** भन्दछन्. जस्तै :—

| | | | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| **स्वर** | अ | आ | इ | ई | उ | ऊ | ऋ | ए | ऐ | ओ | औ | अं | अः |
| **चिन्ह** | | ा | ि | ी | ु | ू | ृ | े | ै | ो | ौ | ं | ः |
| **अक्षर** | क | का | कि | की | कु | कू | कृ | के | कै | को | कौ | कं | कः |

टि. १—मात्रा नलागेको खालि व्यञ्जनमा तलतिर ' ् ' यस्तो खुट्टो काटेको चिन्ह रहन्छ, अ जोडेमा सो खुट्टो काटेको चिन्ह झिकी पूरा अक्षर लेखिन्छ, अको चिन्ह थपिंदैन. इ को चिन्ह वर्ण भन्दा पहिले, आ ई ओ औ : का चिन्ह वर्ण भन्दा पछि, उ ऊ ऋ का चिन्ह वर्ण भन्दा मनि, ए ऐं ं का चिन्ह वर्ण भन्दा माथितिर लाग्दछन्.

टि. २—कुनै वर्ण मात्रा लागेमा अर्कै स्वरूप संग लेखिने पनी हुन्छन्. जस्तै :—

' श्+उ=शु, शु. र्+उ=रु. र्+ऊ=रू. ' इ०

२२. व्यञ्जन व्यञ्जनका बिचमा स्वर नभए तिनको संयोग हुन्छ, अर्थात् ती जोडिन्छन. सो जोडिएको वर्णलाई **संयुक्त-अक्षर** (Conjunct-consonant) भन्दछन. जस्तै:-

'स+व=स्व. स्+त्=स्त. श्+र=श्र. क्+य=क्य. ख+र=ख्र ' इ०

(क) संयोग हुंदा कुनै वर्ण तल माथि भई. कुनै वर्ण अगाडि पछाडि भई केही भाग कट्टा भएर जोडिने, कुनै वर्ण डिको माथि वा तलतिर अर्कै चिन्ह भएर जोडिने, कुनै वर्ण स्वरूपै बदलिएर जोडिने पनी हुन्छन. जस्तै :–

(१) क+न=क्न. ह+व=ह्व. च्+च=च्च. द+ध=द्ध. ञ्+च=ञ्च.
(२) व्+द=व्द. क्+य=क्य. च्+छ=च्छ. ण्+ठ=ण्ठ. प्+प=प्प.
(३) र्+क=र्क. र्+थ=र्थ. प्+र=प्र. द+र=द्र. ट+र=ट्र.
(४) क्+र=क्र. श्+र=श्र. त्+र=त्र. क्+त=क्त. र्+य=र्‍य.

यस्तै–' सन्ध्या. प्रश्न. मन्त्र. चन्द्र. कृष्ण. मुख्य. क्षुद्र. जुत्ता. स्वर्ग. साह्रो. रत्न. ब्रह्म. पद्म. वल्ल. श्लोक. हर्ष. गुज्जा. शण्ठ. शास्त्र. च्याङ्ग्रो. पङ्क्ति. स्वास्नी. दुष्ट. द्वाक. इयाङ्ग. ' इत्यादि शब्दमा पनी संयुक्त अक्षर परेका छन.

टि. १–हाम्रो भाषामा व्यञ्जनको संयोग दुइ किसिमको हुन्छ, कोही शिथिल अर्थात् खुकुलो हुन्छ, यस्तो संयोग भएमा अघिल्लो स्वरमा जोर नपर्ने गरी हलुका उच्चारण हुने हुन्छ; कोही घन अर्थात् मजबूत हुन्छ. यस्तो संयोग भएमा अघिल्लो स्वरमा जोर पर्ने गरी साह्रो उच्चारण हुने हुन्छ. जस्तै :–

शिथिल संयोग ' भन्यो. गर्‍यौं. साह्रो. गन्यो. देख्यो. पव्याक.' इ॰
घन संयोग ' भन्ने. गर्ने. सुन्दछ. वल्ल: यस्तो. पित्त.' इ॰

२३. तल लेखे किसिमका व्यवहारमा चलेका संस्कृत शब्द कोष्ठक, भिन्नका अनेक शब्द जोडिएर बनेका हुनाले तिनमा

अघिल्ला शब्दका अन्त्य र पछिल्ला शब्दका आद्य स्वर व्यञ्जनको **सन्धि** अर्थात् जोड भई अर्कै वर्णहरू भएका छन्. जस्तै :–

| | | | |
|---|---|---|---|
| ( सिंह+आसन ) | सिंहासन. | ( हरिस्+चन्द्र ) | हरिश्चन्द्र. |
| ( विद्या+अर्थी ) | विद्यार्थी. | ( सत् + जन ) | सज्जन. |
| ( परम + अर्थ ) | परमार्थ. | ( दुष् + त ) | दुष्ट. |
| ( देव +आलय) | देवालय. | ( जगत्+ईश्वर ) | जगदीश्वर. |
| ( लक्ष्मी+ईश्वर ) | लक्ष्मीश्वर. | ( तत् + मय ) | तन्मय. |
| ( गण + ईश ) | गणेश. | ( शम् + कर ) | शङ्कर. |
| ( राजा + इन्द्र ) | राजेन्द्र. | ( सम् + देह ) | सन्देह. |
| ( सूर्य +उदय ) | सूर्योदय. | ( अन + क ) | अङ्क. |
| ( महा +ऋषि ) | महर्षि. | ( घन् + टा ) | घण्टा. |
| ( सर्वथा+ एव ) | सर्वथैव. | ( सम् + सार ) | संसार. |
| ( सर्व+ओषधि ) | सर्वौषधि. | ( सम् + कृत ) | संस्कृत. |
| ( सु +आगत ) | स्वागत. | ( मनस् + रथ ) | मनोरथ. |
| ( यदि+अपि ) | यद्यपि. | ( अधस्+ मुख ) | अधोमुख. |
| ( प्रति+एक ) | प्रत्येक. | (अन्तर्+करण) | अन्तःकरण. |
| ( प्रति+उत्तर ) | प्रत्युत्तर. | ( निस् +धन ) | निर्धन. |
| ( इति + आदि ) | इत्यादि. | ( निर् +भय ) | निर्भय. |

टि. यी सन्धिका नियमहरू पनी वर्णविचारमा रह्नुपर्ने कुरा हुन्, तर ह्राम्रो भाषाका शब्दमा प्रायः सन्धि भएको स्पष्ट देखिंदैन, संस्कृतबाट आएका शब्दमा देखिए पनी संस्कृतैमा सन्धि भएर जो-

डिएका तयारी शब्द भाषामा चलेका हुन्; यसैले सो सन्धिका नियम संस्कृतबाट र भाषामा पनी पछि ठुला ग्रन्थबाट बुझिने हुनाले आवश्यक नभएका संज्ञी लेखिएका छैनन्.

प्रश्न :–

(१) वर्ण भनेको के हो ? वर्ण कति छन् ? स्वर व्यञ्जन अयोगवाह भनेका के के हुन् ?, ती कुन कस्ता छन् ? मात्रा भनेको के हो ? संयुक्त अक्षर भनेको के हो ? कस्ता वर्णको संयोग हुन्छ ? मात्राका चिन्ह कस्ता हुन्छन् ? स्थान भनेको के हो ? कुन वर्णको कुन स्थान हुन्छ ? ह्रस्व दीर्घ प्लुत अनुनासिक के के हुन् ?

(२) तल लेखेका शब्दमा कुन कुन स्वर व्यञ्जन मिली कुन अक्षर बनेका छन्, कुन अक्षरमा कस कसको संयोग भएको छ :–

' रामचन्द्र. कृष्ण. प्रद्युम्न. क्षत्रिय. ज्ञान. व्यर्थ. खुत्रुक. पुक्कुक. '

---

# II पदविचार ( Etymology )

## ३–पद ( Word )

२४. पदविचारमा पदका स्वरूप, भेद, रूपहरूको बयान हुन्छ.

२५. एक अक्षर वा अनेक अक्षर भएको अर्थ बुझाउने एकेक शब्दलाई **पद** ( Word ) भन्दछन्. जस्तै :–

' मं, तं, त्यो, उ, घर, पुस्तक, कालो, राम्रो, हुन्छ, गयो, गर्नेछन्, चांडै, तर, पनी, र, संग, ओहो, आहा. ' इ०

टि॰ शब्द भन्दा अवाज मात्र पनी बुझिने हुनाले वर्ण पद वाक्य सब शब्दस्वरूप हुन्छन्; यसैले यहां संम अवाजलाई लिएर

शब्दको व्यवहार भएको छ. तर शब्द भन्दा मुख्य गरी पदै बुझिने हुनाले शब्द वा पद भनेको एकै हुन्छ. अवदेखि पदको मतलब लिएर शब्द भन्ने व्यवहार गरिन्छ.

२६. पद आठ किसिमका हुन्छन् :–

**विकारी. Declinable.**

(१) नाम ( Noun ) अर्थात् कुनै मानिस वस्तुहरूको नाउं. जस्तै :–‘ बाबा. आमा. पुस्तक. लोभ. राम्रु ’ इ०

(२) सर्वनाम ( Pronoun ) अर्थात् नामको सट्टामा आउने शब्द. जस्तै :– ‘ मं. तं. त्यो. यो. उ. जो. को. ’ इ०

(३) विशेषण ( Adjective ) अर्थात् कुनै नाम पदार्थका केही गुण संख्याहरू बुझाउने शब्द. जस्तै :– ‘ राम्रो. असल. खराप. रातो. मीठो. दुष्ट. चार. एक. पहिलो. ’ इ०

(४) क्रियापद ( Verb ) अर्थात् केही क्रिया मुख्य गरी बुझाउने शब्द. जस्तै :– ‘हुन्छ. गयो. भन्नेछ. जा. ’ इ०

**अविकारी वा अव्यय. Indeclinable.**

(५) क्रियायोगी ( Adverb ) अर्थात् कुनै देश काल रीत आदि बुझाई क्रियापदहरूमा अन्वय हुने शब्द. जस्तै :– ‘ त्यहां. त्यता. तल. माथि. आज. हिजो. त्यसरी. ’ इ०

(६) नामयोगी ( Preposition ) अर्थात् कुनै नामहरू संग मिलेर तिनको अर्को शब्द संग सम्बन्ध गराउने शब्द. जस्तै :– ‘ संग. तिर. तर्फ. बाहेक. द्वारा. भन्दा. ’ इ०

(७) संयोजक ( Conjunction ) अर्थात् अनेक पद वा वाक्यलाई जोड्ने शब्द. जस्तै :– ‘ र. पनी. तर. किनकि ’ इ०

(८) विस्मयादिबोधक ( Interjection ) अर्थात् आश्चर्य हर्ष शोक सम्बोधन आदि मनको भाव बुझाउने शब्द. जस्तै :– ‘ ओहो. हा छिः थुः धत्. स्यावास्. क्यावात् ए.’ इ०

टि. यी आठ किसिमका शब्दमा नाम, सर्वनाम, विशेषण, क्रियापद यी पहिला चार थरी शब्द धेरै थरी आकारका भई रूप बदल्ने हुनाले विकारी अर्थात् रूप बदल्ने ( Declinable ) हुन्छन्; क्रियायोगी, नामयोगी, संयोजक, विस्मयादिबोधक यी दोस्रा चार थरी शब्द सँधै एकैनास भई रूप नबदल्ने हुनाले अविकारी वा अव्यय अर्थात् रूप नबदल्ने हुन्छन्. यसैले अविकारी चार थरीलाई 'अव्यय' ( Indeclinable ) भन्ने एकै शब्दले व्यवहार गरे 'नाम; सर्वनाम, विशेषण, क्रियापद, अव्यय' यस्ता पांच किसिमका पद हुन्छन्.

प्रश्न :–

(१) पद भनेको के हो ? पद कति किसिमका हुन्छन् ? पदका भेद कुन कुन हुन् ? कस्ता कस्ता शब्द कुन कुन भेदमा पर्दछन् ?

(२) तलका वाक्यमा परेका शब्द कुन कुन किसिमका पद हुन् :–

'म जान्छु. आज जाडो छ. त्यो राम्रो बलियो पनी देखिन्छ. रामुले हिजो ठुलो किताप हराए. तँ त्यहां वस्. पशुपतिनाथ रक्षागर्नु हुन्छ. चिठी लेखें, तर नराम्रो भयो. ओहो ! राम्रो रहेछ. ए ! बाबु यहां आऊ. तिमी गोपाल संग जाऊ.'



## ४–नाम ( Noun )

२७. कुनै पदार्थ ( वस्तु ) को नाउंलाई **नाम** वा **संज्ञा** ( Noun ) भन्दछन्. जस्तै :–

बाबु, पशुपति, पल्टन, काठमाण्डू, आंप, पुस्तक, सुन, पुण्य, हिंडाइ, बुढ्याइं. इत्यादि.

२८. नाम पांच किसिमका हुन्छन् :–

Concrete. / धर्मिबोधक.

(१) जातिवाचक–नाम. ( Common-noun )
(२) व्यक्तिवाचक–नाम. ( Proper–noun )
(३) समुदायवाचक-नाम. ( Collective-noun )
(४) द्रव्यवाचक–नाम. ( Material–noun )
(५) भाववाचक–नाम. ( Abstract–noun )

२९. त्यस जातका एक अनेक सबैलाई बुझाउन शक्ने नामलाई **जातिवाचक** वा **सामान्य-नाम** ( Common-noun ) भन्दछन्. जस्तै :–

मानिस, घोडा, चरा, पुस्तक, घर, टोपी, खाट, फूल, रुख. इत्यादि.

३०. त्यो नाउं भएको एउटालाई मात्र बुझाउने नामलाई **व्यक्तिवाचक** वा **विशेष-नाम** ( Proper-noun ) भन्दछन्. जस्तै :–

पशुपति, काठमाण्डू, नेपाल, गोपाल, राधा, रामे, बाघे. इ०

टि· १–सामान्यनामबाट केही जाति वा किसिम भन्ने अर्थ बुझिई त्यस जातका त्यस किसिमका सबै वस्तु बुझ्न शकिने हुन्छन्, विशेषनामबाट केही जाति किसिमहरू नबुझिई खालि त्यो शब्दले सङ्केत गरिएको कोही एक बुझिन्छ· त्यही नाउं गरेका धेरै भए पनी त्यो विशेषनाम जसलाई बुझाउन प्रयोग गरेको छ, सोही एउटाचाहीं मात्र बुझिने हुन्छ· यसैले ‘ बाघ, पुस्तक, मानिस ’

आदि सामान्यनामले एक जाति नियत गरेर बुझाउने हुनाले बाघलाई 'मानिस,' मानिसलाई 'बाघ' यस्तो एक जाति बुझाउने नामको बदलामा अर्को जाति बुझाउने नामको प्रयोग गर्न हुंदैन; 'रामे, काले, मोती' आदि विशेषनाम भने जसको जे राखे पनी हुने हुनाले सङ्केत अनुसार जुनसुकै एकलाई बुझाउन जुनसुकै पनी विशेषनाम प्रयोग गर्न शकिन्छ.

टि. २–त्यही नाउं गरेका अनेकलाई बुझाउंदा विशेषनाम पनी सामान्यनाम हुने हुन्छ. जस्तै :–

रामहरू ( दशरथका छोरा, बलराम, परशुराम ) पूज्य छन्.

३१. धेरै मानिस चीजहरूको समुदाय बुझाउने नामलाई **समुदायवाचक-नाम** ( Collective-noun ) भन्दछन्. जस्तै :–

**पल्टन, फौज, बथान, राश, धुप्रो, जमात, पञ्च. इत्यादि.**

टि. १–धेरै समुदाय बुझाउने भएमा समुदायवाचक पनी सामान्यनाम हुने हुन्छ. जस्तै :–
दश पैल्टन छन्. भेडाका बथान छन्. धानका थुप्रा शकिए.

टि. २–कहीं समुदायवाचक शब्द समुदाय भित्रका व्यक्ति बुझाउने भएमा समुदित-वाचक ( Noun of multitude ) सामान्यनाम हुने हुन्छ. जस्तै :–
पञ्चले ( पञ्च भित्रका मानिसले ) बोले. पल्टनले ( पल्टनका मानिसले ) बाटो खने.

३२. कुनै द्रव्य अर्थात् प्रकृति पदार्थ बुझाउने नामलाई द्रव्य-

वाचक वा पदार्थवाचक ( Material-noun ) भन्दछन्. जस्तै :—

सुन, चांदी, फलाम, तेल, पानी, माटो, काठ, धातु, गहुं. इ०

टि. १—कोही वस्तु संख्येय ( Numerable ) अर्थात् व्यक्ति छुट्टिई गिन्ति हुने, कोही परिमेय ( Measurable ) अर्थात् व्यक्ति नछुट्टिने भएर गिन्ति नभई नाप तौल हुने हुन्छन्. संख्येय वस्तु बुझाउने ' मानिस, घोडा, घर ' आदि सामान्यनाम धेरैलाई वा एउटा सिङ्गोलाई, ' सेते, रामु ' आदि विशेषनाम एउटा सिङ्गोलाई, ' जमात, पल्टन ' आदि समुदायवाचक सिङ्गाको समूहलाई बुझाउंछन् ; टुक्रालाई बुझाउन शक्तैनन्. परिमेय वस्तु बुझाउने ' पानी, सुन, तेल ' आदि द्रव्यवाचक भने सबैलाई वा जतिसुकै सानो अंशलाई पनी बुझाउंन शक्छन्. जुन वस्तुबाट धेरै किसिमका विशेष वस्तु बन्दछन्, यस्ता ' सुन, चांदी, काठ, फलाम ' आदि पदार्थ परिमेय र प्रकृति पनी हुन्छन्, यस्तालाई बुझाउने शब्द पदार्थवाचक हुन्छन्.

टि. २—कोही एकै नाम पनी अर्थको अनुसार कहीं सामान्य वस्तु मात्र बुझाई द्रव्यवाचक, कहीं विशेष वस्तु बुझाई सामान्य नाम हुने हुन्छ. जस्तै :—

द्रव्यवाचक—गहुं ( गहुं अन्न ) खाइन्छ.

सामान्यनाम-गहुं ( गहुंको बोट ) हरियै छ.

३३. कुनै पदार्थमा रहने केही गुण, काम, अवस्था आदि धर्म मात्र बुझाउने नामलाई **भाववाचक-नाम** (Abstract-noun ) भन्दछन्. जस्तै :—

गुण—रीस, सुख, दुःख, धैर्य, विद्या, ज्ञान, भाग्य. इ०

काम-चाकरी, कालीगर्दा, दौड, बोलाइ, हिंडाइ, जान्नु, भन्नु. ”

अवस्था-जवानी, बुढ्यांइ, आरोग्य, बाल्य, उठान, आखिर. ”

टि. १–अरू चार किसिमका नामबाट कोही धर्मवाला वस्तु बुझिन्छन्, त्यसले ती धर्मिवाचक (Concrete) हुन्छन्. भाववाचकनामबाट भने धर्मवाला वस्तु बुझिंदैनन्, खाली कुनै पदार्थमा मिलेरै रही अलग्ग नरहने भई मनले मात्र अलग्ग गरेर बुझाउनुपर्ने कुनै गुण आदि धर्म मात्र बुझिन्छन्, त्यसले ती धर्मवाचक (Abstract-noun) हुन्छन्.

टि. २–भाववाचक नाम मुख्य यसरी बनेका हुन्छन् :–

(क) विशेषणबाट बनेका—बुद्धिमानी, इमानदारी, बुढ्यांइ. इ०

(ख) नामबाट बनेका——मित्रता, चाकरी, अमीरपना. ”

(ग) धातुबाट बनेका——हिंड्नु, जान्नु, हिंडाइ, बसाइ. ”

टि. ३–भाववाचकनाम पनी कहीं सो धर्म अनेक किसिमका धेरै तुल्याई बुझाउने भएमा सामान्यनाम हुने हुन्छ. जस्तै :– मलाई धेरै दुःख एकैचोटि परिआए. यिनले धेरै गुन लाएका छन्. विद्या कैयन् थरीका हुन्छन्.

३४. कहीं एकै वस्तु बुझाउने गरी अनेकनाम एकै विभक्तिमा प्रयोग हुने पनी हुन्छन्, त्यस्तालाई **समानाधिकरण** (Apposition) नाम भन्दछन्.

देवदत्त उपाध्यायको, धैर्य गुण, ज्योतिष विद्यामा. इ०

टि. कहीं अरू किसिमका शब्दहरू पनी नामको जस्तो काम दिने गरी प्रयोग भएका हुन्छन्, त्यस्तालाई **नामस्थानिक** ( Substitute of a noun ) भन्दछन्. यी यस्ता हुन्छन् :–
सर्वनाम–किताप मध्ये त्यो ( किताप ) राम्रो छ.
विशेषण–लाटाहरू ( मानिस ) एकोहरा हुन्छन्.
वाक्यांश–विद्वान्ले क्षुद्र कुरा गर्नु बेस हुंदैन.
वाक्य–—त्यो के खान्छ ( त्यसले खाने कुरा ) म जान्दिनं.

प्रश्न :–

(१) नाम भनेको के हो ? नाम कति किसिमका हुन्छन् ? सामान्यनाम, विशेषनाम, भाववाचकनाम, समुदायवाचकनाम, द्रव्यवाचकनाम भनेका के के हुन् ? कस्ता कस्ता नामबाट के के अर्थ बुझिन्छन् ? समानाधिकरण भनेको के हो ? ( विशेषनाम, भाववाचक, समुदायवाचक, द्रव्यवाचकनाम कस्ता कस्तामा सामान्यनाम हुन्छन् ? भाववाचक नाम कसरी बन्दछन् ? नामस्थानिक के के हुन्छन् ? )

(२) तल लेखेका वाक्यमा कुन नाम शब्द कस्ता हुन् ? :–
कलम राम्रो छ. कर्मी मन लाएर काठ काट्तछ. बुधे र सेते भांडा माझ्दछन् ? धेरै काम एकदम गर्नु थकाइ पैदा गर्दछ. आलस्य गर्नेले इलम बढाउन शक्तैन. काठमाण्डू नेपालको राजधानी हो. रिसाउनु ठीक छैन. पल्टनले कबाज खेल्यो. कपासका राशमा नबस. धानको डंगुर त्यसै छ.



## ५—रूपभेद. ( Inflection )

३५. लिङ्ग, वचन, विभक्तिहरूका भेदले एकै शब्दका पनी धेरै थरी रूप बन्दछन.

(१) **लिङ्ग** ( Gender ) अर्थात् पुरुष जाति, वा स्त्री जाति, वा निर्जीव वस्तु बुझाउने स्वरूप; जस्तै :—
छोरो गयो. छोरी गई. घर बन्यो. इत्यादि.

(२) **वचन** ( Number ) अर्थात् एक वा अनेक वस्तु बुझाउने स्वरूप; जस्तै :—
छोरो गयो. छोरीहरू आए. छोरी गई. छोरीहरू गए. इ०

(३) **विभक्ति** ( Case-ending ) अर्थात् त्यस पदको अर्को पद संग सम्बन्ध बुझाउने स्वरूप; जस्तै :—
छोरो गयो. छोराले गर्‍यो. छोरालाई डाक. छोराको टोपी. छोराकी छोरी. इत्यादि.

३६. प्रकृति अर्थात् सामान्य शब्दमा केही फेरफार घट बढ भई वा नभई बनेर प्रयोग हुने शब्दको स्वरूपलाई रूप ( Inflection ) भन्दछन.

३७. रूपमा कहीं केही विकार भएको कहीं उस्तै रहेको

प्रकृति शब्दको भागजतिलाई **सामान्यरूप** ( Base ) भन्दछन्.

३८. रूपमा शब्दको सामान्यरूप संग थपिएर जोडिएका वर्णलाई **प्रत्यय** ( Suffix ) भन्दछन्. जस्तै :–

| प्रकृति. | सा०रूप. | प्रत्यय. | रूप. |
|---|---|---|---|
| मानिस– | मानिस + | ले लाई इ० | मानिस, मानिसले इ० |
| छोरो— | छोरा + | ” ” इ० | छोरो, छोराले, छोरालाई ” |
| खानु— | खाना + | ” ” इ० | खानु, खानालाई ” |

३९. ती प्रत्यय धेरै किसिमका हुन्छन् :–

(१) **स्त्रीप्रत्यय**-स्त्रीलिङ्ग शब्द बनाउंदा हुने **इनी, नी** इ०

(२) **वचनप्रत्यय**-अनेक वचन बनाउंदा हुने **हरू.**

(३) **विभक्तिप्रत्यय**-पदको सम्बन्ध बुझाउंदाहुने **ले, लाई**”

टि. धातु ( क्रियापदका मूल शब्द ) बाट क्रियापद बनाउंदा हुने उ, औं आदि तिङ्प्रत्यय, तिनैबाट कृदन्त शब्द बनाउंदा हुने नु, ने, एको आदि कृत्प्रत्यय, नामहरूबाट तद्धितान्त शब्द बनाउंदा हुने आइ, यांइ आदि तद्धितप्रत्यय, यस्ता अरू किसिमका पनी प्रत्यय हुन्छन्, सो पछि ठाउं ठाउंमा लेखिनेछन्.

४०. नाममा झैं सर्वनाम विशेषण क्रियापद यी अरू विकारी ( रूप बदलने ) शब्दमा पनी सामान्यरूप, प्रत्यय, रूपहरू हुन्छन्.

२१. तिनमा रूप बदल्ने कुराका सामान्य नियम यस्ता छन् :–

(१) नाममा र सर्वनाममा लिङ्ग, वचन, विभक्तिका भेदले सामान्यरूप प्रत्ययहरू भएर रूप बदलिन्छन्.

(२) विशेषणमा कहीं लिङ्ग वचनका भेदले सामान्यरूप प्रत्ययहरू भएर रूप बदलिन्छन्.

(३) क्रियापदमा धातुमा लिङ्ग, वचन र पछि लेखिने वाच्य, पुरुष, काल, अर्थ, करण, अकरणहरूका भेदले सामान्यरूप प्रत्ययहरू भएर रूप बदलिन्छन्.

जस्तै :–

| प्रकृति | | रूप |
|---|---|---|
| नाम | छोरो | छोरो, छोराले, छोरालाई, छोरीहरूको. इ० |
| सर्व | त्यो | त्यो, त्यसले, तिनी, तिनीहरूलाई. ” |
| विशे | कालो | कालो, काली, काला. ” |
| क्रिया | गर् | गर्छु, गर्दिनं, गरिन्छ, गर, गरोस्. ” |

प्रश्न :–

(१) रूप, सामान्यरूप, प्रत्यय भनेका के के हुन् ? लिङ्ग, वचन, विभक्ति भनेका के के हुन ? प्रत्यय कति किसिमका हुन्छन् ? रूप के कले बदलिन्छन् ? स्त्रीप्रत्यय, वचनप्रत्यय, विभक्तिप्रत्यय भनेका के के हुन् ?

(२) तल लेखेका नाम शब्दका प्रकृति, सामान्यरूप, प्रत्यय, रूप छुट्याउ :–

छोराको, बाहुनहरूलाई, छोरीहरूको, जानाले, पुस्तकहरू, घरबाट, लठ्ठीले, विद्यार्थीहरूलाई, पाठशालामा, गुरुहरूदेखि, दिदीहरूलाई, बाहुनीहरूले, पढ्नामा, खानाको, बोकालाई.

## ६–लिङ्ग ( Gender )

४१. पुरुष जाति, वा स्त्री जाति, वा निर्जीव वस्तु बुझाउने शब्दको रूपलाई **लिङ्ग** ( Gender ) भन्दछन्.

४२. लिङ्ग तीन किसिमका हुन्छन् :–

(१) पुंलिङ्ग. ( Masculine-gender )
(२) स्त्रीलिङ्ग. ( Feminine-gender )
(३) नपुंसकलिङ्ग. ( Neuter-gender )

४३. पुरुष जाति बुझाउने शब्द **पुंलिङ्ग**, स्त्री जाति बुझाउने शब्द **स्त्रीलिङ्ग**, पुरुष-स्त्री-जातिदेखि भिन्न वस्तु बुझाउने शब्द **नपुंसकलिङ्ग** हुन्छन्. जस्तै :–

पुं०—बाबु, राजा, छोरो, घोडा, गोपाल, परेवा. इ०
स्त्री०—आमा, रानी, छोरी, घोडी, राधा, परेवी. ”
नपुं०—घर, पुस्तक, रुख, फूल, सहर, गोरखा. ”

टि.–द्रव्यवाचक, समुदायवाचक, भाववाचकनाम पुरुष–स्त्री–जाति भिन्नलाई नै बुझाउने हुनाले नपुंसकलिङ्गै हुन्छन्, सामान्यनाम, विशेषनाम भने पुरुष वा स्त्री वा भिन्न जस्ताका बोधक छन्, उस्तै लिङ्ग हुन्छन्.

४४. कोही शब्द पुरुष स्त्री दुवै थरीलाई एकैनास संग बुझा-

उने हुन्छन्, त्यस्ता शब्द सामान्यलिङ्ग वा उभयलिङ्ग (Common-gender) हुन्छन्. जस्तै :–
मानिस, मान्छे, चरो, कीरा, जनावर, दोपाया, देवता, कवि, इ०

टि. १–पुरुष, स्त्री दुवैलाई बुझाउंदा एकै हुने शब्दमा, पुरुष स्त्री नछुट्टिने क्षुद्र जीव बुझ्काउंने शब्दमा र, विशेष लिङ्ग हुने शब्दमा जाति मात्र बुझ्काउंदा पनी प्रायः सामान्यलिङ्ग हुन्छ. जस्तै :–
दुवैमा एकै हुने— मानिस ज्ञानी हुन्छ. चरा उड्दछ.
क्षुद्र जीव बुझ्काउंने– झिङ्गाले थाउ बिगार्छ. कमिलाले चिल्छ.
जाति बुझ्काउंने— कुकुर स्वामिभक्त हुन्छ. वानर चञ्चल हुन्छ.

टि–२–सामान्यलिङ्ग हुने शब्दमा पनी कहीं पुरुष वा स्त्री एक थरीमात्र छुट्टिई बुझिने भएमा उहीचाहीं लिङ्ग मान्नुपर्दछ. जस्तैः–
मानिस (पुं) देखियो. मानिस (स्त्री) देखिई.

४५. पुंलिङ्ग स्त्रीलिङ्ग शब्द तीन किसिम संग छुट्टिने हुन्छन् :-

४६. पहिलो क़िसिम :–

कोही पुंलिङ्ग स्त्रीलिङ्ग शब्द स्वतन्त्र अर्थात् पुंलिङ्ग शब्दबाट स्त्रीप्रत्यय भई स्त्रीलिङ्ग शब्द न बनेका हुंदा दुवै लिङ्गका भिन्न भिन्न शब्द हुन्छन्. जस्तै :–

| पुं० स्त्री० | पुं० स्त्री० | पुं० स्त्री० |
|---|---|---|
| बाबु–आमा. | लोग्ने–स्वास्नी. | गोरु–गाई. |
| मामा-माइज्यू. | भाले–पोथी. | मत्ता–ढोई. |
| दाज्यू-भाउज्यू. | झांक–मुडुली. | राङो-भैंसी. |

भाइ—बुहारी. ज्वुर्रा—साही. बोको-बाख्री.
शशुरा-शाशू. वीर—भुनी. भाजू—मैजू. इ०

४७. दोस्रो किसिम :—

कोही पुंलिङ्ग शब्दबाट ' इनी, एनी, ई, नी ' आदि स्त्रीप्रत्यय भई स्त्रीलिङ्ग शब्द बनेका हुन्छन्. जस्तै :—

| पुं० | स्त्री० | पुं० | स्त्री० | पुं० | स्त्री० |
|---|---|---|---|---|---|
| काका | काकी. | बिष्ट | बिष्टिनी. | नाति | नातिनी. |
| छोरो | छोरी. | सुब्बा | सुब्बेनी. | नेपाल | नेपाल्नी. इ० |

४८. ती स्त्रीप्रत्यय हुने सामान्य नियम यस्ता छन् :—

(१) दुइ स्वर हुने अकारान्त र जात पदवी बुझाउने आकारान्त, सबै एकारान्त शब्दमा अन्त्य स्वर ( अ, आ ) को बदला प्रायः **इनी** र **एनी** पनी हुन्छन्. जस्तै :—

अ—बिष्ट —बिष्टिनी, बिष्टेनी. वैद्य——वैद्यिनी, वैद्येनी.
मिश्र —मिश्रिनी, मिश्रेनी. खस —खसिनी, खसेनी.
पन्त —पन्तिनी, पन्तेनी. भट्ट —भट्टिनी, भट्टेनी.
मीत —मीतिनी, मीतेनी. भूत —भूतिनी, भूतेनी. इ०

आ—सुब्बा— सुब्बिनी, सुब्बेनी. डिठ्ठा—डिठ्ठिनी, डिठ्ठेनी.
छिपा — छिपिनी, छिपेनी. हुद्दा — हुद्दिनी, हुद्देनी. इ०

ए— भोटे — भोटिनी, भोटेनी. च्यामे— च्यामिनी, च्यामेनी.

---

( १ ) वर्णमा ' कार ' शब्द जोडी ' अकार, ककार ' इत्यादि व्यवहार गरेमा सो-ही वर्ण बुझिन्छ. र वर्णमा भने ' कार ' शब्द जोडिंदैन, रेफ शब्दको व्यवहार हुन्छ.

दाउरे – दाउरिनी, दाउरेनी.  भंडारे – भंडारिनी, भडारेनी ( र्नी ).
माह्रुते – माह्रुतिनी, माह्रुतेनी.  कुमाले - कुमालिनी, कुमालेनी  इ०

(२) दुइ भन्दा बढ्ता स्वर हुने अकारान्त र प्रायः मनुष्यको जात पदवी बुझाउने आकारान्त शब्दमा अन्त्य स्वर ( अ, आ ) को बदला प्रायः नी, 'इया' अन्त्यमा हुने शब्दमा प्रायः 'या' को बदला नी वा 'इया' को बदला एनी हुन्छ.  जस्तै :–

अ – जनरल — जनरल्नी  महाजन — महाजन्नी.
पण्डित — पण्डिन्नी  कालीगड — कालीगड्नी.
चौतार — चौतार्नी  सरदार — सरदार्नी.
नेवार — नेवार्नी.  अर्ज्याल — अर्ज्याल्नी.
मालिक — मालिक्नी.  खंदाल — खंदाल्नी. इ०

आ – ढुंगाना — ढुंगान्नी.  सापकोटा — सापकोट्नी.
बोहोरा — बोहोर्नी.  कोइराला — कोइराल्नी.
खतिवाडा - खतिवाड्नी.  तिमल्सिना - तिमल्सिन्नी.  इ०

या – मुखिया — मुखिनी, मुखेनी.  पूर्विया — पूर्विनी, पूर्वेनी.
बजिया — बजिनी, बजेनी.  जडिया — जडिनी, जडेनी.  इ०

(३) अरू ( मनुष्यको जात पदवी न बुझाउने ) आकारान्त र सबै ओकारान्त शब्दमा अन्त्य स्वर ( आ, ओ ) को बदला प्रायः ई हुन्छ.  जस्तै :–

अ – काका – काकी.  परेवा – परेवी.  सुघा — सुघी.
भांजा – भांजी.  जलेवा – जलेवी.  भंडेरा — भंडेरी.
घोडा – घोडी.  चखेवा – चखेवी.  कछुवा — कछुवी  इ०

ओ–छोरो— छोरी. शालो—शाली. कमारो—कमारी.
केटो— केटी. बाछो—बाछी. च्याङ्ग्रो– च्याङ्ग्री.
पाठो— पाठी. भेळो—भेळी. पाळो— पाळी. इ०

(४) अरू स्वर ( इ, ई, उ, ऊ, औ ) अन्त्य हुने शब्दमा परतिर नी हुन्छ, शब्दको अन्त्य स्वर ई ऊ भए तिनको बदला इ उ पनी हुन्छन्. जस्तै :–

इ– नाति—नातिनी. ज्यामि- ज्यामिनी. दमाइ–दमाइनी,(दमिनी)
क्षत्रि— क्षत्रिनी. घर्ति—घर्तिनी. उप्रेति—-उप्रेतिनी. इ०

ई– माली—मालिनी. संधी– संधिनी. ठकुरी—ठकुरिनी(नीं)·
योगी— योगिनी. साल्मी–साल्मिनी. अधिकारी-अधिकारिनी(नीं).
धोबी— धोबिनी. सिपाही-सिपाहिनी. विचारी–विचारिनी(नीं). इ०

उ– ज्यापु—ज्यापुनी. साहु— साहुनी. नाउ-नाउनी(नगिनी,नैनी). इ०

ऊ– कुलू— कुलुनी. गुभाजू– गुभाजुनी. बौभाजू– बौभाजुनी. इ०

औ- कौ— कौनी. गुरौ— गुरौनी. इ०

(५) ओकारान्त बाहेक दुइ स्वरहुने शब्दमा पहिलो स्वर आ भए त्यको बदला प्रायः अ पनी भई माथिका नियम बमोजिम प्रत्यय हुन्छन्. जस्तै :–

बाघ—बघि(घे)नी. थापा–थपि(पे)नी. काजी–कजिनी.
भाट—भटि(टे)नी. बांडा–बंडि(डे)नी, सार्की–सर्किनी.
जाड—जडि(डे)नी. पांडे–पंडि(डे)नी. थारु–थरुनी.
भांण–भंणि(णे)नी. पाखे–पखि(खे)नी. कामी–कमिनी.
लामा–लमि(मे)नी. कांठे–कंठि(ठे)नी. हात्ती–हत्तिनी.
राना—रनि(ने)नी. थाक्से-थक्सि(क्से)नी. माझी–मझिनी. इ०

(६) कुनै शब्दमा विशेष किसिम संग प्रत्यय हुने पनी हुन्छन्. जस्तै :—

राजा—रानी. बाहुन—बाहुनी. महाराज—महारानी.
बाज्ये—बज्यै. बाउन्ने—बाउन्नी. गुरुङ— गुरुङसेनी.
भदो—भदै. गुरु——गुरुमा. बांधा— बंधिति(ते)नी.
चोर—चोर्नी. देवर—देवरानी. मरहट्ट—मरहट्टिनी.
द्वारे—द्वार्नी. दोरङ्गा—दोरङ्गिनी. महन्त— महान्तिनी. इ०

टि—पुंलिङ्ग विशेषनामबाट स्त्रीप्रत्यय भएर स्त्रीलिङ्ग शब्द बन्दैनन्. सामान्यनाममा पनी सबै पुंलिङ्ग शब्दबाट स्त्रीप्रत्यय भएर स्त्रीलिङ्ग शब्द बन्ने नियम छैन, व्यवहार अनुसार मात्र बन्दछन्. अरु नपुंसक लिङ्ग हुने द्रव्यवाचक, समुदायवाचक, भाववाचक नाममा कहीं पनी स्त्रीप्रत्यय हुंदैन.

४९. तेस्रो किसिम :—

कोही शब्द अर्को पद संग जोडिएर पुंलिङ्ग स्त्रीलिङ्ग छुट्टिने हुन्छन. जस्तै :—

| पुं० | स्त्री० |
|---|---|
| लोग्ने मानिस वा मान्छे, | स्वास्नी मानिस वा मान्छे. |
| पुरुष देवता वा कवि, | स्त्री देवता वा कवि. |
| भाले थारल वा चौघडा, | पोथी थारल वा चौघडा. |
| झांक वा भाले मृग, | मुडुली वा पोथी मृग. |
| जुर्रा वा भाले बाज, | साही वा पोथी बाज. |
| वीर वनेल, | भुनी वनेल. इत्यादि. |

टि–यो तेस्रो रीत प्रायः सामान्यलिङ्ग हुने शब्दमा, कहीं स्त्रीप्रत्यय गरेर व्यवहार हुने शब्दमा पनी चलन अनुसार हुन्छ. जस्तै :– भाले कमिला–पोथी कमिला. भञ्ेरा–भङ्ेरी, वा भाले भङ्ेरा–पोथी भङ्ेरा. परेवा–परेवी, वा भाले परेवा–पोथी परेवा.

५०. संस्कृत आदि अरू भाषावाट आएका शब्दमा उहां जुनसुकै लिङ्ग भए पनी हाम्रो भाषामा पुरुष वा स्त्री वा भिन्न जस्ताको बोधक छ उही अनुसार लिङ्ग हुन्छ. जस्तै :–

| | संस्कृतबाट. | अंग्रेजीबाट. | उर्दूबाट. |
|---|---|---|---|
| पुं० – | पति, राम, मित्र. | जनरल. | नवाब. |
| स्त्री०- | पत्नी, सीता, कुमारी. | लेडी. | बेगम. |
| नपुं०- | इच्छा, लोभ, धन. | इञ्जन, कोट. | ज्यान, तारीफ |

प्रश्न :–

( १ ) लिङ्ग भनेको के के ? लिङ्ग कति किसिमका हुन्छन् ? कस्ता शब्दमा कस्तो लिङ्ग हुन्छ ? पुंलिङ्ग स्त्रीलिङ्ग शब्द कसरी छुट्टिन्छन् ? स्त्रीप्रत्यय हुने नियम कस्ता छन् ? कस्ता शब्दमा कस्तो शब्द थपेर लिङ्ग छुट्याइन्छ ? अरू भाषावाट आएका शब्दमा कस्तो लिङ्ग हुन्छ ?

( २ ) तल लेखेका शब्द कुन लिङ्गका हुन् ? स्त्रीलिङ्गचाहींको पुंलिङ्ग शब्द, पुंलिङ्गचाहींको स्त्रीलिङ्ग शब्द कस्तो हुन्छ ? :–

राजा, गुरुमा, मूर्ति, किताप, सर्किनी, ओझिनी, अज्र्याल, तेवानीं, कुकुर, कमिला, मामा, कमारी, ईश्वर, रुख, भङ्ेरी, थपलिया, भाइ, पनाति, बनेल, माछा.

## ७—वचन. ( Number )

५१. एक वा अनेक पदार्थ बुझाउने शब्दको स्वरूपलाई वचन ( Number ) भन्दछन्.

५२. वचन दुइ किसिमका हुन्छन् :—

( १ ) एकवचन. ( Singular )

( २ ) अनेक(बहु)वचन. ( Plural )

५३. एक पदार्थ बुझाउंदा शब्द **एकवचन**, अनेक पदार्थ बुझाउंदा शब्द **अनेकवचन** हुन्छ. जस्तै :—

एक०— छोरो, केटी, मानिस, घर. इ०

अनेक०- छोराहरू, केटीहरू, मानिसहरू, घरहरू. ”

(क) सामान्यनामशब्द यावत् जाति बुझाउंदा प्रायः एकवचन अनेकवचन दुवै हुन्छन्. जस्तै :—

एक०—मानिस ज्ञानी हुन्छ. वानर उफ्रन्छ. काग भन्दा कोइली बाठो हुन्छ. बाघले मृगलाई खान्छ. इत्यादि

अनेक०-मानिसहरू ज्ञानी हुन्छन्. वानरहरू उफ्रन्छन्. कागहरू भन्दा कोइलीहरू बाठा हुन्छन्. बाघहरू मृगहरूलाई खान्छन्. इत्यादि

(ख) निर्जीवबोधक सामान्यनाममा धेरै वस्तु बुझिए पनी

त्यति वस्तुको समुदाय बुझाउने तात्पर्यले एकवचन पनी हुन्छ. जस्तै :—

त्यहां धेरै माल छ वा छन्. म संग दश रुपियां छ वा छन्. कैयन् ठुलो सहर देखियो वा ठुला सहर देखिए. इ०

(ग) विशेषनाम, समुदायवाचक, द्रव्यवाचक, भाववाचक नाममा प्रायः एकवचनै हुन्छ. जस्तै :—

नेपाल राम्रो छ. रामे गयो. हजार जनाको जमात देखियो. पानी पोखियो. विद्या उपयोगी छ. भाग्य बेस छ. इ०

टि–विशेषनाम, समुदायवाचक, द्रव्यवाचक, भाववाचक नाम पनी अघि लेखे बमोजीम धेरैलाई बुझाई सामान्यनाम भएमा भने अनेकवचन हुन्छन्. जस्तै :—
रामहरू पूज्य छन्. दश पल्टन खटिए. हजार हजार जनाका जमात छन्. म संग किसिम किसिमका सुनहरू छन्. पञ्च बोल्दछन्. इलम धेरै थरी हुन्छन्. यस पाला धेरै दुःख परि आए.

(घ) कोही मनुष्य देवता आदिलाई कहने सामान्यनाम विशेषनाममा एउटालाई भन्दा पनी मानको तात्पर्यले अनेकवचन हुन्छ. यस्तो एक व्यक्तिको आदर बुझाउने अनेकवचनलाई **आदरार्थी** (Honorific-Plural) भन्दछन्, अनेक व्यक्ति नै बुझाउने अनेकवचनलाई **अनेकार्थी** भनि छुट्याउनुपर्दछ. जस्तै :—

आदरार्थी०–गोपाल गए. पार्वती आइन्. एक भलादमी भे-

टिए. इन्द्र स्वर्गका राजा हुन्. चन्द्र उदाए. इत्यादि

अनेकार्थी०-छोराहरू गए. देवताहरू पूज्य हुन्. मानिसहरू गए. छोरीहरूले पकाए. इत्यादि

टि. हाम्रो भाषामा कम श्रेणीका नोकर चाकर आदि मनुष्य र अरू प्राणी अप्राणीलाई भन्दा एक भए एकवचनको प्रयोग हुन्छ, मध्यम श्रेणी संमका मनुष्य र देवताहरूलाई भन्दा त एक भए पनी प्रायः आदरको तात्पर्यले आदरार्थी अनेकवचनैको प्रयोग हुन्छ. अनेक व्यक्ति बुझाउंदा भने सबैमा अनेकार्थी अनेकवचनको प्रयोग हुन्छ. उत्तम श्रेणीका मनुष्य देवताहरूलाई भन्दा पछि लेखिने बमोजिम मानबोधक क्रियापदहरूको पनी प्रयोग हुन्छ.

५४. ओकारान्त शब्दको अनेकार्थी आदरार्थी दुवै थरी अनेकवचनमा आकारान्त सामान्यरूप हुन्छ, अरू किसिमका नामहरूमा वचनको भेदले सामान्यरूप फरक पर्दैन. जस्तै :-

एक०—छोरो, केटो, छोरी, घर, मानिस, बोको. इ०

अनेक०—छोरा, केटा, छोरी, घर, मानिस, बोका. ”

५५. अनेकार्थीचाहीं अनेकवचनमा शब्दको सामान्यरूप पछाडि विकल्पले हरू प्रत्यय हुन्छ, अर्थात् ‘हरू’ जोडे पनी न जोडे पनी हुन्छ. जस्तै :-

छोरा, छोराहरू, केटा, केटाहरू. मानिस, मानिसहरू. इ०

टि. ‘हरू’ प्रत्यय सबैमा विकल्पले हुने भए पनी अरू शब्दहरूबाट अनेकार्थी हो भनि छुट्टिने भएमा ‘हरू’ नजोडे पनी हुन्छ,

स्पष्ट गर्न जोडे पनी हुन्छ; नछुट्टिने भएमा भने सो बुझाउने 'हरू' प्रत्यय जोडेरै प्रयोग गर्नु उचित हुन्छ.

(क) कहीं इत्यादि भन्ने अर्थमा सबै किसिमका नामहरूमा एक अनेक दुबै वचनमा बेगलै किसिमको 'हरू' शब्द जोडिन्छ, यस्तो 'हरू' शब्दबाट त्यस किसिमका अरू पनी बुझिन्छन्; यसलाई **प्रकारार्थी**-हरू-शब्द भन्दछन्. जस्तै:-

गोपालहरू ( गोपाल गोविन्द आदि विद्यार्थी ) गए. छोराहरू ( छोरा छोरीहरू ) सुते. गाईहरू ( गाई भैंसीहरू ) कति छन् ? संन्यासीहरू ( संन्यासी कनफट्टा आदि योगी ) छन्. पुस्तकहरू ( पुस्तक कलम आदि ) कहां छ ? सुनहरू ( सुन चांदी आदि ) किनियो. यसको गुणहरू ( गुण दोष आदि ) भन. इत्यादि.

टि. १. 'हरू' शब्द अनेकार्थी प्रकारार्थी दुबै थरी हुने हुनाले अनेकार्थी नहुने शब्दमा र हुनेमा पनी त्यस किसिमका अरू चीज समेत बुझिने ठाउंमा देखिएको 'हरू' शब्द प्रकारार्थी हो, अनेकार्थी हुने शब्दमा उही चीज धेरै बुझिने ठाउंमा देखिएको 'हरू' शब्द अनेकार्थी हो भनि छुट्याउनुपर्दछ. जस्तै:—

अनेकार्थी–संन्यासीहरू ( धेरै संन्यासी ) छन्. गाईहरू ( धेरै गाई ) बिहाए. परेवाहरू ( धेरै परेवा ) उडे. इ०

प्रकारार्थी–संन्यासीहरू ( संन्यासी कनफट्टा आदि ) छन्. गाईहरू ( गाई भैंसीहरू ) बिहाए. गोपालहरू ( गोपाल गोविन्द आदि ) आए. घ्यूहरू ( घ्यू तेलआदि ) सकियो. इ०

टि. २. पूकारार्थी 'हरू' जोडिएमा धेरै वस्तु बुझिने र एक अनेक दुवै थरी वचन हुन शक्ने भए पनी मनुष्य अरू प्राणी आदि संख्येय वस्तु बुझाउने शब्दमा प्रायः अनेक व्यक्ति बुझाउने गरी अनेकवचनको प्रयोग, निर्जीव परिमेय वस्तु बुझाउने शब्दमा समुदायको तात्पर्यले एकवचनको, कहीं अनेक व्यक्तिको तात्पर्यले अनेकवचनको पनी प्रयोग हुन्छ. पूकारार्थी 'हरू' शब्द जोडेमा अनेकवचन भए पनी फेरी अनेकार्थी अर्को 'हरू' शब्द भने जोडिंदैन. जस्तैः–

एक-व०–पुस्तकहरू हरायो. घ्यूहरु सकियो. लोभहरू बेस छैन.

अने-व०–गाईहरू बिहाए. गोपालहरू गए. पुस्तकहरू हराए.

टि. ३. अनेकार्थीमा झैं पूकारार्थीमा पनी धेरै नाम संग प्रयोग गरेर पछिल्लो शब्दमा 'हरू' जोडेर प्रयोग गर्न पनी हुन्छ. जस्तैः– गाई भैंसीहरू कति छन् ? सुन चांदीहरू किनियो. गोपाल गोविन्दहरू गए. विद्या धैर्य विवेकहरू चाहिन्छ.

प्रश्न :–

( १ ) वचन भनेको के हो ? वचन कति किसिमका हुन्छन् ? कस्ता कस्तामा कस्ता कस्ता वचन हुन्छन् ? आदरार्थी अनेकार्थी भनेका के के हुन् ? वचनको भेदले सामान्यरूप कहां फरक हुन्छ ? आदरार्थीको प्रयोग कस्तामा हुन्छ ? 'हरू' शब्द कहां जोडिन्छ ? पूकारार्थी भनेको के हो ? पूकारार्थीमा कुन वचन हुन्छ ?

( २ ) तल लेखेका वाक्यमा परेका नाम शब्दको वचन छुट्याऊ, 'हरू' शब्द भएकामा अनेकार्थी पूकारार्थी पनी छुट्याऊ :–

कमाराहरू गए. चोर भाग्यो. बाबाहरू कहां हुनुहुन्छ ? ढुंडिखे

लमा धेरै भेडाका बथान छन्. छाताहरू कहां छ ? खले पिछे धानका थुप्रा छन्. रामेहरू गए. गोविन्द गएनन्. रीसहरू गर्नु हुंदैन. भालुले चियोर्दछ. पञ्चले निसाप बोल्दछ. पञ्चले भन्नन्.



## ८—विभक्ति ( Case-endings )

५६. वाक्यमा एक शब्दको अर्को शब्द संग सम्बन्ध बुझाउन नामहरूमा जोडिने 'ले, लाई' आदि प्रत्ययलाई विभक्ति ( Case-endings ) भन्दछन्. जस्तै :—

'रामुले खायो. छोरालाई डाक. महाराजबाट गरिबक्सियो. लट्ठीले नकुट. बाहुनलाई देऊ. सहरबाट आए. घरदेखि पूर्व छ. सन्दूकमा राख. राजाको घोडा. गोपालकी छोरी.' यहां 'ले, लाई' आदि विभक्ति-प्रत्ययले अघिल्ला पदको दोस्रा पद संग सम्बन्ध बुझिन्छ.

५७. विभक्ति आठ किसिमका छन्. जुन अर्थमा जुन विभक्ति-प्रत्यय हुन्छन्, तिनको सामान्य नियम यस्तो छ :—

---

(१) 'ले, लाई' आदि विभक्तिप्रत्ययको स्वतन्त्र आफ्नो अर्थ केही बुझिंदैन, पछि लेखिने यिनै विभक्तिको अर्थ बुझाउंने 'सित, संग, तिर' आदि नामयोगी शब्दको भने केही आफ्नो अर्थ पनी बुझिने हुन्छ. स्वतन्त्र अर्थ नदेखिनेचाहींलाई प्रत्यय, स्वतन्त्र अर्थ देखिनेचाहींलाई अरू किसिमका शब्द भनेर व्यवहार हुन्छ.

| विभक्ति. | अर्थ. | | पूत्यय. |
|---|---|---|---|
| (१) पूथमा | कर्ता | ( काम गर्ने ) | ले, बाट |
| (२) द्वितीया | कर्म | ( गरिने वस्तु ) | लाई |
| (३) तृतीया | करण | ( गर्नाको साधन ) | ले, बाट |
| (४) चतुर्थी | सम्पूदान | ( " उद्देश्य ) | लाई, के |
| (५) पञ्चमी | अपादान | ( " अवधि ) | देखि, देखिन्, बाट. |
| (६) षष्ठी | सम्बन्ध | ( स्वामित्व आदि ) | को, की, का. |
| (७) सप्तमी | अधिकरण | ( गर्नाको आधार ) | मा. |
| (८) सम्बोधन | सम्बोधन | ( बोलाउनु ) | हो. |

टि. १. अरू विभक्ति-पूत्यय एक अनेक दुवै वचनमा एकै हुन्छ-न्, सम्बोधनको हो पूत्यय भने अनेकार्थी-अनेकवचनमा मात्र हुन्छ. जस्तैः–
मानिसले, मानिसहरूले. गाईलाई, गाईहरूलाई. ए ! नानी ? आ-इज. ए ! नानीहरूहो जाओ.

टि. २. एकै विभक्तिमा धेरै थरी लेखिएका पूत्ययमा सबै पूत्यय सबै थरी शब्दमा एकैनास हुने हुंदैनन्, पछि लेखिने नियम अ-नुसार ठांउ बमोजिम हुन्छन्. जस्तैः–
बाबाले दिनुभयो. महाराजबाट बोलाइबक्सियो. बाहुनलाई देऊ. छोराके आशीक. सहरदेखि पूर्व. सहरदेखिन् पूर्व. झ्यालबाट खस्यो. रामको छोरो. रामकी छोरी. रामका छोरा.

टि. ३ सबै किसिमका विभक्ति–पूत्यय सबै ठाउंमा रहीरहने पनी नियम छैन. पछि लेखिने नियम अनुसार शब्दको सामान्य-रूप मात्र पूयोग हुने गरी पूथमाको ले, द्वितीयाको लाई, सप्त-मीको मा, सम्बोधनको हो पूत्यय कहीं लोप हुने अर्थात् दबिने

पनी हुन्छन्. जस्तैः–

मानिस ( प्रथमा–ले ) छ. काम ( द्वितीया–लाई) गर. घर ( सप्तमी–मा ) छ. ओ ! नानीहरू ! ( सम्बोधन–हो) आओ. गुरु ( प्रथमा–ले ) पाठ ( द्वितीया–लाई ) पढाउनुहुन्छ. इ०

टि. ४ कविताहरूमा द्वितीयामा कन, सप्तमीमा माहां महां प्रत्यय गरेर ' छोराकन, घरमहां, घरमाहां ' यस्ता प्रयोग पनी हुन्छन्.

५८. नामहरूमा भएका विभक्तिले कहीं क्रिया बुझाउने क्रियापद वा कृदन्त नाम, विशेषण, अव्यय संग, कहीं क्रिया न बुझाउने अरू किसिमका पद संग सो नामहरूको सम्बन्ध बुझाउंछन्. सो क्रिया संग सम्बन्ध हुने पदार्थलाई **कारक**, तिनमा भएका विभक्तिलाई **कारक-विभक्ति**, क्रिया-भिन्न संग सम्बन्ध हुने पदार्थलाई **सम्बन्धी**, तिनमा भएका विभक्तिलाई **सम्बन्ध–विभक्ति** भन्दछन. जस्तै :–

(अ) ' रामुले–खाए. छोरालाई–डाक. घरबाट–निस्क्यो. घरमा–छ. महाराजबाट–बक्सियो. छोरीलाई–देऊ. लट्ठीले–कुट्नु बेस छैन. गोपाललाई–भन्ने कुरा संझ. आमालाई–दिन जान्छु. गोपीलाई–कुटेर भाग्यो. ' यहां क्रिया बुझाउने दोस्रा पद संग पहिला पदको सम्बन्ध बुझाउने ' ले, लाई ' आदि कारक–विभक्ति, ती पदार्थ कारक हुन्.

(आ) ' गोपालकी–आमा हुन. छोराके–आशीक. सहरदेखि–पूर्व छ. राजाको–घोडा दौड्यो. बाबाका–लुगाहरू राख.

दाज्यूकी–छोरी आइन्. ' यहां क्रिया नबुझाउने दोस्रा पद संग पहिला पदको सम्बन्ध बुझाउने ' की, के ' आदि सम्बन्ध-विभक्ति, ती पदार्थ सम्बन्धी हुन्.

टि. १ कर्ता, कर्म, करण, सम्प्रदान, अपादान, अधिकरण यी क्रिया संग सम्बन्ध राख्ने हुनाले कारक, तिनका विभक्ति कारक–विभक्ति हुन्छन्, कारकदेखि बाहेक सम्बन्धी, तिनका विभक्ति सम्बन्ध-विभक्ति हुन्छन्., कारक र सम्बन्धी भनेका पदार्थ हुन्तापनी सो पदार्थ बुझाउने शब्दलाई पनी व्याकरणमा कारक सम्बन्धी शब्दले व्यवहार हुन्छ.

टि. २ कुन कस्ता कारक हुन्, ? कहां कुन विभक्ति–प्रत्यय हुन्छन्, ? कहां विभक्ति–प्रत्ययको लोप हुन्छ ? कारक–भिन्नमा कहां कस्ता विभक्ति हुन्छन् ? सो सबै विशेष पछि विभक्ति–विचारमा लेखिनेछन्.

प्रश्नः–

( १ ) विभक्ति भनेको के हो ? विभक्ति कति किसिमका हुन्छन् ? कारक–विभक्ति सम्बन्ध–विभक्ति भनेका कस्ता हुन् ? कुन अर्थमा कुन विभक्ति–प्रत्यय हुन्छन् ? विभक्तिबाट के काम हुन्छ ?

( २ ) तलका वाक्यमा परेका नामका विभक्तिको बयान गरः– गोपालले इनाम पाए. किताप दराजमा छ. रुखबाट फल खसेर जमीनमा पर्‍यो. देवतालाई चढाउने फुल गोडाले नकुल्च. दाज्यूको टोपीमा रेशमको फीता छ. काले भांडा माझ्छ. काठमाडौंबाट भादगांउं पूर्व छ. भोकले पेट पोल्यो. सरकारबाट हाकिमलाई काममा इनाम बक्सियो.



## ६—नामको रूपावली.

## ( Declension of Nouns )

५९. विभक्ति र वचनका भेदले नामका धेरैथरी रूप बन्दछन्.

(क) नामको एकवचनमा र आदरार्थी—अनेकवचनमा सामान्यरूपको पछाडि ' ले, लाई ' आदि विभक्तिप्रत्यय, अनेकार्थी—अनेकवचनमा सामान्यरूपको पछाडि विकल्पले ' हरू ' यो वचनप्रत्यय, त्यस पछि ' ले लाई ' आदि विभक्ति प्रत्यय भई, कहीं प्रत्ययको लोप समेत भई रूप बन्दछन्. जस्तैः-

मानिस, मानिसहरू, मानिसले, मानिसहरूले, इत्यादि

६०. नामको रूप बन्दा सामान्यरूप यो बमोजिम हुन्छ.

( १ ) नु—अन्त्यमा हुने शब्दको एकवचनमा विभक्तिप्रत्यय वचनप्रत्यय केही नरहेमा नु, एकवचनमा प्रत्यय रहेमा र प्रत्यय रहे नरहे पनी सबै अनेकवचनमा ना अन्त्यमा हुने शब्द हुन्छ. जस्तै :-

एक०— मानु, मानाले, मानामा; जानु, जानालाई, जानाले. इ०

अनेक०- माना, मानाहरू, मानाहरूले, मानामा, मानाहरूमा. इ०

( २ ) दीर्घ ई—ऊ—कारान्त शब्दको सम्बोधनमा प्रत्यय केही नरहेमा अन्त्य ई ऊ ह्रस्व दीर्घ दुवै हुन्छन्, अरूमा दीर्घै रहन्छन्. जस्तै :-

ई–ए ! विद्यार्थी !, विद्यार्थि !; विद्यार्थीहरू !, विद्यार्थीले, विद्यार्थीहो !

ऊ–ए ! बुवाज्यू !, बुवाज्यु; बुवाज्यू, बुवाज्यूहरू, बुवाज्यूले.

( ३ ) ओकारान्त शब्दको एकवचनमा प्रत्यय नरहेमा ओकारान्तै, प्रत्यय रहेमा ओकारान्त वा आकारान्त, सम्बोधन दुवै वचनमा र सबै अनेकवचनमा प्रत्यय रहे नरहे पनी आकारान्त शब्द हुन्छ. जस्तै :–

एक०- छोरो, छोरोले, छोराले, छोरोलाई, छोरालाई, ए ! छोरा !

अनेक०- छोरा, छोराहरू, छोराले, छोराहरूले, ए ! छोराहरूहो !

( ४ ) अरू सबै अजन्त हलन्त शब्दको दुवै वचनमा उही स्वरूप रहन्छ. जस्तै :–

मानिस, मानिसहरूले; राजा, राजाले, राजाहरूले; विद्वान्ले, विद्वान्हरूले. इत्यादि

६१. अकारान्त पुंलिङ्ग वा स्त्रीलिङ्ग **मानिस** शब्दका रूप :-

| | एकवचन. | अनेकवचन. |
|---|---|---|
| प्र०– | मानिस, मानिसले. | मानिस(हरू), मानिस(हरू)ले. |

---

(१) बहुवचनमा ‘ हरू ’ प्रत्यय विकल्पले हुने हुनाले सो ‘ हरू ’-प्रत्यय संक्षेप गरी कोष्ठक भित्र दिएको छ, यस्तामा एकबाजि ‘ हरू ’ जोडी, एकबाजि ‘ हरू ’ नजोडी ‘ मानिस, मानिसहरू, मानिसले मानिसहरूले ’ यस्तो गरी रूप चलाउनू.

| | |
|---|---|
| द्वि०—मानिस,मानिसलाई. | मानिस(हरू), मानिस(हरू)लाई. |
| तृ०— मानिसले. | मानिस(हरू)ले. |
| च०—मानिसलाई-के. | मानिस(हरू)लाई-के. |
| पं०— मानिसदेखि-देखिन्-बाट | मानिस(हरू)देखि-देखिन्-बाट. |
| ष०— मानिसको-की-का. | मानिस(हरू)को-की-का. |
| स०—मानिसमा. | मानिस(हरू)मा |
| सं०—( ए ) मानिस ! | ( ए, ओ ! )मानिस(हरू)हो ! |

टि. १. प्रथमा तृतीयामा मान्यबोधक शब्दबाट बाट प्रत्यय पनी हुने हुनाले त्यस्ता शब्दमा 'महाराजबाट, बाबाज्यूबाट' यस्तो अर्को रूप पनी हुन्छ. 'घर,वन' आदि कुनै स्थानबोधक आदि शब्दमा सप्तमी एकवचनमा प्रत्ययको लोप भई 'घर,वन' यस्तो अर्को रूप पनी हुन्छ.

टि. २. अनेकवचनमा अघि लेखे बमोजिम आदरार्थीमा हरू नहुने, अनेकार्थीमा हरू विकल्पले हुने हुनाले हरू भएका रूप अनेकार्थीमा मात्र, हरू नभएका रूप अनेकार्थी आदरार्थी दुवै थरीमा प्रयोग हुने कुरा सवैमा जान्नुपर्दछ.

---

यही बमोजिम नाम सर्वनामहरूको रूपावलीमा कोष्ठक भित्र ' हरू ' राखेका ठाउंमा रूप चलाउनू.

(१) एकै विभक्तिमा अनेक विभक्तिप्रत्यय हुने ठाउंमा एउटा प्रत्यय भएको रूप मात्रै देखाई अरू प्रत्यय रेखाले जोडेर मात्र देखाएको छ, यस्तामा एकबाजि एउटा प्रत्यय, अर्कोबाजि अर्कोचाहीं प्रत्यय गरी एकवचनमा ' मानिसलाई, मानिसके ' अनेकवचनमा ' मानिसलाई, मानिसहरूलाई, मानिसके, मानिसहरूके ' यस्तो गरी रूप चलाउनू. यही बमोजिम ' देखि, देखिन्, बाट, को, की, का ' यस्ता अनेक प्रत्यय लेखेका नाम सर्वनामका रूपावलीमा सो मिलाई रूप चलाउनू.

(क) तलका शब्दका पनी मानिस शब्दका झैं रूप चलाउनू. इ०

अकारान्त–पुं०–भानीज, बाघ इ०; स्त्री०-नन्द इ०; नपुं०-घर, लोभ इ०
आकारान्त-पुं०-राजा, घोडा इ० ;स्त्री०-आमा मैञा इ०;नपुं०-जामा, पेडा "
इकारान्त–पुं०–भाइ, घर्ति, क्षत्रि इ०; नपुं०-बत्ति, पगरि, भांति इ०
उकारान्त–पुं०–बाबु, राम्रु, गोरु इ०; नपुं०-गाउं, आंसु, गहुं इ०
एकारान्त–पुं०– बाज्ये, लोग्ने, लुस्चिचे इ०; नपुं०–ऐंठे, लट्टे, खट्टे इ०
ऐकारान्त-पुं०- गोपालै, रामै इ०;स्त्री०-भदै, बज्यै इ०;नपुं०-जनै, मकै "
औकारान्त–पुं०–गुरौ, सारौ इ०; नपुं०–जौ, भद्रौ, धौ इ०
हलन्त–पुं०–भगवान्, विद्वान् इ०; नपुं०–जगत्, शरत् इ०

टि. 'लुस्चिचे, डांफे, सारौ' आदि कुनै शब्द सामान्यलिङ्ग हुनाले पुंलिङ्ग स्त्रीलिङ्ग दुवै हुन शक्छन्.

६२. ईकारान्त पुंलिङ्ग वा स्त्रीलिङ्ग नानी शब्दका रूप :–

| | |
|---|---|
| प्र०– नानी, नानीले | नानी(हरू), नानी(हरू)ले. |
| द्वि०- नानी, नानीलाई. | नानी(हरू), नानी(हरू)लाई. |
| तृ०- नानीले. | नानी(हरू)ले. |
| च०- नानीलाई-के. | नानी(हरू)लाई-के. |
| पं०- नानीदेखि-देखिन-बाट. | नानी(हरू)देखि-देखिन्-बाट. |
| ष०- नानीको-की-का | नानी(हरू)को-की-का. |
| स०- नानीमा. | नानी(हरू)मा. |
| सं०- ( ए ) नानि ! नानी ! | ( ए, ओ ) नानी( हरू )हो ! |

(क) यस्तै ईकारान्त-पुं०-हात्ती, माली, धोवी, विद्यार्थी इ०; स्त्री०-दिदी, बहिनी, छोरी, गाई इ०; नपुं०-उर्दी, पुर्जी, पाटी,

मसी इ०; ऊकारान्त-पुं०-दाज्यू, गुरुज्यू, भालू इ०; स्त्री०-फुपू, शाशू, बज्यू, मुमाज्यू इ०; नपुं०- काठमाण्डू, ज्यू इ० शब्दका पनी रूप चलाउनू.

६३. नु अन्त्यमा हुने नपुंसकलिङ्ग छानु शब्दका रूप :—

| | |
|---|---|
| प्र०— छानु, छानाले. | छाना(हरू), छाना(हरू)ले. |
| द्वि०- छानु, छानालाई. | छाना(हरू), छाना(हरू)लाई. |
| तृ०- छानाले. | छाना(हरू)ले. |
| च०- छानालाई-के | छाना(हरू)लाई-के. |
| पं०- छाना-देखि-देखिन् बाट. | छाना(हरू)देखि-देखिन्-बाट. |
| ष०- छानाको-की-का. | छाना(हरू)को-की-का. |
| स०- छानामा. | छाना(हरू)मा. |
| सं०- ( ए ) छानु ! | ( ए, ओ ) छाना(हरू)हो ! |

(क) यस्तै क्रियावाचक—जानु, खानु, दिनु, पकाउनु, देखिनु. इ०; अरू—मानु, किर्नु, धनु, छिनु, अचानु इ० का पनी रूप चलाउनू.

६४. ओकारान्त पुंलिङ्ग छोरो शब्दका रूप :—

| | |
|---|---|
| प्र०— छोरो, छोरोले, छोराले. | छोरा(हरू), छोरा(हरू)ले. |
| द्वि०-छोरो, छोरोलाई, छोरालाई. | छोरा(हरू), छोरा(हरू)लाई. |
| तृ०—छोरोले, छोराले. | छोरा(हरू)ले. |
| च०- छोरोलाई-के, छोरालाई-के. | छोरा(हरू)लाई के. |
| पं०— छोरो(रा) देखि-देखिन्-बाट. | छोरा(हरू)देखि-देखिन्-बाट. |

ष०- छोरो(रा)को-की-का.    छोरा(हरू)को-की-का.
स०- छोरोमा, छोरामा.    छोरा(हरू)मा.
सं०- ( ए ) छोरा !    ( ए, ओ ) छोरा(हरू)हो!

(क) यस्तै-ओकारान्त पुं०-केटो, कमारो, बोको. इ०; नपुं०-डोको, जांतो, खोलो, डांडो इ० शब्दका पनी रूप चलाउनू.

टि.१ हाम्रो भाषामा इ-उ-ओकारान्त स्त्रीलिङ्ग शब्द हुंदैनन्. ऋ लृकारान्त शब्द पनी भाषामा छैनन्. संस्कृतका 'पितृ, मातृ' आदि ऋकारान्त शब्द भाषामा 'पिता, माता' आदि आकारान्त भएर व्यवहार हुन्छन्. हलन्त शब्द पनी 'श्रीमान्, भगवान्, विद्वान्, जगत्' इत्यादि संस्कृतहरूबाट आएका मात्रै छन्.

टि. २ संस्कृतका तत्सम ( उस्तै ) शब्दको भाषामा व्यवहार हुंदा उहां सु अर्थात् प्रथमाको एकवचनमा हुने रूपमा आखिरमा विसर्ग मकार भए त्यति कट्टा गरी बांकि भाग अजन्त हलन्त जस्ता हुन्छन् तिनै शब्द भाषामा प्रकृति भई विभक्तिप्रत्ययहरू भएर रूप चल्ने हुन्छन्.    जस्तै :-

| संस्कृत. | सु-मा. | प्रकृति. | रूप. |
|---|---|---|---|
| राम | रामः | राम | रामले, रामलाई. इ० |
| वन | वनम् | वन | वन, वनमा, वनको. " |
| पितृ | पिता | पिता | पिता, पिताले, पिताको " |
| विद्वस् | विद्वान् | विद्वान् | विद्वान्, विद्वान्ले. " |
| भगवत् | भगवान् | भगवान् | भगवान्; भगवान्बाट. " |
| चन्द्रमस् | चन्द्रमाः | चन्द्रमा | चन्द्रमा, चन्द्रमाको. " |

| मनस् | मनः | मन | मन, मनमा, मनको. ” |
|---|---|---|---|
| मालिन् | माली | माली | माली, मालीले, मालीलाई” |

टि. ३ कहीं संस्कृतका ऋकारान्त शब्दको संस्कृतकै तात्पर्यले 'पितृका धर्मले कल्याण हुनेछ' इत्यादि ऋकारान्त प्रयोग पनी हुन्छ.

प्रश्न :–

(१) नामको केकेले रूपभेद हुन्छ ? रूप बन्दा कुन प्रत्यय कहां नेर जोडिन्छन् ? नाममा कस्ता शब्दका कस्ता सामान्यरूप हुन्छन् ? तु-ओ-ई-ऊकारान्त शब्दमा के के विशेष हुन्छन् ?
(२) 'धनु, भैंदै, बाहुनी, जातु, फुपू, लाठो' शब्दका रूप चलाऊ.
(३) तल लेखेका वाक्यमा परेका नामका प्रकृति, लिङ्ग, वचन, विभक्तिहरू बताऊ :–

ईश्वरको भजन गर. ए बाबु ! पढ़. लेखनामा मिहिनत गर. गुधाहरूलाई धान देऊ. रामुले गोपाललाई गल्लीमा लठ्ठीले कुट्यो. सरकारबाट जानालाइ हुकुम बक्सियो. गानाको व्यथा निको भयो. घर जान्छु.



## १०–सर्वनाम ( Pronoun )

६९. नामको सट्टामा आउने शब्दलाई **सर्वनाम** ( Pronoun ) भन्दछन. जस्तै :–

रामुले म (रामु) जान्छु भने. ए ! गोपाल ! तं (गोपाल) जा. गोविन्द पढ्दछ; त्यो (गोविन्द) खेल्दैन. जो ( विद्यार्थी ) जांचमा पहिला हुन्छ, त्यो ( विद्यार्थी ) इनाम पाउंछ.

रामप्रसादले बेस काम गरेका हुनाले तिनलाई ( रामप्रसादलाई ) इनाम देऊ.

(क) कोही पदार्थको विषयमा वारंवार भन्नुपर्दा उही नामको वारंवार प्रयोग गर्नु नराम्रो हुन्छ, दोस्रो पटकदेखि त्यो नामको सट्टामा सर्वनामको प्रयोग गर्नुपर्दछ. जस्तै :—

'रामु गाईलाई निको मान्दछ. रामुले गाईलाई घांस खुवाउंछ. रामु गाईलाई चौरमा लगी चराउंछ' यस्तो भन्दा 'रामु, गाई' शब्द वारंवार आउंदा नराम्रो हुने हुनाले 'रामु गाईलाई निको मान्दछ. त्यसले तिनलाई घांस खुवाउंछ. त्यो तिनलाई चौरमा लगी चराउंछ' यस्तो दोस्रो पटक देखि 'रामु, गाई' शब्दको बदलामा 'त्यसले, त्यो, तिनलाई' शब्द प्रयोग गर्दा वाक्य राम्रा हुने हुन्छन्.

टि· १ नामको सट्टामा झैं कहीं नामस्थानिक विशेषण वाक्यांशहरूको सट्टामा पनी सर्वनाम् आउने हुन्छ. जस्तैः—
बुद्धिमान् असल काम गर्दछन्. त्यसले ( असल काम गर्नाले ) तिनको ( बुद्धिमान्को ) मान हुन्छ. जो तिमी संधै खेलिरहन्छौ, त्यो ( संधै खेलिरहनु ) बेस छैन.

६६. सर्वनाम शब्द 'मं, तँ, त्यो, यो, उ, तपाञी, याहाँ, त्याहाँ, वाहाँ, आफू, जो, को' यी हुन्.

६७. सर्वनाम पनी नामको सट्टामा आई नाम जस्तै हुनाले यिनका पनी लिङ्ग वचन विभक्ति हुन्छन्, तर जुन नामको सट्टां-

मा आउंछन्, उसैको बराबर लिङ्ग वचन विभक्ति हुने हुन्छन्. यी सबै शब्द प्रायः तीनै लिङ्गका भई सबै लिङ्गमा एकै नासका रूप हुने हुन्छन्. यिनको सम्बोधन विभक्ति भने हुंदैन.

टि. कुनै शब्दको एकवचनमा र अनेकवचनमा सामान्यरूप भिन्न हुने, कहीं विभक्तिप्रत्यय बेग्लै ( रो री रा, नो नी ना ) हुने हुन्छन्, सो सबै रूपावलीमा स्पष्ट हुनेछ.

६८. सर्वनाम मुख्य चार किसिमका छन्.

(१) पुरुषवाचक (Personal)

- (क) प्रथमपुरुषवाचक ( First-Person )
- (ख) द्वितीयपुरुषवाचक ( Second-Person )
- (ग) तृतीयपुरुषवाचक ( Third-Person )
- (घ) मानबोधक ( Honorific )
- (ङ) आत्मबोधक ( Reflexive )

(२) दर्शक ( Demonstrative)

(३) सम्बन्धी ( Relative )

(४) प्रश्नार्थक ( Interrogative )

## ( १ ) पुरुषवाचक ( Personal )

### (क) प्रथमपुरुषवाचक ( First-person )

६९. जो बोल्दछ त्यसलाई बुझाउने 'म' शब्दलाई 'प्रथमपुरुषवाचक' भन्दछन्. यसको अनेकवचनमा 'हामी' यस्तो हुन्छ. जस्तै :—

म गर्दछु. मैले भनें. म आउनेछु. हामी गर्दछौं. हामीले देख्यौं.

टि. १ म शब्द प्रायः बोल्ने शक्ति भएको पुरुष वा स्त्री मनुष्य-लाई नै बुझाउने गरी प्रयोग गरिन्छ, कहीं अरू प्राणी अप्राणी-लाई मनुष्य जस्तो गरी उसको बोलीको अनुकरण गरी देखाएमा अरूलाई बुझाउन पनी प्रयोग गरिन्छ. यसैले नपुंसकलिङ्ग उ-स्तै ठाउंमा मात्र हुन्छ. जस्तैः—

यो कुकुर मलाई खान देऊ भन्दछ. यो रुख मलाई नकाट भनी हल्लन्छ क्यार.

टि. २ म शब्दको आदरार्थीमा प्रयोग कहीं प्रभुत्व सेखी आदि विशेष बुझाउंदा मात्र हुन्छ, अनेकार्थीको प्रयोग कहीं बोल्ने एके भए पनी आफ्ना पक्षका धेरैलाई बुझाउने गरी हुन्छ. जस्तैः-

आदरार्थी—हामीबाट गरिबक्स्यौं. हामीले भने पछि को गर्दैन ?

अनेकार्थी-राम्रुले हामीहरू जान्छौं भने. यो भारी हामी लैजान्छौं.

## (ख) द्वितीयपुरुषवाचक ( Second-person )

७०. जस संग बोलिन्छ, त्यसलाई बुझाउने 'तँ' शब्दलाई 'द्वितीयपुरुषवाचक' भन्दछन्. यसको अनेकवचनमा 'तिमी' हुन्छ. जस्तैः—

ए ! नानी ! तँ जा. तैंले के खाइस् ? तिमीहरू जाओ. तिमीले भन्यौ.

टि.१ 'म' शब्द झैं तँ शब्द पनी प्रायः मनुष्यलाई नै बुझाउने गरी प्रयोग गरिन्छ, कहीं अरू प्राणी अप्राणीलाई मनुष्य जस्तो गरी बोलाएर व्यवहार गर्दा अरूलाई बुझाउन पनी प्रयोग गरिन्छ. जस्तैः-

ए ! मोति ! ( कुकुर ) तँ आ. ए ! मन ! तँ (मन) कति रुन्छस् ?

टि. २ तँ शब्द क्षुद्र श्रेणीका एकलाई भन्दा मात्र एकवचनमा प्रयोग गरिन्छ, त्यहां भन्दा माथिका साधारणलाई भन्दा आदरार्थीमा प्रयोग गरिन्छ. मान्यलाई भन्दा यसको प्रयोग हुँदैन. कहीं सम्बोध्य (बोलाइने) एक भए पनी त्यस पक्षका घेरैलाई बुझाउने गरेर अनेकार्थीमा प्रयोग हुन्छ. जस्तै :–

एक–ए ! कैले ! तँ चांडै जा. च्यै च्यै मोति ! तँ यता आ.
अनेक-ए ! रामे ! तिमीहरू जाओ. ए ! नानी ! तिमीहरू के गछौं ?
आदर-ए ! बाबु ! तिमी कहाँ जान्छौ ? ए ! भाइ ! तिमीलाई सञ्चै छ ?

टि. ३ तँ शब्द भएका वाक्यमा प्रायः सम्बोधन रहन्छ, नभए पनी मौकाबाट बुझ्नुपर्दछ. जस्तैः–
रामले रावणलाई ( ए ! रावण ! ) तँलाई अहिल्यै मार्छु भन्नुभयो.

## ( ग ) तृतीयपुरुषवाचक ( Third-person)

७१. जुन तेस्राको विषयमा कुरा गरिन्छ त्यसलाई बुझाउने ‘ त्यो, यो, उ ’ शब्दलाई ‘ तृतीयपुरुषवाचक ’ भन्दछन्. यिनका अनेकवचनमा क्रमैले ‘ ती तिनी, यी यिनी, ऊ उनी ’ यस्ता हुन्छन्. जस्तै :–

त्यो राम्रो छ. तिनीहरू जान्छन्. यो गर्दछ. यी गर्दछन. उ आयो. ऊ आए.

टि. यी तीनै शब्दको मनुष्य वा अरू प्राणी अप्राणी सबैलाई बुझाउन प्रयोग हुन्छ. तर यिनमा ‘यो’ शब्दबाट नजीक रहेको, ‘त्यो’ शब्दबाट केही टाढा रहेको, ‘उ’ शब्दबाट निकै टाढा रहेको पदार्थ बुझिन्छ. जस्तै :–

यो राम्रो छ. त्यो बेस थियो. उ बहुतै खराप थियो.

## ( घ ) मानबोधक. ( Honorific )

७२. द्वितीय-तृतीय-पुरुषलाई मान गरेर बुझाउने ' तपाञी, त्याहाँ, याहाँ, वाहाँ ' शब्दलाई ' मानबोधक ' भन्दछन्. यिनको अनेकवचनमा शब्द फरक हुंदैन. जस्तै :—

तपाञी आउनुहोला. त्याहांले आज्ञा गर्नुभयो. याहां जानुहुन्छ. वाहां के भन्नुहुन्छ ?

टि. १ तपाञी शब्द द्वितीयपुरुषलाई, याहां शब्द द्वितीय वा तृतीयपुरुषलाई, त्याहां, वाहां शब्द प्रायः तृतीयपुरुषलाई मान गरेर बुझाउँदा प्रयोग गरिन्छन्. यिनको प्रयोग गरेमा प्रायः क्रियापद पनी मानबोधक हुन्छ. जस्तै :–

ए ! गुरुजी ! तपाञी कहां पाल्नुहुन्छ ? बाबाज्यू ! याहांले भन्नुभएको सुनें. याहां विद्वान् हुनुहुन्छ. त्याहांले जे भन्नुहुन्छ. वाहांले घडी दिनुभएन.

टि. २ यिनमा तपाञी शब्द 'तँ' शब्द झैं सम्बोध्यलाई, याहां शब्द 'यो' शब्द झैं नजीक रहेकालाई, त्याहां शब्द ' त्यो ' शब्द झैं केही टाढा रहेकालाई, वाहां शब्द ' उ ' शब्द झैं निकै टाढा रहेकालाई बुझाउंछन्.

टि. ३ यी मानबोधक शब्द मान्य मनुष्य देवता आदिलाई बुझाउने हुनाले प्रायः पुं०स्त्रीलिङ्गी हुन्छन्, कहीं ' म, तं' शब्द झैं विशेष तात्पर्यले अरू प्राणी अप्राणीलाई पनी उत्तम प्राणी जस्तो गरी

बुझाउन प्रयोग गरिन्छन्. यसैले नपुंसकलिङ्ग पनी हुन शक्छन्. यी शब्दबाटै मान बुझिने हुनाले यिनको आदरार्थीमा प्रयोग हुंदैन.

## (ङ) आत्मबोधक. (Reflexive)

७३. सबै पुरुषलाई बुझाउने 'आफू' शब्दलाई 'आत्मबोधक' भन्दछन्. यसको पनी अनेकवचनमा शब्द फरक हुंदैन. जस्तैः-

म आफू गर्दछु. तैंले आफैले देखिस्. ती आफू गर्दछन्. याहांहरू आफू गर्नुहुन्छ. तपाञी आफूले भनेको संझनुहोओस्. यो आफू शक्तैन.

टि १ आफू शब्द प्रायः उही वाक्यमा पहिले भनेका नाम सर्वनाम दोहऱ्याएर प्रयोग गर्दापर्दा तिनको सट्टामा आउंछ. यसैले प्राणी अप्राणी सबैलाई बुझाउने भई सबै लिङ्गमा प्रयोग हुने हुन्छ. जस्तैः-

रामु आफूले ( रामुले ) बिराएको देख्तैन. बुद्धि आफ्नो ( बुद्धिको ) शक्तिले सूक्ष्म कुरा पनी पक्रन्छ. म आफ्नो ( मेरो ) टोपी लाउंछु. तं आफू ( तं ) जा.

टि. २ आफू शब्द दोहरिनुपर्ने जसको सट्टामा आएको छ प्रायः उसैको लगत्तै पछि रहन्छ. कहीं केही टाढा अघिबाट पनी रहन शक्छ. जस्तै :-

रामुले आफ्नो ( रामुको ) टोपी सेतुलाई दिए. रामुले मलाई आफ्नो ( रामुको वा मेरो ) किताप दिए. आफ्नो ( मानिसको ) औकात विचार नगरी काम गर्ने मानिस दुःख पाउंछ.

टि. ३ आफू शब्द जसको बदलामा आएको हो उसैको बराबर

विभक्ति भएको ठाउंमा र कहीं अरू ठाउंमा पनी निश्चय आदि विशेष समेत बुझाउंने, कहीं अव्ययको अर्थ बुझाउने पनी हुन्छ. जस्तैः- मैले आफैले देखें. पर्खाल आफै ( केही नगरी ) लड्यो. आफू ( हुनत ) यसो हुनुपर्ने हो. आफू ( यद्यपि ) मैले भनेको हुं.

टि· ४ संस्कृतको 'स्व' शब्द झैं हाम्रो आफू शब्द पनी कहीं आत्मीय ( आफन्त ) भन्ने अर्थ लिएर अरूलाई पनी बुझाउने, कहीं विशेषण जस्तो भएर पनी प्रयोग हुने हुन्छ. जस्तैः–

आफू ( आत्मीय अर्थात् पति ) बाहिर जानुभएको छ. आफू ( आत्मीय अर्थात् तपाईं ) कहां जानुहुन्छ ? आफू ( आत्मीय ) तपाईंले लेख्नुभएको पत्र पाएं.

टि.५ . कहीं आफू शब्द प्रयोग गर्नुपर्ने ठाउंमा नाम सर्वनाम दोहऱ्याएर प्रयोग हुने पनी हुन्छ. जस्तैः–

म मेरो वा आफ्नो काम गर्छु, तं तेरो वा आफ्नो काम गर्. गोपाल गोपालको वा आफ्नो घर जाओस्, त्यो त्यसको वा आफ्नो घर जाओस्.

## ( २ ) दर्शक ( Demonstrative )

७४. अघिबाट गएको नामको सट्टामा आई त्यसैलाई तोकेर देखाउने भएमा ' त्यो, यो, उ ' शब्दलाई र मान समेत गरी देखाउने ' त्याहां, वाहां ' शब्दलाई पनी ' दर्शक ' भन्दछन्. जस्तै :–

पुलिस दगुर्दै आयो, त्यसले ( पुलिसले ) चोरलाई समात्यो. त्यसले ( पुलिसले ) यसको ( चोरको ) गालामा बजायो.

गुरु आउनुभयो, वाहांले ( गुरुले ) मलाई बोलाउनुभयो. बाबा आउनुहुन्छ, त्याहांले ( बाबाले ) मलाई कुट्नुहुनेछ. रामेले सेतेको घडी फोऱ्यो, त्यसले ( रामेले ) उसको ( सेतेको ) बिगार गऱ्यो.

टि. १ म शब्द वा त्यसको ठाउंमा आउने आफू शब्द प्रथमपुरुषलाई, तँ शब्द वा त्यसको ठाउंमा आउने आफू, तपाञी, याहां शब्द द्वितीयपुरुषलाई बुझाउंछन्, यिनदेखि बाहेक अरू सबै सर्वनाम नाम शब्द तेस्रो व्यक्तिलाई बुझाउंने हुनाले तृतीयपुरुषवाचक हुन्छन्. त्यो, यो, उ, त्याहां, वाहां शब्द अघि गएका नामहरूलाई नदेखाई स्वतन्त्र स्वरूपले तेस्रो व्यक्तिलाई बुझाउने भएमा तृतीयपुरुषवाचक, अघिल्ला वाक्यहरूमा गएकैलाई देखाई बुझाउने भएमा दर्शक भई ठांउ अनुसार दुवै किसिमका हुन्छन्. जस्तैः–

तृ०पु०वाचक-त्यो आयो. यो जान्छ. उ आउंछ.

दर्शक– रामु गयो, त्यो ( रामु ) आएन. चिठी लेख्यौं, अब त्यो ( चिठी ) पठाउंछौं.

टि. २ दर्शकमा अघि गएको नामलाई बुझाउंदा त्यो शब्दकै ज्यादा प्रयोग हुन्छ, कहीं नामस्थानिक वाक्य वाक्यांश बुझाउन पनी प्रयोग हुन्छ. यो शब्दको प्रायः नामस्थानिक वाक्यांश बुझाउन कहीं कहीं नामलाई बुझाउन प्रयोग हुन्छ. उ शब्दको नामलाई नै बुझाउने गरी कहीं प्रयोग हुन्छ, वाक्य वाक्यांशहरू बुझाउन प्रायः प्रयोग हुंदैन. अघि गएको नामलाई मान गरेर बुझाउंदा प्रायः वाहां शब्दको, कहीं त्याहां शब्दको पनी प्रयोग हुन्छ. जस्तैः–

खटियामा किताप छ, त्यो ( किताप ) ल्याऊ. तिमी भनेको मान्दै-

नौ, यो वा त्यो ( भनेको नमान्नु ) बेस होइन. कृष्णलाई किताप दिएं, तिनले वा उनले ( कृष्णले ) घडी दिए. पण्डितजी आउनुभयो, वाहांले ( पण्डितजीले ) राम्रो श्लोक सुनाउनुभयो.

## ( ३ ) सम्बन्धी. ( Relative )

७९. कुनै नामको सट्टामा आएर त्यसको दुवै तिर सम्बन्ध गराई दुइ वाक्यलाई जोड्ने 'जो' शब्दलाई 'सम्बन्धी' भन्दछन्. यसको अनेकवचनमा 'जुन' यस्तो हुन्छ, नपुंसक लिङ्ग एकवचनमा 'जे' यस्तो पनी हुन्छ. जस्तै :—

जो ( मानिस ) बदमासी गर्छ, त्यो ( मानिस) सजाय पाउंछ. जुनलाई मैले खोजेथें, तिनलाई भेटें. जे ( काम ) गर्ने मन छ, त्यो ( काम ) गर.

टि. १ सम्बन्धीको प्रयोग हुंदा दुइ वाक्य भई एकै वस्तु बुझाउने गरी एक वाक्यमा सम्बन्धी सर्वनामको, अर्को वाक्यमा दर्शक सर्वनामको प्रयोग हुन्छ. सो सम्बन्धीले सम्बन्धी भएको वाक्यको दर्शक भएको वाक्य संग सम्बन्ध बुझाउंछ. जस्तै :—

जो जांचमा पहिला हुन्छ, त्यसले इनाम पाउंछ. जसलाई मैले लाएथें, उसले राम्ररी काम गर्‍यो. तिमी जो संधै खेलिरहन्छौ, यो बेस होइन. जो हिजो पाल्नुभएथ्यो, वाहां भोलि फर्कनुहुंनछ.

टि. २ कहीं अर्को वाक्यमा दर्शक दबिएर रहने पनी हुन्छ, त्यस्तामा दर्शक दबेको वाक्य प्रायः छोटो हुन्छ. जस्तै :—

जो जान्छ, ( त्यो ) जाओस्. जे गर्दछौ, ( त्यो ) गर. यस्ता उ-

ल्टुलाई जसले काम लाउंछ, ( उसले ) लाओस्.

टि. ३ हाम्रो भाषामा सम्बन्धी परेको वाक्य पहिले, दर्शक भएको वाक्य पछाडि पारेर प्रयोग ज्यादा प्रसिद्ध छ, आजकाल कोही अरू भाषाको देखासिकिले कहीं उल्टापाल्टी पारेर पनीं प्रयोग गर्दछन्. जस्तै :–

(क) जसलाई म वारंवार गालि गर्दछु, त्यो बडो उल्लु छ.

(ख) त्यो बडो उल्लू छ, जसलाई म वारंवार गालि गर्दछु.

टि. ४ एक वाक्यमा जसजसलाई बुझाउने जतिवटा सम्बन्धी हुन्छ, अर्को वाक्यमा त्यसत्यसलाई बुझाउने त्यतिवटा दर्शक हुन्छ; कहीं स्पष्ट नभए पनी गुप्त हुन्छ. जस्तैः–

जो जो जे जे खान्छन्, तिन तिनलाई त्यो त्यो देउ. जसले जसलाई जेले हान्यो, उसले उसलाई त्यसैले बदला दियो.

टि. ५ दर्शक भएको एकै वाक्यमा सम्बन्धी भएका अनेक वाक्यको सम्बन्ध हुने भएमा सम्बन्धीचाहीं प्रत्येक वाक्यमा रहन्छ, दर्शकचाहीं सबै संग सम्बन्ध हुने गरी एकै हुन्छ. जस्तैः–
जो सुख दुःखमा एकैनासको शील राख्तछ, जसले अर्काको बिगार कहिल्यै चिताइंदैन, जसलाई सबै प्यारो गर्दछन्, जसमा विद्या विवेक विश्वास छ, त्यही यथार्थ मानिस हो.

टि. ६ सम्बन्धी कहीं ( मिश्र-वाक्यमा ) विशेषणको काम दिने अधीन-वाक्यलाई मुख्य-वाक्य संग जोड्ने हुन्छ. कहीं ( संयुक्त-वाक्यमा ) कार्य कारण क्रमहरू बुझाउने अनेक स्वतन्त्र-वाक्यलाई जोड्ने हुन्छ. जस्तैः–

(क) अधीन वाक्य जोड्ने—
जुन किताप धेरै दिनदेखि खोजिरहेथें ( धेरै दिनदेखि खोजिरहे-

को ), त्यो बल्ल आज पाएं. जे गर्न शकिन्छ ( गर्न शकिने ), त्यही बेस छ.

(ख) स्वतन्त्र वाक्य जोड्ने—

रुपियां राम्ररी राख, जसले ( किनकि त्यसले ) तिमीलाई बखतमा काम दिनेछ. मैले एक चलाक बालकलाई काममा पठाएं, जसले ( अनी त्यसले ) चाँडै नै सफलता दिलायो.

## ( ४ ) प्रश्नार्थक. ( Interrogative )

७६. कुनै नामको सट्टामा आई प्रश्न बुझाउने 'को' शब्द-लाई 'प्रश्नार्थक' भन्दछन. यसको अनेकवचनमा 'कुन' यस्तो हुन्छ, नपुंसकलिङ्गमा 'के' यस्तो पनी हुन्छ. जस्तै :-

को ( मानिस ) जान्छ ? कसले दियो ? केमा राख्तछौ ? कसलाई दिऊँ ? कुन आएका छन ? यो कसको टोपी हो ?

७७. प्रायः सामान्यरूपमा कहीं रूपमा 'सुकै' जोडेको 'जो' शब्द र एकाक्षर रूप(को, के) मा 'ही' जोडेको वा अनेकाक्षर सामान्यरूप ( कस, कुन ) ऐकारान्त भएको शब्द आफ्ना सम्बन्ध प्रश्नरूप अर्थ छोडी अनिश्चय बुझाउने **अनिश्चय-बोधक** ( Indefinite ) सर्वनाम हुन्छन. जस्तै :-

जो–जोसुकै, जेसुकै, जुनसुकै, जससुकैले, जुनसुकैको इ०

को–कोही, केही, कसैको, कुनैले, केहीमा, कसैदेखि, कुनै ''

टि. १ नामहरूमा झैं सर्वनाममा ठांउ अनुसार 'ही ई ऐ यै' भएमा

अवधारण ( निश्चय अर्थात् जोर ), 'चाहीं' जोडेमा निर्द्धारण ( छ-नोट अर्थात् घेरैमा छुट्याउनु ) यो विशेष समेत बुझिने हुन्छ. जस्तैः-

अव०—यही, त्यही, उही, याहीं, त्याहीं, वाहीं, यसैको, उसैलाई, मेरै, तिम्रै, आफ्नै, उनैले, तिनैको, त्यसैमा, मैल्यै, तिनल्यै. इ०

निर्द्धा०—योचाहीं, उचाहींमा, मचाहीं, तिनीचाहींको, तेरैचाहीं. इ०

टि. २ कुनै सर्वनामको सामान्यरूप वा रूप जोडेर प्रयोग गर्दा पनी केही विशेष बुझिने हुन्छ. जस्तैः—

जोकोही जाओस्. जसत्यसलाई नदिए. यसउसले भनेको हुँ.

७८. कोही अरू किसिमका शब्द पनी कहीं नामको सट्टामा आई सर्वनाम हुने हुन्छन्. जस्तै :—

गोपाल र गोविन्द आए, एकले ( गोपालले ) किताप, अर्काले ( गोविन्दले ) कलम लगे. रामु कालु सेतु घर छन, सबै ( रामु कालु सेतु ) पढिरहेछन्.

प्रश्न :—

(१) सर्वनाम भनेको के हो ? सर्वनाम कति प्रकारका छन् ? कुन कुन सर्वनाम कस्ता हुन् ? पुरुषवाचक, दर्शक, सम्बन्धी भनेका के के हुन् ? सर्वनाममा लिङ्ग वचन विभक्ति के के कस्ता हुन्छन् ? अनिश्चयबोधक कसरी बन्दछ ? ( पुरुषवाचक, दर्शक, सम्बन्धीको प्रयोगमा के के विशेष हुन्छन् ? अवधारण, निर्द्धारण बुझाउंदा कस्तो हुन्छ ? )

(२) तल लेखेका वाक्यमा परेका सर्वनाम शब्द कस्ता हुन्, कुन कुन नामको स्थानमा आएका हुन् ? सबै बयान गरः—

मैले भनेको कुरा तँ राम्ररी सुन् भनि गुरुले शिष्यलाई भने. यो

मेरो आफ्नै घर हो. परमेश्वरले हामीलाई जे दिनुभएको छ, त्यसमा कसैको केही लाग्दैन. तिम्रोचाहीं भन्दा मेरोचाहीं बेस छ. जुन चाँडै आउनन्, उनैले यो पाउनन्. जोसुकै भए पनी हुन्छ. आफूमा रहेको दोष कोही पनी आफू देख्तैन. त्यो उहाँई याहींको भरोसामा छोडेको छ. कसैले पनी हामीलाई चिनेको छैन. उनको किताप राम्रो छ, त्यसमा कालाको जिल्द छ.



## ११–सर्वनामको रूपावली.

## ( Declension of pronouns )

७९. विभक्ति र वचनका भेदले सर्वनामका पनी धेरै थरी रूप बन्दछन.

टि. सर्वनाममा प्रथम-द्वितीय-पुरुषवाचक ‘ म, तं ’ शब्द र आत्मबोधक ‘ आफू ’ शब्दका, दर्शक ‘ त्यो, यो, उ ’ शब्दका, मानबोधक ‘ तपाईं, त्याहां, वांहा ’ शब्दका, सम्बन्धी ‘ जो ’ शब्द र प्रश्नार्थक ‘ को ’ शब्दका प्रायः एकै किसिम संग रूपावली बन्दछन्.

८०. तीनै लिङ्गमा एकै प्रथमपुरुषवाचक म शब्दका रूप :–

| | एकवचन. | अनेकवचन. |
|---|---|---|
| प्र०— | म, मैले | हामी(हरू), हामी(हरू)ले, हामी(हरू)बाट |
| द्वि०— | मलाई | हामी(हरू)लाई |

| | |
|---|---|
| तृ०— मैले | हामी(हरू)ले, हामी(हरू)बाट |
| च०— मलाई | हामी(हरू)लाई-के |
| पं०— मदेखि-देखिन्-बाट | हामी(हरू)देखि-देखिन्-बाट |
| ष०— मेरो, मेरी, मेरा | हाम्रो, हाम्री, हाम्रा, हामीहरूको-की-का |
| स०— ममा | हामी(हरू)मा |

टि. म शब्दका रूपमा यी विशेष हुन्छन् :–

(१) एकवचनमा म, अनेकवचनमा हामी यस्ता सामान्यरूप हुन्छन्, कहीं अन्त्य स्वरको लोप, कहीं बदलामा ए ऐ पनी हुन्छन्.

(२) अनेकवचनमा सामान्य नियम बमोजिम आदरार्थीमा हरू हुंदैन, अनेकार्थीमा प्रायः विकल्पले हुन्छ.

(३) प्रथमा तृतीयामा बाट, चतुर्थीमा के प्रत्यय अनेकवचनमा मात्र हुन्छ. द्वितीयामा लाई को लोप हुंदैन.

(४) षष्ठीमा एकवचनमा एकारान्त सामान्यरूप भई रो, री, रा प्रत्यय हुन्छन्, अनेकवचनमा हलन्त सामान्यरूप भई हरू नभई ' रो, री, रा ' प्रत्यय वा अजन्त सामान्यरूप भई हरू नित्यै भई ' को, की, का ' प्रत्यय हुन्छन्.

## ८१. तीनै लिङ्गमा एकै द्वितीयपुरुषवाचक तँ शब्दका रूप :-

| | |
|---|---|
| प्र०— तं, तैंले | तिमी(हरू), तिमी(हरू)ले |
| द्वि०— तंलाई | तिमी(हरू)लाई |
| तृ०— तैंले | तिमी(हरू)ले |
| च०— तंलाई | तिमी(हरू)लाई-के |
| पं०— तंदेखि-देखिन्-बाट | तिमी(हरू)देखि-देखिन्-बाट |

ष० — तेरो, तेरी, तेरा  तिम्रो, तिम्री, तिम्रा, तिमीहरूको-की-का
स० — तंमा  तिमी(हरू)मा

टि. तं शब्दका रूपमा यी विशेष हुन्छन् :—

(१) एकवचनमा तं, अनेकवचनमा तिमी यस्ता सामान्यरूप हुन्छन्.

कहीं अन्त्य स्वरको ए ऐ विकार, कहीं लोप पनी हुन्छन्, एकार भएमा अनुनासिक हुंदैन.

(२) अनेकवचनमा 'हरू' भएको रूप अनेकार्थीमा, 'हरू' नभएको रूप आदरार्थीमा प्रयोग हुने, चतुर्थीको के अनेकवचनमा मात्र हुने, द्वितीयामा लाई को लोप नहुने, षष्ठीमा विशेष सामान्यरूपमा विकार भएमा रो, री, रा प्रत्यय भई अनेकवचनमा 'रो, री, रा' भएमा हरू नहुने 'को, की, का' भएमा हरू हुने कुरा 'म' शब्दको बराबरै हुन्छन्.

(३) प्रथमा तृतीयामा बाट प्रत्यय हुंदैन.

## ८२. तीनै लिङ्ग० दर्शक वा तृ०पु०वा०त्यो शब्दका रूप :-

प्र० — त्यो, सो, त्यसले, त्यल्ले  ती, तिनी(हरू), तिनी(हरू)ले
द्वि० — त्यो, सो, त्यसलाई, त्यल्लाई  ती, तिनी(हरू), तिनी(हरू)लाई
तृ० — त्यसले, त्यल्ले  तिनी(हरू)ले
च० — त्यसलाई-के, त्यल्लाई  तिनी(हरू)लाई-के
पं० — त्यसदेखि-देखिन्-बाट  तिनी(हरू)देखि-देखिन्-बाट
ष० — त्यसको-की-का  तिनी(हरू)को-की-का
स० — त्यसमा  तिनी(हरू)मा

टि. त्यो शब्दका रूपमा यी विशेष हुन्छन् :—

(१) एकवचनमा त्यस, ' ले, लाई ' भएमा त्यल्ल पनी, अनेकवचनमा तिनी यस्ता सामान्यरूप हुन्छन्. प्रथमा द्वितीयामा सो, त्यो, ती यी रूप पनी हुन्छन्.

(२) अनेकवचनमा प्रथमा द्वितीयाको ती रूप अनेकार्थी आदरार्थी दुवैमा, अरू रूप हरू भएका अनेकार्थीमा,हरू नभएका आदरार्थीमा प्रयुक्त हुन्छन्. यसैले प्रथमाको ती यो प्राणी अप्राणी सबैलाई, तिनी यो आदर गरिने मनुष्यहरूलाई बुझाउन प्रयोग गरिन्छ.

(३) अनेकवचनको तिनी यो सामान्यरूपमा वचन वा विभक्तिको प्रत्यय रहेका ठाउंमा नी को बदला न गरेर ' तिनहरू, तिनले, तिनहरूले, तिनलाई, तिनहरूको, तिनमा ' इत्यादि पनी प्रयोग गरिन्छन्.

## ८३. तीनै लिङ्ग० दर्शक वा तृ० पु० वा०यो शब्दका रूप :-

| | |
|---|---|
| प्र०— यो, यसले, यल्ले | यी, यिनी(हरू), यिनी(हरू)ले |
| द्वि०— यो, यसलाई, यल्लाई | यी, यिनी(हरू), यिनी(हरू)लाई |
| तृ०— यसले, यल्ले | यिनी(हरू)ले |
| च०— यसलाई-के, यल्लाई | यिनी(हरू)लाई-के |
| पं०— यसदेखि-देखिन्-बाट | यिनी(हरू)देखि-देखिन्-बाट |
| ष०— यसको-की-का | यिनी(हरू)को-की-का |
| स०— यसमा | यिनी(हरू)मा |

टि. यो शब्दका रूपमा ' त्यो ' शब्दमा झैं यी विशेष हुन्छन् :-

(१) 'त्यो' शब्दकै रीतले त्यस, त्यल्ल, तिनी यस्ता सामान्यरूप हुन्छन्.

(२) अनेकवचनमा 'त्यो' शब्दकै रीतले यी यो विशेषरूप अनेकार्थी आदरार्थी दुवैमा, अरूचाहिँ हरू भएका अनेकार्थीमा, नभएका आदरार्थीमा हुन्छन्.

(३) अनेकवचको यिनी यो सामान्यरूपमा नी को बद्ला न गरेर ' यिनहरू, यिनले ' इत्यादि प्रयोग पनी हुन्छन्.

## ८४. तीनैलिङ्ग० दर्शक वा तृ० पु० वा० उ शब्दका रूप :-

| | |
|---|---|
| प्र०— उ, उसले, उल्ले | ऊ, उनी(हरू), उनी(हरू)ले |
| द्वि०— उ, उसलाई, उल्लाई | ऊ, उनी(हरू), उनी(हरू)लाई |
| तृ०— उसले, उल्ले, | उनी(हरू)ले |
| च०— उसलाई-के, उल्लाई | उनी(हरू)लाई-के |
| पं० — उसदेखि-देखिन्-बाट | उनी(हरू)देखि-देखिन्-बाट |
| ष०— उसको-की-का | उनी(हरू)को-की-का |
| स०— उसमा | उनी(हरू)मा |

टि. उ शब्दका रूपमा " त्यो ' शब्दमा झैं यी विशेष हुन्छन् :—

( १ ) 'त्यो' शब्दकै रीतले उस, उल्, उनी यस्ता सामान्यरूप हुन्छन्.

( २ ) अनेकवचनमा हरू भएका अनेकार्थीमा, नभएका आदरार्थीमा, ऊ यो विशेष रूप दुवै थरीमा हुन्छन्.

( ३ ) अनेकवचनको उनी यो सामान्यरूपमा नी को बदला न गरेर ' उनहरू, उनले ' इत्यादि पूयोग पनी हुन्छन्.

## ८५. तीनै लिङ्गमा एकै मानबोधक तपाञी शब्दका रूप:—

प्र०—,तपाञी, तपाञीले-बाट   तपाञीहरू, तपाञीहरूले-बाट

| | |
|---|---|
| द्वि०- तपाञीलाई | तपाञीहरूलाई |
| तृ०- तपाञीले-बाट | तपाञीहरूले-बाट |
| च०- तपाञीलाई-के | तपाञीहरूलाई-के |
| पं०- तपाञीदेखि-देखिन्-बाट | तपाञीहरूदेखि-देखिन्-बाट |
| ष०- तपाञीको-की-का | तपाञीहरूको-की-का |
| स०- तपाञीमा | तपाञीहरूमा |

टि. तपाञी शब्दका रूपमा यी विशेष हुन्छन् :-

( १ ) द्वितीयामा लाई को लोप हुंदैन.

( २ ) यसको आदरार्थीमा प्रयोग हुंदैन, अनेकार्थीमा हरू प्रायः नित्यै रहन्छ. यस्तै-' याहाँ, त्याहाँ, वाहाँ ' शब्दका पनी रूप चलाउनू.

८६. तीनै लिङ्गमा एकै आत्मबोधक आफू शब्दका रूपः-

| | |
|---|---|
| प्र० - आफू, आफूले-बाट | आफू(हरू), आफू(हरू)ले-बाट |
| द्वि०- आफूलाई | आफू(हरू)लाई |
| तृ०- आफूले-बाट | आफू(हरू)ले-बाट |
| च०- आफूलाई | आफू(हरू)लाई |
| पं०- आफूदेखि-देखिन्-बाट | आफू(हरू)देखि-देखिन्-बाट |
| ष०- आफ्नो, आफ्नी, आफ्ना | आफ्नो,आफ्नी,आफ्ना,आफू(हरू)-[ को-की-का |
| स०- आफूमा | आफू(हरू)मा |

टि. आफू शब्दका रूपमा यी विशेष हुन्छन् :-

(१) द्वितीयामा लाई को लोप हुंदैन.

(२) अनेकवचनमा आदरार्थीमा हरू नहुने अनेकार्थीमा विकल्पले हुने हुन्छ.

(३) षष्ठीमा एकवचनमा हलन्त सामान्यरूप भई नो, नी, ना प्रत्यय, अनेकवचनमा हरू नभई एकवचनकै जस्तै वा सामान्यरूप फरक नभई हरू नित्यै भई ' को, की, का' प्रत्यय हुने हुन्छन्.

८७. तीनै लिङ्गमा एकै सम्बन्धी जो शब्दका रूप :–

| | |
|---|---|
| प्र०–जो, जुन, जसले-बाट, जल्ले | जो, जुन, जुनले-बाट |
| द्वि०-जो, जुन, जसलाई, जल्लाई | जो, जुन, जुनलाई |
| तृ०–जसले-बाट, जल्ले | जुनले-बाट |
| च०–जसलाई-के | जुनलाई-के |
| पं०–जसदेखि-देखिन्-बाट | जुनदेखि-देखिन्-बाट |
| ष०–जसको-की-का | जुनको-की-का |
| स०-जसमा | जुनमा |

( क ) नपुंसकलिङ्ग एकवचनमा मात्र हुने विशेष रूपः–

प्र०-जे, जेले तृ०–जेले पं०–जेदेखि-देखिन्-बाट स०–जेमा
द्वि०-जे च०–जेलाई ष०–जेको-की-का

टि. जो शब्दका रूपमा यी विशेष हुन्छन्.

(१) एकवचनमा सबैमा जस, लकारादि प्रत्यय भएमा जल् पनी, नपुंसकलिङ्गमा जे पनी, अनेकवचनमा सबैमा जुन यस्ता सामान्यरूप हुन्छन्.

(२) प्रथमा द्वितीयामा जे, जुन यी विशेषरूप पनी हुन्छन्.

(३) अनेकवचनमा अनेकार्थीमा पनी हरू जोडेर प्रयोग प्रसिद्ध छैन.

(४) नपुंसकलिङ्गमा हुने विशेष रूपको अनेकवचनमा प्रयोग हुंदैन.

## ८८. तीनै लिङ्गमा एकै प्रश्नार्थक को शब्दका रूप :–

| | |
|---|---|
| प्र०—को, कुन, कसले-बाट, कल्ले | को, कुन, कुनले-बाट |
| द्वि०-को, कुन, कसलाई, कल्लाई | को, कुन, कुनलाई |
| तृ०—कसले-बाट, कल्ले | कुनले-बाट |
| च०--कसलाई-के, कल्लाई | कुनलाई-के |
| पं०—कसदेखि-देखिन्-बाट | कुनदेखि-देखिन्-बाट |
| ष०—कसको-की-का | कुनको-की-का |
| स०-कसमा | कुनमा |

### ( क ) नपुंसकलिङ्ग एकवचनमा मात्र हुने विशेष रूपः–

| | | | |
|---|---|---|---|
| प्र०—के, केले | तृ०-केले | पं०-केदेखि-देखिन्-बाट | स०—केमा |
| द्वि०-के | च०-केलाई | ष०-केको-की-का | |

टि.को शब्दका रूपमा 'जो' शब्दमा झैं यी विशेष हुन्छन्:–

(१) 'जो' शब्दकै रीतले यसका कस, कल्, कुन, के यस्ता सामान्यरूप हुन्छन्.

(२) 'जो' शब्दमा झैं यसमा पनी अनेकार्थीमा हरू जोड्ने व्यवहार प्रसिद्ध छैन.

(३) प्रथमा द्वितीयामा को, कुन यी विशेष रूप पनी हुन्छन्.

(४) नपुंसकलिङ्गमा हुने विशेष रूपको अनेकवचनमा प्रयोग हुंदैन.

प्रश्न :–

(१) सर्वनामको रूपावलीमा कहाँ कहाँ कस्ता कस्ता सामान्यरूप हुन्छन् ? सर्वनाममा षष्ठीका विशेष प्रत्यय कस्ता कस्ता कहाँ कहाँ हुन्छन् ? सर्वनाममा 'हरू' प्रत्यय कहाँ नित्य, कहाँ विक-

त्पले हुन्छ ? नामको भन्दा सर्वनामको रूपावलीमा के के फरक हुन्छन् ?

(२) ' त्याहां, वाहां, याहां ' शब्दका रूप चलाऊ.

(३) तलका वाक्यमा परेका सर्वनाम-शब्दको लिङ्ग, वचन, विभक्ति छुट्याई कुनचाहीं कुन नामको सट्टामा आएका हुन ? सो बताऊः—

मानिसमा को सुख चाहंदैन ?, तिनीहरू त्यसलाई हरदम खोजी त्यसको निमित्त धेरै कोशीस गर्दछन्. " बाबाज्यू ! याहाँको निगाहाले मलाई आनन्द छ, याहींकै आशीर्वादले परीक्षामा पास भएँ; तेरो आफ्नो काम सँधै यस्तै सफल होओस् भन्ने तपाईंबाट आशीर्वाद भए त्यसमा कहिल्यै पनी फेल हुनेछैनं " भनी गोपालले लेखे. जसले अगाडि भनेथ्यो. उसैलाई त्यो दिएं. सीता रामकी प्यारी हुन्, उनले वाहांको संगमा वनमा पनी आनन्द मानिन्. राधाले आफ्नो दिलको प्रेमले कृष्णलाई वरण गरिन्, उन माथि उनको पनी सच्चा प्रेम थियो. ईश्वरले जे गर्नुहुन्छ, त्यसमा कसको रोकावट हुन शक्छ ? रामुले मेरो आफ्नै घरबाट त्यसले आफूलाई राखेको टोपी आफै लैजान लागेको देखेथे.



## १२–विशेषण. ( Adjective )

८९. कुनै नाम-पदार्थमा यस्तो यति इत्यादि केही गुण संख्याहरू बुझाउने शब्दलाई **विशेषण** ( Adjective ) भन्दछन्.

९० विशेषणले जुन नाम-पदार्थको यस्तो यति आदि केही गुणहरू बुझाएको छ, सो नाम-शब्दलाई **विशेष्य** ( Noun ) भन्दछन्.

जस्तै :– ' सेतो–घोडा, काली–गाई, राम्रो–पुस्तक, दश–बालक, केही–मानिस, पहिलो–विद्यार्थी, धेरै–रुपियां, असल–माल ' यहां पहिला शब्द विशेषण, दोस्रा शब्द विशेष्य हुन्.

टि. विशेषण–शब्द विशेष्य संग रहंदा विशेष्य पदार्थमा रहने केही गुणहरू बुझाई विशेष्यको कोरा अर्थलाई बढाउने, विशेष्यबाट सामान्य स्वरूपले बुझिने धेरै मध्यमा त्यस्तो किसिमका कुनैलाई बुझाई विशेष्यको प्रयोगलाई घटाउने हुन्छन्. जस्तै :-

' रातो--कपडा ' यहां कपडा शब्दबाट बुझिने सामान्य कपडामा रातो भन्नाले केही विशेष समेत बुझिई अर्थ बढ्ने, कपडा शब्द सबै किसिमका कपडा बुझाउन प्रयोग हुन शक्नेमा रातो भन्नाले रातो कपडा मात्र बुझाउन प्रयोग हुने हुनाले प्रयोग घट्ने हुन्छ, यस्त सबै ठाउंमा हुन्छ.

९१. एक विशेष्यमा एकै विशेषण हुने नियम छैन, मौका अनुसार अनेक पनी हुन्छन्. जस्तै :—

सच्चा, चलाक, दयालु—मानिस. बलियो, बाकलो, राम्रो कपडा. इत्यादि.

९२. विशेषण पनी नामकै अर्थ बुझाउने हुनाले तिनमा विशेष्यकै बराबर लिङ्ग, वचन, विभक्ति हुन्छन्; तर विशेषणमा वचनको ' हरू ' प्रत्यय, विभक्तिका ' ले, लाई ' आदि प्रत्यय केही नरही खालि सामान्यरूपको प्रयोग हुन्छ. जस्तैः

विद्वान्—मानिस, रातो—टोपीमा, कान्छो—छोरालाई, असल-विद्यार्थीहरूको, राम्रो—घरमा, चारौं—विद्यार्थीले, चलुवी—केटीले. इत्यादि.

९३. विशेषण-शब्दको सामान्यरूप हुंदा नामको नियम बमोजिम पुं० नपुं० ओकारान्त शब्द अनेकवचनमा आकारान्त हुन्छन्, अरू शब्दमा केही फरक हुंदैन. जस्तै :—

एक—गोरो—छोरो, कालो—कोट, ठुलो—मानिस, बेस—माल.

अनेक—गोरा—छोरा, काला—कोट, ठुला—मानिसले, बेस—मालहरू. इत्यादि.

९४. स्त्रीलिङ्ग विशेष्य हुनाले स्त्रीलिङ्ग भएका विशेषणमा स्त्रीप्रत्यय हुने नहुने नियम यस्ता छन् :—

( १ ) सबै ओकारान्त र प्रायः हा, वा, टा अन्त्य हुने आकारान्त विशेषण-शब्द स्त्रीलिङ्गको एकवचन र आदरार्थीमा मात्र ई प्रत्यय भई ईकारान्त हुन्छन्, अनेकार्थीमा भने अरूमा झैं आकारान्त हुन्छन्. जस्तै :-

( अ ) पुं० नपुं० एकवचनमा-

कालो-मानिस, छोटो-कोट, लाटो-केटो, राम्रो-पुस्तक. एउटा, बहुलाहा, छुल्याहा, भणुवा, खञ्चुवा-केटो. एउटा-पुस्तक

(आ) स्त्रीलिङ्गको एकवचन र आदरार्थीमा-

काली, लाटी, सानी, नराम्री-केटी छ. राम्री, गोरी, टुलीदिदी गइन. एउटी, लाटी, बहुलाही, छुल्याही, चलुवी, खञ्चुवी-केटी छ वा छन्.

( इ ) पुंलिङ्गको आदरार्थी र तीनै लिङ्गका अनेकार्थीमा-

एउटा, राम्रा, साना-केटा छन्. ती छुल्याहा, भणुवा, छोटा-छन्. दोटा, राम्रा, साना-छोराहरू, छोरीहरू छन्. तिनीहरू-बहुलाहा, भणुवा छन्.

( २ ) अरू अजन्त हलन्त विशेषणशब्द प्रायः स्त्रीलिङ्गमा फरक हुंदैनन्. जस्तै :-

बेस, असल, खराप, चार, साधा, आधा, जाति, दुइ, नकली,

साधु, ठालु, पाटे, पर्वते, दशौं—मानिस, मानिसहरू, स्त्री, स्त्रीहरू, काम, कामहरू.

( क ) स्वभाव, देश, गुणहरू, बुझाउने मानिसलाई कहने अ, या, ई, ए अन्त्य हुने विशेषण-शब्द स्त्रीलिङ्ग हुंदा सबै वचनमा नाममा हुने नियम बमोजिम इनी, एनी, नी यी स्त्रीप्रत्यय हुने र माथिको नियम बमोजिम उस्तै रहने पनी हुन्छन्. जस्तै :—

चतुर, चतुर्नी; भक्त, भक्तिनी, भक्तेनी; सिद्ध, सिद्धिनी, सिद्धेनी; सहरिया, सहरिनी; पूर्विया, पूर्वेनी, पूर्विनी; अभागी, अभागिनी; गफी, गफिनी; कपटी, कपटिनी; पाखे, पखिनी; कांठे, कंठिनी, कंठेनी—स्त्री, स्त्रीहरू.

९८. विशेषण-शब्द प्रयोगको हिसाबले उद्देश्य र विधेय यस्ता दुइ किसिमका हुन्छन.

( १ ) आफ्नो विशेष्य भन्दा पहिले रही विशेष्य संगै साक्षात् ( सोझै ) सम्बन्ध हुने विशेषणलाई **उद्देश्य-विशेषण** ( Attributive-Adjective ) भन्दछन्. जस्तै :—

पहिला विद्यार्थीलाई ठुलो इनाम देऊ. पढेका मानिसको सबै ठाउंमा सारा सज्जनले ठुलो आदर गर्दछन्. मीठो फल खाएँ. इत्यादि.

( २ ) आफ्नो विशेष्य भन्दा पछाडि प्रायः क्रिया बुझाउने पद नेर रही सो क्रिया द्वारा विशेष्य संग सम्बन्ध हुने विशेषणलाई **विधेय-विशेषण** ( Predicative-Adjective ) भन्दछन्. जस्तै :–

गोपाल जांचमा पहिला भए. आँप मीठो छ. लुगा सफा राख. वैद्यले बेरामीलाई निको पारे. काम सिद्ध भयो. कुरा पक्का गरेर आऊ. इत्यादि.

टि. उद्देश्य-विशेषण हुंदा मुख्य लक्ष्य ( दृष्टि ) विशेष्यैमा रहने हुनाले विशेषण भन्दा विशेष्य प्रधान भएर बुझिन्छ. विधेय-विशेषण हुंदा मुख्य लक्ष्य विशेषणमा रही सो विशेषण वाक्यको विधेय-भागमा पर्ने हुनाले विशेष्य भन्दा प्रधान भएर बुझिन्छ.

९६. विशेषण मुख्य चार प्रकारका हुन्छन् :–

( १ ) गुणबोधक. ( Qualitative )
( २ ) परिमाणबोधक. ( Quantitative )
( ३ ) संख्याबोधक. ( Numeral )
( ४ ) सार्वनामिक. ( Pronominal )

## ( १ ) गुणबोधक ( Qualitative )

९७. आफ्नो विशेष्यको यस्तो भन्ने केही गुण अवस्थाहरू बुझाउने विशेषणलाई 'गुणबोधक' भन्दछन्. जस्तै:–

मोटो मानिस, दुब्लो बालक, मीठो आँप, रातो लुगा, खाने वस्तु, गोरखाली सिपाही, पढेको पाठ, बल्दो आगो, बुढो घर्ति. यस्तैः— असल, खराप, जाति, लठ्ठक, धोक्रे, दैलखे, दिएको, जान्ने इत्यादि.

(क) धेरै विशेषण यही किसिमका हुन्छन, यिनमा कोही **सामान्य** ( Common ), कोही विशेषनामबाट बनेका **विशेष** ( Proper ) हुन्छन्. जस्तैः—

सामान्य—राम्रो, असल, खराब, बुढो, मूर्ख, पढेको, जान्ने इ०

विशेष—नेपाली, दैलखे, पाल्पाली, अछामी, ठिमिले. इ०

टि. विशेषणमा तारतम्य बुझाउंदा संस्कृतमा 'तर, तम' आदि, अंग्रेजीमा 'er, est' आदि जोडदा तीन श्रेणी गराउने तारतम्य-बोधक-विशेषण हुन्छन्. हाम्रो भाषामा त्यस्ता प्रत्ययहरू केही जोडिंदैनन्, 'अति, खूप, चौपट्ट, झन्' आदि शब्द जोडेर वा 'त्यस भन्दा, सबै भन्दा' शब्द जोडेर तारतम्य बुझाउनुपर्दछ. संस्कृतबाट आएका शब्द उहां इं 'तर, तम' जोडिएर पनी प्रयुक्त हुन्छन्. जस्तैः-

(क) राम्रो, खूप राम्रो, चौपट्ट राम्रो. मूर्ख, अति मूर्ख, बहुतै मूर्ख. गुलियो, अलिकति गुलियो, अलीकति गुलियो.

(ख) गोपाल चलाक छ, गोपाल गोविन्द भन्दा चलाक छ, गोपाल सबै भन्दा चलाक छ. त्यो राम्रो छ, त्यस भन्दा राम्रो छ, सबै भन्दा राम्रो छ. इ०

(ग) प्रिय, प्रियतर, प्रियतम. मूर्ख, मूर्खतर, मूर्खतम. उच्च, उच्चतर, उच्चतम. इ०

## ( २ ) परिमाणबोधक ( Quantitative )

९८. आफ्नो विशेष्यको यति भन्ने केही परिमाण बुझाउने विशेषणलाई ' परिमाणबोधक ' भन्दछन्. जस्तै :-

अलिकति पानी, धेरै दूध, सबै काम, आधा काम, केही धैर्य. यस्तै :- थोरै, तमाम, यावन्त, यति, उति, यतिको, त्यति, कति. इत्यादि.

( क ) परिमाणबोधक विशेषण प्रायः भाववाचक, द्रव्यवाचक नाम संग जोडिन्छ, त्यसको विशेष्य नाम एकवचनान्त हुन्छ.

## ( ३ ) संख्याबोधक ( Numeral )

९९. आफ्नो विशेष्यको यति यतिऊ आदि केही संख्या बुझाउने विशेषणलाई ' संख्याबोधक ' भन्दछन्. जस्तै :-

चार पुस्तक, दशवटा फल, पहिलो मानिस, प्रत्येक बालक, दुगुना रुपिञा, दोहरो लुगा. यस्तै :- दोस्रो, चौथो, पचाश, शय, हजार, दुइ, तीन. इ०

१००. संख्याबोधक विशेषण कोही **निश्चितसंख्याबोधक** अर्थात् कुनै संख्या तोकेर बुझाउने, कोही **अनिश्चितसंख्याबोधक** अर्थात् संख्यालाई अनिश्चित स्वरूपले बुझाउ-

ने, कोही **विभागबोधक** अर्थात् प्रत्येक विभागको संख्या बुझाउने यस्ता तीन किसिमका हुन्छन्. निश्चितसंख्याबोधक पनी कोही **संख्यामात्रबोधक** अर्थात् खालि संख्या बुझाउने, कोही **क्रमबोधक** अर्थात् क्रमिक संख्या बुझाउने, कोही **आवृत्तिबोधक** अर्थात् आवृत्तिको संख्या बुझाउने यस्ता तीन किसिमका हुन्छन्. जस्तै :–

(१) निश्चितसंख्याबोधक ( Definite-Numeral )

( क ) संख्यामात्रबोधक ( cardinal )
एक, दुइ, तीन, दश, पचाश, लाख, एकतीस. इ०

( ख ) क्रमबोधक ( Ordinal )
पहिलो, दोस्रो, चौथो, पाचौं, एघारौं, शयौं. इ०

( ग ) आवृत्तिबोधक ( Multiplicative )
दुगुना, तिगुना, चौगुना, दोवर, दुइसरो, दोहोरो. इ०

(२) अनिश्चितसंख्याबोधक. ( Indefinite-Num. )
केही, सबै, धेरै, थोरै, अलिकति, तमाम, हजारन. इ०

(३) विभागबोधक. ( Distributive-Numeral )
प्रत्येक, हरएक, एकेक, दुइदुइ, तीनतीन, तीतीन, ददश इ०

टि· १ 'धेरै, थोरै, सबै, केही, तमाम यावत्, यावन्त, यति, उति, त्यति, कति' इत्यादि शब्द कहीं संख्येय अर्थात् गिन्ति हुने पदार्थ

बुझाउंदा अनिश्चितसंख्याबोधक, कहीं परिमेय अर्थात् नाप तौल हुने पदार्थ बुझाउंदा परिमाणबोधक भई दुवै किसिमका हुन शकछन्. एकवचनान्त द्रव्यवाचक भाववाचक नाम विशेष्य भएमा परिमाणबोधक, अरू किसिमका नाम विशेष्य भएमा संख्याबोधक भई विशेष्य अनुसार छुट्टिने हुन्छन्. जस्तैः–

(क) अनिश्चितसंख्याबोधक–

धेरै मानिस, सवै पल्टनहरू, तमाम विद्याहरू, थोरै जना.

(ख) परिमाणबोधक–

धेरै पानी, थोरै दूध, केही माटो, सबै सुन, धेरै दुःख.

टि. २ ‘ अन्दाजी, करीव, पुगनपुग ’ आदि शब्द जोडेमा निश्चितसंख्याबोधक पनी अनिश्चितसंख्याबोधक हुन्छ. जस्तै :–

अन्दाजी पचास जना, करीव दश तोला. पुगनपुग शय जना.

टि. ३ निश्चितसंख्याबोधक ‘ एक, एउटा ’ शब्द कहीं अनिश्चितसंख्याबोधक हुन्छन्. जस्तै :–

एक देशमा एउटा राजा थिए, तिनकी एउटी रानी थिइन्.

टि. ४ ‘ पचाश, शय, हजार, लाख ’ आदि शब्दबाट निश्चय भएको संख्या बुझिन्छ, तिनमा औं, आं, अन् आदि जोडिएका ‘ पचाशौं, पचाशां, पचाशन्, लाखन्, हजारौं ’ आदि शब्दबाट अनिश्चित भएका धेरै पचाश आदि संख्या बुझिन्छन्.

## ( ४ ) सार्वनामिक ( Pronominal )

१०१. अर्को विशेष्य राखी त्यसको विशेषण बनाई प्रयोग

गरेका ' त्यो, यो, उ, जो, को ' यी सर्वनामशब्द-स्वरूप विशेषणलाई ' सार्वनामिक ' भन्दछन्.  जस्तै :–

त्यो मानिस, यो किताप, उ घर, जो विद्यार्थी, कुन घर. इ०

टि. ' त्यो, यो, उ, जो, को ' शब्द अर्को विशेष्य नराखी नामको सट्टामा प्रयोग गरिएमा सर्वनाम, अर्को विशेष्य राखी प्रयोग गरिएमा विशेषण हुन्छन्.  जस्तै :–

सर्व—त्यो ल्याऊ. जसलाई दिन्छौ, त्यसलाई देऊ. के भयो. ?

विशे—त्यो माल ल्याऊ. जस मानिसलाई दिन्छौ, त्यस मानिसलाई देऊ. के कुरा भयो. ?

१०२. ती सार्वनामिक विशेषण अघिको सर्वनामको विभाग अनुसार तीन किसिमका हुन्छन् :–

( १ ) दर्शक-विशेषण ( Demonstrative ) त्यो,यो,उ

( २ ) सम्बन्धी-विशेषण ( Relative )  जो

( ३ ) प्रश्नार्थक-विशेषण ( Interrogative ) को

१०३. सर्वनाम शब्द विशेषण हुंदा विशेषणको सामान्य नियम बमोजिम सामान्यरूप मात्र भएर प्रयोग हुन्छन्. सामान्यरूप यस्ता हुन्छन् :–

| | एकवचनमा | अनेकवचनमा |
|---|---|---|
| त्यो शब्दका— | त्यो, सो, त्यस | ती |
| यो शब्दका— | यो, यस | यी |

| | |
|---|---|
| उ शब्दका—उ, उस | ऊ |
| जो शब्दका—जो, जुन, जस | जो, जुन |
| को शब्दका—को, कुन, कस | को, कुन |

जस्तै :– को मानिस आयो ? जस मानिसले देखेको छ, त्यस मानिसलाई सोध. उ पुस्तकमा यी कुरा छन्. कुन विद्यार्थी त्यो जांचमा पास भएन ? यो केटो उल्लू छ. इ०

टि. १ यी सामान्यरूपमा ' त्यस, यस, उस, कस ' यी अस भएकाचाहीं विभक्ति प्रत्यय रहेका विशेष्य भएमा मात्र, अरूचाहीं सबै ठाउंमा प्रयुक्त हुन्छन्. जस्तै :–

त्यस उल्लूले यस केटालाई कुट्यो. कस मानिसले यो कुरा गऱ्यो त्यो किताप राम्रो छ. जुनचाहीं विद्यार्थीको बुद्धि तीखो छ, उहीचाहीं विद्यार्थीलाई अघि सार. त्यो ग्रन्थमा कठिन विषय छन्.

टि. २ विशेषण हुंदा पनी अघि लेखेका झैं ' ही ऐ सुकै चाहीं ' आदि जोडिंदा अनिश्चयबोधक, अवधारणबोधक, निर्द्धारणबोधक हुन्छन्. जस्तै :–

अनिश्चय ०—जुनसुकै मानिसले, जोसुकै विद्यार्थी, कुनै केटा.

अवधारण०—त्यसै पुस्तकमा, उही मानिसको, उनै विद्यार्थीले.

निर्द्धारण ०—त्योचाहीं घरमा. उसचाहीं कितापको.

टि. ३ दर्शक, सम्बन्धी, प्रश्नार्थक सर्वनामबाट बनेका विशेषण शब्द पनी दर्शक, सम्बन्धी, प्रश्नार्थक हुन्छन्. जस्तै :–

दर्शक——यस्तो त्यस्तो उस्तो. इ० त्यस्तो माल ल्याऊ. यस्तो काम नगर.

सम्बन्धी–जस्तो, जति. " जस्तो लुगा लाउंछौ, उस्तै लुगा ल्याउंछु.

प्रश्नार्थक–कस्तो, कति " कस्तो कुरा भयो.? कति मानिस छन्. ?

टि. ४ विशेषण भएका सर्वनाम वा सर्वनामबाट बनेका शब्द आफ्नो अर्थ अनुसार अघिका नियम बमोजिम संख्याबोधक, परिमाणबोधक पनी हुन्छन्.

१०४. विशेष्य अर्को नराखी विशेषण जातका शब्दलाई नै मुख्य गरी प्रयोग गरेमा ती विशेषणशब्द नाम बन्दछन्. त्यस्तामा नामकै नियम बमोजिम वचन विभक्ति प्रत्ययहरू हुन्छन्. जस्तै :–

बुढालाई नजिस्क्याऊ. पांचमा परमेश्वर हुन्छन्. गुलियो कफ बढाउंछ. चारबटीलाई डाक. पहिलाहरू इनाम पाउनेछन्. सबै आए.

( क ) विशेषणशब्द नाम भएमा माथि लेखे बमोजिम स्त्रीप्रत्यय हुने स्त्रीलिङ्ग शब्दमा एकवचन र आदरार्थीमा झैं अनेकार्थीमा पनी प्रायः स्त्रीप्रत्यय गरेर व्यवहार हुन्छ. जस्तै :-

बहुलाहीहरू नाच्न लागे. दोटीलाई यहां डाक. लाटीहरू देखिए. बुढीहरू गए. कालीहरूको चाहा छैन. नटुबीहरू बेशर्म हुन्छन्.

( ख ) नाम बनेका विशेषणशब्दमा नामको नियम बमोजि-

म अरू विशेषण जोडेर पनी व्यवहार हुन्छ. जस्तै :–

रांम्रा दशवटी आए. धेरै बुढाले भनेको मान्नुपर्दछ. ठुला विद्वान्को लेखोट गहिरो हुन्छ. त्यहां चार मूर्ख जम्मा छन्.

१०५. कहीं एकैलाई कहने नाम संग प्रयोग गरेमा नाम पनी अर्को नामको विशेषण हुन्छ, त्यस्ता विशेषण भएका नामशब्दबाट त्यस किसिमको भन्ने अर्थ बुझिन्छ. यिनको पनी विशेषणको नियम बमोजिम सामान्यरूप प्रयोग हुन्छ. जस्तै :-

लोग्ने ( पुरुष जातको ) मानिस, स्वास्नी ( स्त्री जातकी ) मानिस. यस्तैः–

भाले भङेरो, पोथी भङेरो; मर्द जात, जनाना जात; पुरुष देवता, स्त्री कवि. इत्यादि

टि. १ कहीं बेगलै बेगलै वस्तुलाई कहने अनेक नाम संग प्रयोग गरेमा पनी तुल्यता आदि अर्थको तात्पर्यले एकै वस्तु बुझाउने गरी एक नाम अर्को नामको विशेषण हुने हुन्छ. जस्तैः–

गोरु (गोरू जस्तो मूर्ख) शिष्यलाइ पढाएर यश हुंदैन. नारद ( नारद झैं छुल्छुले ) स्वास्नी खराप हुन्छे. पानी ( पानी झैं पातलो ) दूधले फायदा गर्दैन. यो रावण ( रावण झैं क्रूर ) छोराले दुःख दियो.

टि. २ 'रातो, कालो, एक, दोस्रो, पढेको' इत्यादि किसिम देखाउने शब्द विशेषण, 'बाहुन, उपाध्याय, रामे, धैर्य, राश, सुन' इत्यादि जाति, पदवी, व्यक्ति, धर्म, समूह, द्रव्य बुझाउने शब्द नाम हुन्. कहीं किसिम देखाउने शब्द पनी अर्को विशेष्यका साथमा

नरही एकलै प्रयुक्त भएमा नाम जस्ता, कहीं जाति पदवी आदि बुझाउने शब्द पनी अर्को विशेष्यका साथमा रही किसिम बुझाउने जस्ता भई प्रयुक्त भएमा विशेषण जस्ता हुन्छन्; सो अर्थ हेरी छुत्याउनुपर्दछ.

टि. ३ 'पण्डित, मित्र, ज्योतिषी, विद्वान, वैद्य, योद्धा, वीर' आदि कुनै शब्द जाति पदवी आदि बुझाउने हुनाले नाम हुन र, केही किसिम समेत बुझाउने हुनाले विशेषण हुन पनी शक्के हुन्छन्, यस्तालाई जातिहरू बुझाउने तात्पर्य संग प्रयोग गरेमा नाम, किसिम बुझाउने तात्पर्य संग प्रयोग गरेमा विशेषण भनि छुत्याउनू. जस्तैः-

नाम–नेपालीहरू आस्तिक हुन्छन्. पण्डितको अपमान नगर. हामी नेपाली बोल्दछौं. मित्रको उन्नति सबै चाहन्छन्.

विशे–हामी नेपाली ( नेपाल देशको ) भाषा बोल्दछौं. पण्डित ( विद्या भएका ) मानिसले भनेको योग्य हुन्छ. मित्र ( मित्रता भएका ) जनको उन्नतिले सन्तोष हुन्छ.

## प्रश्न :–

(१) विशेषण भनेको के हो ? विशेषणका कति भेद हुन्छन् ? उद्देश्य विधेय विशेषण कस्ता कस्ता हुन् ? सार्वनामिक संख्याबोधक विशेषणका कति कति भेदछन् ? विशेषणको कुन लिङ्ग, वचन विभक्तिमा कस्तो सामान्यरूप भएर प्रयोग हुन्छ ? विशेष्य भनेको के हो ? सर्वनाम विशेषण हुंदा कस्तो सामान्यरूप हुन्छ? ( संख्याबोधक, सार्वनामिक, परिमाणबोधक विशेषणमा के के कुरा विशेष हुछन् ? विशेषण र नाम शब्दको के फरक हुन्छ ?) नाम विशेषण, विशेषण नाम कस्ता ठाउंमा हुन्छन्, तिनमा के विशेष हुन्छ ?

(२) तलका वाक्यमा परेका विशेषण विशेष्यको बयान गरः–
इलमी मानिस परिश्रमी हुन्छ. जुन कुरा म भन्दछु, त्यस भन्दा हित कुरा अर्को पाउनेछैनौ. बुढापाकालाई सबैले मानी यिनको सच्चा उपदेश लिनुपर्दछ. वानर केटाकेटीले सारै दुःख दिए. दशौं बदमासले कडा सजाय पायो. सहरिया बजारमा पर्वतेहरू माल किन्न आउंछन्. पाल्पाली अंखराको बानगी बहुतै राम्रो हुन्छ. अछामी गाईहरू सानो ज्यू भए पनी अरू त्यत्रै गाई भन्दा धेरै दूध दिने हुन्छन्. धेरै माटो रहेछ.



## १३–क्रियापद. ( Verb )

१०६. केही हुनु गर्नु आदि काम अर्थात् व्यापार बुझाएर कुरा पूरा गर्ने शब्दलाई **क्रियापद** ( Verb ) भन्दछन्.

जस्तै :– ' म जान्छु. बालकहरू खेल्दछन्. तिमी के पढ्दछौ ? घोडा दौड्छ. हामीले चिठी लेख्यौं. ' यहां जानु, खेल्नु, पढ्नु, दौड्नु, लेख्नु क्रिया बुझाएर कुरा पूरा गर्ने ' जान्छु, खेल्दछन्, पढ्दछौ, दौड्छ, लेख्यौं. ' यी क्रियापद हुन्.

टि. ' ने, एको ' आदि प्रत्यय भई बनेका ' जाने, देखेको, लेखेर, पढ्न ' आदि कृदन्त शब्दबाट पनी क्रिया बुझिन्छ; तर त्यस्ता पद कुरा पूरा नगर्ने हुनाले क्रियापद हुंदैनन्. जस्तै :–

' म पुस्तक लिएर पाठशालामा जान्छु. गाईलाई घांस खान देऊ. तपाईंले बोलाउंदा त्यो आयो.' यहां ' म पुस्तक लिएर, गाईलाई घास खान, तपाईंले बोलाउंदा ' यति मात्र भनेमा ' लिएर, खान, बोलाउंदा ' यी क्रिया बुझाउने कृदन्त शब्द भए पनी कुरा पूरा हुंदैन; ' जान्छु, देऊ, आयो ' यी क्रियापद समेत प्रयोग गरेमा कुरा पूरा हुन्छ.

१०७. वाक्यमा क्रियापद कहीं स्पष्टै देखिन्छ, कहीं दबेको हुन्छ, दबेकोचाहीं मौकाहरूबाट बुझ्नुपर्दछ. जस्तै :—

यो को हो ?, यो मेरो छोरो (हो). पहिले रामु गए, अनी गोपाल ( गए ). यो काम तिमी गर्छौ कि, त्यो ( गर्दछ )? यहां मेरा दाज्यू ( हुनुहुन्छ ).

१०८. क्रियालाई कर्ताको र प्रायः कर्मको पनी आवश्यकता हुन्छ.

( १ ) क्रिया बुझिएका ठाउंमा प्रत्येक क्रियामा ' त्यो काम गर्ने को हो ?' भन्ने प्रश्न उठ्तछ, सो प्रश्न पूरा गर्ने सो काम गर्ने पदार्थलाई **कर्ता** ( Agent ), त्यो बुझाउने शब्दलाई **कर्तृपद** भन्दछन्. जस्तै :—

' बालकहरू खेल्दछन्. विद्यार्थीहरूले पाठ घोके. गोठालो गाई दुहुन्छ' यहां ' खेल्दछन्, घोके, दुहुन्छ ' यी क्रियापद हुन; ' को खेल्ने ?, को घोक्ने ?, को दुहुने ? ' यी प्रश्नको उत्तरमा आउने ' बालक, विद्यार्थी, गोठालो ' यी प-

दार्थ कर्ता, तिनलाई बुझाउने ' बालकहरू, विद्यार्थीहरूले, गोठालो ' यी शब्द कर्तृपद हुन्.

( २ ) क्रिया बुझिएका ठाउंमा बहुधा ' के गरिने ? ' भन्ने प्रश्न पनी उठ्तछ, सो प्रश्नको उत्तरमा आउने पदलाई **कर्मपद** ( Object ) भन्दछन्. जस्तै :–

' विद्यार्थीहरूले पाठ घोके. गोठालो गाई दुहुन्छ. रामु चिठी लेख्तछन्. ' यहां ' के घोकिने ?, के दुहिने ?, के लेखिने ? ' यस्ता प्रश्नका उत्तरमा आउने हुनाले ' पाठ, दूध, चिठी ' यी शब्द कर्मपद हुन्.

टि. ' कर्ता, कर्म, क्रिया ' भनेका अर्थ हुन्, तिनलाई बुझाउने शब्दलाई ' कर्तृपद, कर्मपद, क्रियापद ' भन्नुपर्दछ. तर छोटकरी गरेर ती पदलाई पनी ' कर्ता, कर्म, क्रिया ' भनेर व्यवहार गर्दछन्.

१०९. क्रिया वा क्रियापद सकर्मक अकर्मकका भेदले दुइ किसिमका हुन्छन्.

११०. जुन क्रियामा कर्मको अपेक्षा (प्रश्न) हुन्छ, सो क्रियालाई **सकर्मक** ( Transitive ); जुन क्रियामा कर्मको अपेक्षा ( प्रश्न ) हुंदैन, सो क्रियालाई **अकर्मक** ( Intransitive ) भन्दछन्. जस्तै :–

' बाबाले इनाम दिनुभयो. पुलिसले चोरलाई पक्र्यो. मैले

चिठी लेखें ' यहां 'के दिइने ?–इनाम, को पक्रिने ?–चोर, के लेखिने ?–चिठी ' यस्ता प्रश्न उत्तर हुने हुनाले यी क्रिया सकर्मक हुन्. ' बालक रोयो. गोपाल जान्छ. म वस्तछु ' यहां ' के गरिने ? ' यस्तो प्रश्न उत्तर नहुने हुनाले यी क्रिया अकर्मक हुन्.

( क ) सकर्मक क्रियाको सामान्य–भूतकालको क्रियापद राखेमा त्यसको कर्तामा ले रहने हुन्छ, अकर्मक क्रियाको कर्तामा ले नरहने हुन्छ. ' जस्तै :–

सक०–मैले चिठी लेखें. रामुले मलाई कुटे. तिमीले पाठ पढ्यौ.

अक०–छोरो रोयो. म वसें. हामी जान्छौं. चोर भाग्यो. इ०

यस्तै :– ' गर्नु, खानु, देख्नु, भन्नु, सुन्नु, दिनु, जान्नु, सोध्नु ' आदि सकर्मक, ' हुनु, जानु, खेल्नु, शक्नु, वह्नु, वर्षनु, घट्नु, बढ्नु ' आदि अकर्मक हुन्.

टि. कुनै क्रियाको व्यापार भन्नैं फल ( असर ) पनी कर्तामै रहने हुन्छ, कुनै कियाको कर्तामा व्यापार मात्र रही त्यसबाट हुने फल ( असर ) कर्ता भन्दा बेगलै अर्कामा जाने हुन्छ; जुन अर्कामा सो फल जान्छ सोही कर्म हुन्छ. व्यापार र फल दुवै कर्तामा रहने भएका क्रिया कर्म नहुने हुनाले अकर्मक, कर्ता भन्दा बेगलैमा फल जाने भएका किया कर्म हुने हुनाले सकर्मक हुन्छन्. जस्तै :–

' बालक खेल्दछ ' यहां खेल्ने व्यापार र त्यसको असर पनी

कर्ता बालकैमा रहने हुनाले यस्तो क्रिया अकर्मक, ' कर्मी काठ काट्‌तछ ' यहां काट्‌ने व्यापार कर्ता कर्मीमा रहने, त्यसको असर कर्म काठमा रहने हुनाले यस्तो क्रिया सकर्मक हुन्छ.

१११. सकर्मक क्रियामा पनी कहीं कर्म प्रसिद्ध हुनाले वा कर्म देखाउने इच्छा न हुनाले पनी कर्मको प्रयोग न हुने हुन्छ. जस्तै :–

बांडा लेख्तछ. आगाले पोल्दछ. धर्मले उतार्दछ. गरीब माग्दछ. इत्यादि.

११२. कोही अकर्मक क्रिया सोही क्रिया बुझाउने भाववाचकनामलाई कर्म तुल्याई प्रयोग गरेमा सकर्मक हुन्छन्. जस्तैः-

यसले चार लडाइ लड्यो. यो राम्रो चाल चल्दैन. तिनी लामो हांसो हांस्तछन. यो घोडाले पहिलो दौड दौड्यो. इ०

११३. क्रिया आफ्नो अर्थको हिसावले कोही पूर्ण, कोही अपूर्ण हुन्छन्.

११४. जहां अकर्मकमा कर्म–रहित, सकर्मकमा कर्म–सहित क्रियापदैबाट पूरा व्यापार बुझिई अर्काको अपेक्षा हुंदैन, त्यस्तो क्रियापदलाई पूर्ण–क्रियापद भन्छन्. जस्तै :–

म जान्छु. बालक रोयो. किताप ल्याऊ. यो नाच हेर्छ. इ०

११५. जहां अकर्मकमा कर्म–रहित, सकर्मकमा कर्म–सहित क्रियापदबाट मात्रै पूरा व्यापार नबुझिई अर्थ पूरा गर्ने अर्को

पदको अपेक्षा हुन्छ, त्यस्तो क्रियापदलाई अपूर्ण–क्रियापद ( Incomplete-verb ) भन्दछन्. जस्तै :–

त्यो राम्रो–छ. म धनी–हुन्छु. रामलाई राजा–तुल्याए. त्यो सफा–गर. इ०

११६. अपूर्ण-क्रियापदमा अर्थ पूरा गर्ने कर्म भन्दा बेगलै किसिमको शब्दलाई **पूरक** ( Complement ) भन्दछन्.

११७. सो पूरक दुइ किसिमको हुन्छ :–

( १ ) अकर्मकमा **कर्तृसम्बन्धी**–पूरक. ( Subjective-complement ) जस्तै :–

त्यो राम्रो–छ. म धनी–हुनेछु. त्यो कुरा बेस–हो. लड्डु मीठो–लाग्दछ. इत्यादि

( २ ) सकर्मकमा **कर्मसम्बन्धी**–पूरक. ( Objective-complement ) जस्तै :–

रामलाई राजा-तुल्याए. यो राम्रो-बनाऊ. उ बलियो-पार.इ०

टि० १ अकर्मकमा ' हुनु, लाग्नु, पर्नु ' आदि क्रिया, सकर्मकमा ' तुल्याउनु, बनाउनु, ठान्नु, मान्नु, गर्नु, पार्नु ' आदि क्रिया प्रायः पूरक चाहिने हुन्छन्. जस्तै :–

( क ) मलाई लड्डु निको–लाग्दछ. बेरामी निको–भयो. चोर फेला–पऱ्यो.

( ख ) त्यसलाई फेला–पार. घर राम्रो–बनाए. यो बेस–ठान्दछु. त्यो सफा–गर.

टि. २ पूरक शब्द ठाउं हेरी नाम विशेषण आदि हुन्छन्. जस्तै :—

नाम—राम राजा—भए. यी मित्र—हुन्. गोपाल सज्जन—छन्.

विशे—यो वेस—हो. काम सिद्ध—गर. आंप गुलियो—छ.

टि. ३ पूरक चाहिने क्रिया पनी कहीं अर्थ-विशेषमा पूर्ण हुन शक्तछन्. जस्तै :—

छोरो घरमा छ. छोरी भई. घर बनाएं. कलम कता पऱ्यो ? रक्सी लाग्दछ. वेरामीलाई औषधि पारें. तपाईंको कुरा मान्दछु.

## प्रश्न :—

( १ ) क्रियापद भनेको के हो ? क्रियापदको आवश्यकता कत्तिको हुन्छ ? कर्ता कर्म भनेका के के हुन् ? सकर्मक अकर्मक भनेका कस्ता कस्ता हुन् ?, कसरी छुट्टिन्छन् ? अकर्मक पनी सकर्मक कसरी हुन्छ ? पूर्ण अपूर्ण क्रिया भनेका कस्ता कस्ता हुन् ? पूरक कस्तो किसिमको हुन्छ ?

( २ ) तलका वाक्यमा परेका क्रियापद सकर्मक, अकर्मक, पूर्ण, अपूर्ण कस्ता छन् ? कर्ता, कर्म, पूरकहरू भए तिनको समेत बयान गर :—

अङ्गारले हात कालो गर्दछ. गर्मीमा पानी तातो हुन्छ. कितापले पत्र थिच. त्यसलाई हामी राम्रो देख्नेछौं. यसलाई बहुलाहा नतुल्याऊ. तिमीले कति खेल खेल्यौ ? बटुवाहरू वास वसे. रुख रुखमा वानर नाच्तछन्. यसको भाउ महगो भयो. बल्ल दाउ लाएं. केटाकेटीहरू वेकाममा हांस्तछन्. आज राति दुइ नीद सुतें. के भयो ?



## १४–क्रियापदको रूपभेद.

### ( Inflection of verbs )

११८. जुन मूल शब्दबाट प्रत्ययहरू भई क्रियापदहरू बन्द-छन्, सो मूल शब्दलाई **धातु** ( Root ) भन्दछन्.

( क ) धातुबाट ' छु, छौं, एँ, यौं ' आदि तिङ्प्रत्यय भई कुरा पूरा गर्ने तिङन्त शब्द अर्थात् क्रियापद र, ' ने, एको, तो, दो ' आदि कृत्प्रत्यय भई कुरा पूरा गर्न नशक्ने कृदन्त शब्द अर्थात् नाम, विशेषण, अव्ययहरू बन्दछन्. जस्तै :–

| धातु. | क्रियापद. | कृदन्त. |
|---|---|---|
| गर्— | गर्छु, गर्छौं, गर्ला, गरून्. इ० | गर्नु, गर्दो, गरेको, इ० |
| खा— | खान्छु, खान्छौं, खाला. " | खानु, खांदो, खाने. " |
| आउ- | आएँ, आयौं, आउला. " | आउनु, आएको " |
| दि— | दियो, दिए, देलान्. " | दिनु, दिई, दिएर. " |
| वह— | वह्यो, वहे, वहनेछ, वहनन्. " | वहनु, वहेर, वहन. " |

यस्तै :– वस्नु, लिनु, जानु, पाउनु, दुहुनु, सिद्धिनु, हुनु, समनु, लेख्नु, पढ्नु, दौडनु, तौलनु, कहनु, नुहुनु, सिउनु, रुनु, धुनु, लैजानु आदि क्रिया बुझाउने भाववाचकनाममा नु-प्रत्य-

यको भाग कट्टा गरी बांकि रहने ' बस्, लि, जा, पाउ, दुहु, सिद्धि, हु, सम, लेख्, पढ्, दौड, तौल, कह, नुहु, सिउ, रु, धु, लैजा ' यस्ता मूल शब्द धातु हुन.

११९. धातुबाट वाच्य, अर्थ, काल, लिङ्ग, पुरुष, वचनहरूका भेदले धेरै थरी प्रत्ययहरू भएर धेरै किसिमका क्रियापद बन्दछन.

१२०. **वाच्य** ( Voice ) कर्ता वा कर्म वा भाव ( क्रिया ) मुख्य हुने भेद.

( क ) सो वाच्य तीन किसिमका हुन्छन :—

( १ ) **कर्तृवाच्य** (Active-voice) कर्ता मुख्य हुने.

जस्तै :— म गर्दछु. हामीले गर्‍यौं. तं जा. काले आउला. इ०

( २ ) **कर्मवाच्य** ( Passive-voice ) कर्म मुख्य हुने. जस्तै :-

भात खाइयो. हामी देखियौं. छोराहरू पठाइनेछन. इ०

( ३ ) **भाववाच्य** ( Impersonal-voice ) क्रिया मात्र मुख्य हुने. जस्तै :—

बसिन्छ, बसियो, आइएला, उठिनेछ, भइयो. इ०

टि. १ ' गर्दछु, गर्‍यौं ' आदि कर्तृवाच्य कियापद कर्तालाई मु-

ख्य गराई त्यसैको अनुसारले रहने, ' गरिन्छ, गरियो ' आदि कर्मवाच्य क्रियापद कर्मलाई मुख्य गराई त्यसैको अनुसारले रहने, ' वसिन्छ, वसियो ' आदि भाववाच्य क्रियापद क्रिया मात्र मुख्य गराई त्यसैको अनुसारले सधैं एकैनास हुने हुन्छन्.

टि. २ मूल धातुबाट ' गर्छु, गरें ' आदि कर्तृवाच्य क्रियापद, मूल धातुमा इकार थपी इकारान्त धातु भए पछि सकर्मकचाहींबाट ' गरिन्छ, गरियो ' आदि कर्मवाच्य क्रियापद, अकर्मकचाहींबाट ' वसिन्छ, वसियो ' आदि भाववाच्य क्रियापद हुन्छन्.

टि. ३ अंग्रेजीमा भने जो प्रथमान्त छ उसैलाई सबै ठाउंमा कर्ता मानी कर्मवाच्यमा कर्मलाई कर्ता भनेर व्यवहार गरिन्छ; यसैले सकर्मकमा कर्ता आफू काम गर्ने भए कर्तृवाच्य, अर्काबाट गरिने भए कर्मवाच्य भन्ने दुइ भेद गरी अकर्मकमा कर्तृवाच्य मात्र मानेको छ. तर संस्कृतमा भैं कर्ता कर्ता नै, कर्म कर्म नै रही कर्तृवाच्यमा कर्ता, कर्मवाच्यमा कर्म प्रथमान्त भई विभक्ति मात्र बदलिने भएर सकर्मकमा कर्तृवाच्य वा कर्मवाच्य, अकर्मकमा कर्तृवाच्य,वा भाववाच्य यस्ता तीन भेद हुनु उचित हुनाले सोही बमोजिम हाम्रो भाषामा पनी तीन वाच्य भएका छन्.

**१२१. अर्थ** ( Mood ) सामान्य, आज्ञा, अनिश्चय आदि क्रियाको प्रकार.

( क ) सो अर्थ तीन किसिमका छन् :–

( १ ) **सामान्यार्थ** ( Indicative-mood ) क्रियाको सामान्य प्रकार. जस्तै :–

म गर्दछु. त्यसले गऱ्यो. गोपाल गर्नेछन्.

( २ ) **विध्यर्थ** ( Imperative-mood ) क्रियाको विधान आदि प्रकार. जस्तै :–

तं जा. त्यो गरोस्. तिनीहरू जाऊन. हामीहरू सुखी होऔं.

( ३ ) **अनिश्चयार्थ** ( Subjunctive-mood ) क्रियाको संभावना आदि प्रकार. जस्तै :–

त्यो गए हुंदो हो. त्यसले देखे ल्याउला. काले गयो होला.

टि. १ सामान्यार्थका ' गर्दछ, गऱ्यो, गर्नेछ ' इत्यादि क्रियापदबाट संस्कृतका ' लट्, लुङ्, लट् ' आदि लकारमा झैं वर्तमान भूत भविष्यत्कालका क्रियाको सामान्य प्रकार, कहीं प्रश्न समेत बुझिन्छ; विध्यर्थका ' गरूं, गर्, गरोस् ' इत्यादि क्रियापदबाट संस्कृतका ' लोट्, विधि-लिङ् ' लकारमा झैं क्रियाको प्रार्थना, आज्ञा, विधान आदि प्रकार बुझिन्छ; अनिश्चयार्थका ' गर्ला, गरे, गर्दोहो ' इत्यादि क्रियापदबाट संस्कृतका ' संभावनालिङ्, लङ् ' आदि लकारमा झैं क्रियाको संभावना सङ्केत आदि प्रकार बुझिन्छ.

टि. २ अंग्रेजीमा पनी माथिका तीन किसिमका अर्थमा प्रायः हाम्रो भाषाकै बराबर व्यवहार हुन्छ. तर उहां यी तीन प्रकारदेखि बाहेक ' To go ( जानु ) To do ( गर्नु )' इत्यादिमा प्रायः धातुको बराबरै अर्थ बुझाउने Infinitive-mood ( क्रियार्थ ) भन्ने चौथो प्रकार मानेको छ ता पनी हाम्रो भाषामा 'जानु, गर्नु ' आदि त्यस्ता शब्द भाववाचकनाम भई कुरा पूरा गर्ने क्रियापद नहुनाले क्रियापदमा हुने अर्थ भिन्न सो क्रियार्थको गणना गरेको छैन.

१२२. **काल** ( Tense ) क्रियाको बखत.

( क ) सो काल मुख्य तीन किसिमका हुन्छन् :–

( १ ) **वर्तमानकाल** ( Present-tense ) अहिले-को बखत.          जस्तै :–

म जान्छु. त्यो गर्दछ. हामी हेर्दछौं. तं पढ्छस्. ती गर्दछन्.

( २ ) **भूतकाल** ( Past-tense ) अघिको बखत. जस्तै :– म गएँ. हामीले लेख्यौं. तिनले कुटे. तैंले भेटिस्.

( ३ ) **भविष्यत्काल** ( Future-tense ) पछिको बखत.          जस्तै :–

म जानेछु. हामी गरौंला. तिनीहरू भाग्नेछन्.

टि. १ ' गर्दछ, खान्छ, जान्छस् ' आदि क्रियापदबाट अहिलेको क्रियाको बखत बुझिन्छ; ' गर्‍यो, खाए, गइस् ' आदि क्रिया-पदबाट अघिको क्रियाको बखत बुझिन्छ; ' गर्नेछ, मार्नेछन्, भन्नेछौं ' आदि क्रियापदबाट पछिको क्रियाको बखत बुझिन्छ.

टि. २ मुख्य काल यी तीन किसिमका हुन्; तिनमा सो क्रिया भइरहेको, भइसकेको इत्यादि विशेष समेत बुझिएमा अपूर्ण-वर्तमान, पूर्ण-वर्तमान आदि विशेष काल पनी हुन्छन्, सो पछि रूपावलीबाट बुझिनेछन्.

१२३. नाम सर्वनामहरूका झैं क्रियापदका पनी लिङ्ग, पुरुष;

वचन हुन्छन्.

( क ) लिङ्ग ( Gender ) तीन किसिमका हुन्छन् :-

( १ ) पुं० ( Masculine-gender ) जस्तै :-

गोपाल जान्छ. घोडा दौड्यो. इ०

( २ ) स्त्री० ( Feminine-gender ) जस्तै :-

सेती जान्छे. कुकुर्नी बिहाई. इ०

( ३ ) नपुं० ( Neuter-gender ) जस्तै :-

घर भत्क्यो. काम सिद्धिन्छ. इ०

( ख ) पुरुष ( Person ) तीन किसिमका हुन्छन् :-

( १ ) प्रथम० ( First-person ) जस्तै :-

म जान्छु. हामी गर्दछौं. इ०

( २ ) द्वितीय० ( Second-person ) जस्तै :-

तं गर्दछस्. तिमी गर्दछौ. इ०

( ३ ) तृतीय० ( Third-person ) जस्तै :-

रामे भाग्यो. त्यो गर्दछ. इ०

( ग ) वचन ( Number ) तीन किसिमका हुन्छन् :-

( १ ) एक० ( Singular-number ) जस्तै :-

म जान्छु. तं गर्. गोपाल पढ्छ. इ०

( २ ) **अनेकार्थी॰** ( Plural-number ) जस्तै :-

हामीहरू जान्छौं. तिनीहरू गए. इ०

( ३ ) **आदरार्थी॰** (Honorific-plural) जस्तै:-

गोपाल जान्छन्. दिदी जान्छिन्. इ०

टि. १ अंग्रेजी र संस्कृतमा जुनसुकै लिङ्गको वाच्य भए पनी क्रियापद एकैनास रहने हुनाले क्रियापदमा लिङ्गको भेद छैन ता पनी हाम्रो भाषामा वाच्यको अनुसार क्रियापदमा पनी लिङ्गभेदले रूपभेद हुन्छ.

टि. २ संस्कृतको अनुसारले ' म, हामी ' वाच्य ( कर्ता कर्म ) भएमा उत्तम-पुरुष, ' तं, तिमी ' वाच्य भएमा मध्यम-पुरुष अरू वाच्य भएमा प्रथम-पुरुष भन्ने व्यवहार हुन्छ ता पनी अरू सबै भाषामा प्रथमपुरुषवाचक सर्वनाम ' म, हामी ' वाच्य भएमा ' प्रथमपुरुष ', द्वितीयपुरुषवाचक सर्वनाम ' तं, तिमी ' वाच्य भएमा ' द्वितीयपुरुष', तृतीयपुरुषवाचक सर्वनाम नामहरू वाच्य भएमा ' तृतीयपुरुष ' भन्ने व्यवहार प्रसिद्ध हुनाले सोही बमोजिम हाम्रो भाषामा पनी क्रियापदको पुरुषको व्यवस्था हुन्छ.

टि. ३ संस्कृतमा नामहरूमा झैं क्रियापदमा पनी रूप फरक पर्ने हुनाले एक–द्वि–बहु यस्ता तीन वचन हुन्छन्. अरू भाषामा झैं हाम्रो भाषामा पनी दुइ तीन आदि सबैलाई बुझाउंदा रूप एकैनास हुने हुनाले एक र अनेक दुइ वचन मात्र मानिएका छन्. अनेकवचनचाहीं प्रयोग अनुसार आदरार्थी वा अनेकार्थी

हुन्छ. क्रियापद्मा आदरार्थीगा कहीं रूप समेत विशेष हुन्छ.

टि. ४ सबै क्रियापदबाट निर्जीव क्रियारूप एकै वस्तु बुझिने हुनाले सो क्रियामा लिङ्ग वचन पुरुषको भेद छैन ता पनी कर्तृवाच्य क्रियापदमा कर्ता, कर्मवाच्य क्रियापदमा कर्म, भाववाच्य क्रियापदमा भाव मुख्य भई बुझिने हुनाले सोही मुख्यमा हुने लिङ्ग, पुरुष, वचनलाई लिएर अरू भाषामा झैं ह्राम्रो भाषामा पनी क्रियापदमा लिङ्ग, पुरुष, वचन हुन्छन्. यसैले कर्तृवाच्यमा कर्ता कर्मवाच्यमा कर्म जुन लिङ्ग वचन पुरुषको छ उस्तै लिङ्ग वचन पुरुषको क्रियापद हुन्छ, भाववाच्यमा सर्वत्र भाव मुख्य हुनाले त्यसैको अनुसार संधै एकनासको तृतीयपुरुष नपुंसकलिङ्ग एकवचनको मात्र क्रियापद हुन्छ.

प्रश्न :—

( १ ) धातु भनेको के हो ? धातुबाट कस्ता शब्द बन्दछन् ? क्रियापदको रूप के केले फरक हुन्छ ? वाच्य, काल, अर्थ, लिङ्ग, पुरुष, वचन भनेका के के हुन् ?, ती कति कति किसिमका छन् ? ( कर्तृवाच्य कर्मवाच्य भाववाच्यमा के के फरक हुन्छन् ? क्रियापदमा लिङ्ग वचन पुरुषहरू कहां कस्ता हुन्छन् ? )

( २ ) तलका वाक्यमा परेका क्रियापदका धातु, वाच्य, काल, अर्थ; लिङ्ग, पुरुष, वचनहरू बताऊ :—

ह्रामी नाटक हेर्दछौं. यसरी काम सिद्धिनेछ. घोडाहरू दौडे. बेसरी सुतियो. अर्काको उपकार गर. दिदी बत्ति कात्तछिन्. भात पाक्यो होला. हे परमेश्वर ! म माथि निगाह रहोस्. तैंले खराप काम गरिस्. तिमीहरू खाओ. खूप भलाइ गरियो.

## १५–सरल र संयुक्त क्रियापद.

## ( Simple and compound verbs )

१२४. दुइ किसिमका क्रियापदबाट क्रियाको रूपावली बन्दछ :–

( १ ) सरल-क्रियापद. ( Simple-verb )

( २ ) संयुक्त-क्रियापद. ( Compound-verb )

( १ ) धातुबाट प्रत्यय भई बनेका एकला क्रियापदलाई **सरल** भन्दछन्.

( २ ) धातुबाट बनेका कृदन्तहरू संग अर्को सहाय क्रियापद मिलेर बनेका क्रियापदलाई **संयुक्त** भन्दछन्. जस्तै :–

सरल–गर्+एँ=गरें. भन्+औं=भनौं. हु+अस्=होस्.

संयुक्त-गर्दो+थियो=गर्दो थियो, गर्दथ्यो, गर्थ्यो.

जाने+थिएं=जाने थिएं, जान्थें.

टि. १ ' लेख्तै छु, गर्दो हुं, जाने थिएं ' इत्यादिमा दुइ पदको अर्थ भन्दा विशेष काल अर्थहरू बुझिने, ' गरेछु, जान्थें, गर्दथें ' इत्यादिमा दुइ पदको स्वरूप भन्दा विशेष विकार भएको स्वरूप हुने, ' मैले काम गरेको छु, तिमीले त्यो कुरा भनेका थियौ,

'तिनले चिठी लेखेका थिए ' इत्यादि संयुक्तको प्रयोगमा ' मैले काम गरेको छ, तिमीले त्यो कुरा भनेको थियो, तिनले चिठी लेखेको थियो ' इत्यादि असंयुक्तको प्रयोग भन्दा विशेष कारकरचना हुने पनी हुनाले संयुक्त-क्रियापद मान्नाको आवश्यकता छ.

टि. २ संयुक्त-क्रियापद कोही कृदन्त संग सहाय-क्रियापद मिलेका ' गर्ने थिएं, गरेको छु, गर्दो हुं ' इत्यादि, कोही क्रियापद संग सहाय-क्रियापद मिलेका ' गयो होला, भनें हुं, गऱ्यो हो ' इत्यादि हुन्छन्.

१२५. संयुक्तक्रियामा मुख्य क्रियालाई मदत दिन जोडिएका हुनु आदि क्रियालाई **सहाय-क्रिया** (Auxiliary-verb ) भन्दछन्.

जस्तै :–

| मुख्य. | सहाय. | संयुक्त. |
|---|---|---|
| गर्दो | + थियो | = गर्दो थियो, गर्दथ्यो, गर्थ्यो. |
| भनेको | + छु | = भनेको छु, भनेछु. |
| गऱ्यो | + हो | = गऱ्यो हो. |

टि. संयुक्त-क्रियामा अघिल्लोचाहीं क्रिया मुख्य, पछिल्लो क्रिया मुख्य-कियाको सहाय मात्र हुनाले यस्तामा मुख्य-क्रियाकै हिसावले सकर्मक अकर्मक हुने हुन्छ.

१२६. धातुबाट सरल-क्रियापद बनाउंदा हुने प्रत्यय यी हुन् :-

## ( क ) सामान्य—प्रत्यय.

| | एकवचन. | अनेकवचन. |
|---|---|---|
| ( १ ) प्रथम-पुरुष— | उ, अँ | औं |
| ( २ ) द्वितीय-पुरुष— | अस् | औ |
| ( ३ ) तृतीय-पुरुष— | अ | अन् |

टि. १ यी सामान्य-प्रत्यय करण अर्थात् विधि-क्रियामा सहायक हुनु-क्रियाका वर्तमानका 'छु; छौं, छं, छौ' आदि रूपमा मात्र, अकरण अर्थात् निषेध-क्रियामा पछि लेखिने बमोजिम प्रायः सबै ठाउंमा एकैनासँ गरी सबै थरी धातुमा भएर रूप बन्दछन्.

टि. २ यसमा प्रथमपुरुष एकवचनको उ प्रत्यय करणमा, अँ प्रत्यय अकरणमा हुन्छ.

टि. ३ करणमा अरू किसिमका धातुमा भने तल लेखे बमोजिम विशेष आकार भएका प्रत्यय भएर रूप बन्दछन्.

## ( ख ) विशेष—प्रत्यय.

### सामान्यार्थ.

| | वर्तमान. | | | | भूत. | | | | भविष्यत्. | |
|---|---|---|---|---|---|---|---|---|---|---|
| | एक व० | स्त्री ए० | अने क० | स्त्री आ० | एक व० | स्त्री ए० | अ ने० | स्त्री आ० | एक व० | अने क० |
| प्र०— | छु | | छौं | | एँ | | यौं | | नेछु | नेछौं |

| | | | | | | |
|---|---|---|---|---|---|---|
| द्वि०- | छस्(छेस्) | छौं (छ्यौं) | इस् | यौ | नेछस् | नेछौ |
| तृ०- | छ ( छे ) | छन्(छिन्) | यो (ई) | ए (इन्) | नेछ | नेछन् |

सामान्यार्थ-भविष्यत् वा अनिश्चयार्थ. अनिश्चयार्थ.

| | एक० | स्त्रीए० | अनेक० | स्त्री.आदर. | सवैमा |
|---|---|---|---|---|---|
| प्र०- | उंला | | औंला | | ए |
| द्वि०- | लास् | (लिस्) | औला,लाउ (उला | औली,लेउ, , उली ) | ” |
| तृ०- | ला | ( ली ) | लान्, नन् | (लिन्,निन्) | ” |

विध्यर्थ. विध्यर्थ.

| | एक० | अनेक० | आदर. | सवैमा |
|---|---|---|---|---|
| प्र०- | ऊँ | औं | | नू |
| द्वि०- | ई,एस् | अ,ओ,ए. | अ, औ, ऊ. | ” |
| तृ०- | ओस् | ऊन् | | ” |

टि. १ यी विशेष-प्रत्यय माथिका सामान्य-प्रत्ययमा कहीं केही वर्णको थप परिणाम आदि विकार भई बनेका हुन्. यी विशेष-प्रत्यय सवै किसिमका धातुबाट हुन्छन्.

टि. २ यी प्रत्ययमा पुं० नपुं० लिङ्गमा अरू केही फरक हुंदैन, नपुं०मा आदरार्थीको प्रयोग हुंदैन. स्त्रीलिङ्गमा भने द्वितीय-तृतीय-पुरुषका एकवचन र आदरार्थीमा कहीं प्रत्यय फरक हुन्छन्,

अन्त फरक हुंदैन. स्त्री०मा फरक हुने जति प्रत्यय कोष्ठक भित्र देखाइएका छन्.

टि. ३ विध्यर्थमा पुंलिङ्गमा समेत अनेकार्थीमा र आदरार्थीमा प्रत्यय फरक हुन्छन्, अन्त हुंदैन. फरक हुनेचाहीं भिन्न भिन्न गरी देखाइएका छन्.

टि. ४ भविष्यत्मा र विध्यर्थमा एकैमा अनेक थरी देखाइएका प्रत्ययमा कुनै अर्थ-विशेषले हुने कुनै धातु-विशेषले हुने, कुनै सबैमा हुने हुन्छन्- सो कुरा पछि रूपावलीमा बुझिनेछ.

## १२७. यी प्रत्यय लागेर बनेका सहायक हुनु-क्रियाका रूप.

### सामान्यार्थ.

| | (१) वर्तमान. | | (२) वर्तमान. | |
|---|---|---|---|---|
| | एक० | अनेक० | एक० | अनेक० |
| प्र०— | म—छु | हामी—छौं | हुं | हौ,हौं |
| द्वि०— | तं—छस | तिमी—छौ | होस् | हौ,हौ |
| तृ०— | त्यो-छ | तिनी—छन् | हो | हुन् |

| (३) वर्तमान. | | | | भविष्यत्. | |
|---|---|---|---|---|---|
| एक० | स्त्रीएक० | अनेक० | स्त्री.आद० | एकवच० | अनेकव० |
| हुन्छु | | हुन्छौं | | हुनेछु | हुनेछौं |
| हुन्छस् | (हुन्छेस) | हुन्छौ | (हुन्छ्यौ) | हुनेछस् | हुनेछौ |
| हुन्छ | (हुन्छे) | हुन्छन् | (हुन्छिन्) | हुनेछ | हुनेछन् |

(१) वास्तविक दृष्टिमा ' गर्दछु, गर्छु, लेख्तछौं ' आदि क्रियापदमा भएका वर्तमा-

| ( १ ) भूत. | | ( २ ) भूत. | |
|---|---|---|---|
| एक० स्त्रीए० | अनेक० स्त्री.आ० | एक० स्त्री० | अने०स्त्री० |
| म—थिएं | हामी—थियौं | भएं | भयौं |
| तं—थिइस् | तिमी—थियौ | भइस् | भयौ |
| त्यो-थियो (थिई) | तिनी—थिए (थिइन्) | भयो (भई) | भए (भइन्) |

## सामान्यार्थ-भविष्यत् वा अनिश्चयार्थ. [अनिश्चयार्थ.

| एक.० स्त्री.एक० | अनेक० | स्त्री.आ० | सवैमा |
|---|---|---|---|
| म—होउंला | हामी- होऔंला | | भए |
| तं—होलास् (होलिस्) | तिमी- होऔला, होउला-लाउ | (होऔली होउली-लेउ) | ” |
| त्यो-होला ( होली ) | तिनी- होलान्, हुनन्, | (होलिन्, हुनिन्) | ” |

## विध्यर्थ.

| १ | | | २ |
|---|---|---|---|
| एक० | अनेक० | आदर. | सवैमा |
| प्र० म—होऊं | हामी—होऔं | | हुन् |
| द्वि० तं—हो,भएस् | तिमी—होओ,भए. | होऊ,भए | ” |
| तृ० त्यो-होओस | तिनी—होऊन् | | ” |

---

नका 'छु, छौं' आदि विकृत 'तो, दो' प्रत्ययान्त संग मिलेका सहाय-क्रिया, 'गर्ने-छु, दिनेछौं' आदि क्रियापदमा भएका भविष्यत्का 'नेछु, नेछौं' आदि पनी कृद-न्तको 'ने' प्रत्यय संग मिलेका 'छु' आदि सहाय-क्रिया नै हुन्, यहां सुगम रीत-ले प्रत्यय भनि देखाइएका मात्र हुन्.

टि. १ यी रूपमा हु धातुका कहीं छ, थि, भ, हो यस्ता विशेष सामान्यरूप भएका छन्. सामान्यरूपबाट प्रत्यय हुंदा सन्धि अनुसार कहीं केही विकार पनी भएका छन्.

टि. २ ' होउंला, होऔंला, होऔला, होऔली, होऊं, होओस् होऊन् ' यी रूपका क्रमैले ' हुंला, हौंला, हौला, हौली, हूं, होस्, हून् ' यस्ता छोटकरी रूप पनी प्रयुक्त हुन्छन्.

टि. ३ हुनु-क्रियाका यी रूपमा " छु, छौं ' आदि र ' हुं, हौं ' आदि वर्तमानका, ' थिएं, थियौं ' आदि भूतका, ' होउंला, होऔंला ' आदि र ' भए ' यी अनिश्चयार्थका रूप सहायक भएर प्रयुक्त हुन्छन्. ' हुन्छु, भएं, हुनेछु, होऊ, हुन् ' आदि अरू किसिमका रूप प्रायः सहायक नभएर स्वतन्त्रै प्रयुक्त हुन्छन्; सहायक हुने ' छु, हुं, थिए, होउंला, भए ' आदि रूप पनी कहीं आफ्ना अर्थमा एकलै प्रयुक्त हुन्छन्. जस्तै :–

सहायक–मैले भनेको छु. त्यो गएको थियो. त्यो गर्दो हो. इ०

स्वतन्त्र–काम हुन्छ. छुट्टी भयो. त्यो कहां छ ? जांच हुनेछ इ०

१२८. मुख्य कृदन्त-शब्द यस्ता किसिमका हुन्छन् :–

( १ ) नाम-कृदन्त नु-प्रत्ययान्त. ( Gerund ) जस्तै :-

हुनु, गर्नु, दिनु, खानु, भन्नु, आउनु, राख्नु. इ०

सामान्य-कृदन्त ने-प्रत्ययान्त. जस्तै :–

हुने, गर्ने, दिने, खाने, भन्ने, आउने, राख्ने. इ०

* वर्तमान-कृदन्त तो-दो-प्रत्ययान्त, ( Present-par-

*(२) विशेषण.

ticiple ) जस्तै :–

वस्तो, लेख्तो, कुद्तो, गर्दो, भन्दो, दिंदो, खांदो इ०

भूत-कृदन्त एको-प्रत्ययान्त. ( Past-participle ) जस्तै :–

वसेको, लेखेको, गरेको, दिएको, आएको, कुहेको, इ०

(३) अव्यय.

पूर्वक्रिया-कृदन्त ई-एर-प्रत्ययान्त. जस्तै :–

वसी, वसेर; लेखी, लेखेर; भई, भएर; आई, आएर, इ०

उत्तरक्रिया-कृदन्त न प्रत्ययान्त. जस्तै :–

वस्न, गर्न, दिन, खान, आउन, हुन, जान, लेख्न. इ०

( क ) यी प्रत्ययमा अरूचाहीं सबै धातुबाट हुन्छन्. वर्तमानका 'तो, दो' यिनमा खर् 'अर्थात् वर्गका प्रथम ( क् च् ट् त् प् ), द्वितीय ( ख् छ् ठ् थ् फ् ), श् ष् स् अन्त्य वर्ण हुने धातुबाट तो प्रत्यय, हश् अर्थात् वर्गका तृतीय (ग् ज् ड् द् ब्), चतुर्थ (घ् झ् ढ ध् भ्), पञ्चम (ङ् ञ् ण् न् म्), य् र् ल् व् अन्त्य वर्ण हुने धातुबाट दो प्रत्यय, सबै अजन्त धातुबाट धातुको अन्त्य स्वर अनुनासिक समेत भई दो प्रत्यय हुन्छ. जस्तै :-

तो–शक्तो, बांच्तो, लेख्तो, कुद्तो, जप्तो, वस्तो, लुछ्तो. इ०

दो–गर्दो, सुन्दो, बग्दो, रोज्दो, नाघ्दो, रिङ्दो, बल्दो इ०

ँदो-कहँदो, खांदो, दिंदो, आउंदो, उभिंदो, कुहुंदो. इ०

( ख ) भूतकाल बुझाउने ' एको, ई, एर ' यी प्रत्यय हुंदा धातुका यस्ता सामान्यरूप हुन्छन् :–

( १ ) हु-को ' भ, ' जा-को ' ग, ' ला,लैजा-को ' लग् ' यस्ता हुन्छन्. जस्तै :– हु-भएको, भई, भएर; जा-गएको, गई, गएर; ला, लैजा-लगेको, लगी, लगेर.

( २ ) एकाक्षर उकारान्तको ओकारान्त हुन्छ. जस्तै :– धु-धोएको, धोई, धोएर; रु-रोएको, रोई, रोएर; फु-फोएको, फोई, फोएर. इ०

( ३ ) अकारान्त र अनेकाक्षर उकारान्तको अन्त्य स्वर कट्टा हुंदा बांकि रहने अजन्त वा हलन्त भाग हुन्छ. जस्तै :- सम-समेको, समी, समेर; कुहु-कुहेको, कुही, कुहेर; आउ-आएको, आई, आएर. इ०

( ४ ) अरू अजन्त वा हलन्तको उस्तै रहन्छ. जस्तै :– खा-खाएको, खाई, खाएर; दि-दिएको, दिई, दिएर; उभि-उभिएको, उभिई, उभिएर; गर्-गरेको, गरी, गरेर; बस्-बसेको, बसी, बसेर. इ०

टि. माथि लेखेका मुख्य कृदन्तमा ' ने, एको, तो, दो ' यी प्रत्ययान्त संयुक्त-क्रियापदको रूपावलीमा, ' नु, ई, न ' यी प्रत्ययान्त पछि लेखिने मिलित-क्रियामा काम दिने हुन्छन्. 'एर' प्रत्य-

यान्त भने स्वतन्त्रै प्रयुक्त हुन्छ, संयुक्त वा मिलित-क्रियामा काम दिने हुंदैन.

१२९. ' ने, तो, दो, एको ' प्रत्ययान्त कृदन्त र सहायक हुनु क्रियाका कुनै रूप मिलेर कहीं विकार समेत भएर संयुक्त-क्रियापद हुन्छन्. जस्तै :–

अविकृत– जाने थिएं, जांदो हुं, गर्दो थियो, गएको छु.

विकृत— जान्थें ( जाने वा जांदो थिएं ), गएछु ( गएको छु ), गर्दथें गर्थें ( गर्दो वा गर्ने थिएं ).

१३०. संयुक्त-क्रियापदमा विकार हुंदा यस्तो व्यवस्था हुन्छ :-

( १ ) ' तो, दो ' प्रत्ययको विकार हुंदा खर् ( वर्गका प्रथम द्वितीय श् ष् स् ) अन्त्य हुने धातुमा हुने तो-को लोप वा बदलामा त, हश् ( वर्गका तृतीय चतुर्थ पञ्चम य् र् ल् व् ) र अव्यञ्जन उकार अन्त्य हुने धातुमा हुने दो-को लोप वा बदलामा द, अरू अजन्त धातुमा हुने दो-को लोप भई त्यसभन्दा अघिल्लो अनुस्वारको बदलामा न् हुन्छ.

( २ ) ' ने ' प्रत्ययको विकार हुंदा पनी माथिको झैं खरन्तमा लोप वा बदलामा त, हशन्त र अव्यञ्जन-उकारान्तमा लोप वा बदलामा द, अरू अजन्तमा बदलामा न् हुन्छ.

( ३ ) ' एको ' प्रत्ययको विकार हुंदा स्त्रीलिङ्गको एकवच

न र आदरार्थीमा पुं० नपुं०लिङ्गको द्वितीयपुरुष एकवचनमा इ, अरू ठाउँमा ए हुन्छ.

( ४ ) विकार भएका ' तो, दो, ने, एको ' प्रत्ययान्त सं-ग जोडिंदा ' थिएं ' आदि भूतका सहायक क्रियाका यस्ता छोटकरी रूप हुन्छन्.

पूरा–थिएं, थियौं, थिइस्, थियौ, थियो, थिए, थिई, थिइन्.

छोटा—थें, थ्यौं, थिस्, थ्यौ, थ्यो, थे, थी, थिन्.

जस्तै :– वस्तो . वस्ने+थिएं=वस्तथें, वस्थें. वसे-को+छु=वसेछु. गर्दो वा गर्ने+थियो=गर्दथ्यो, गर्थ्यो. गरेको+छस्=गरिछस्. आउंदा वा आउने+थिए=आउंदथे, आउंथे. आएका + थिए = आएथे. देखेकी + थिइस्=देखिथिस्. जांदी वा जाने+थिइन्=जान्थिन्.

१३१. विकार नभएमा ' तो, दो, एको ' प्रत्ययान्त शब्द ओकारान्त विशेषणको नियम बमोजिम पुं०नपुं एकवचनमा ओ, अनेकवचनमा आ, स्त्री०एकवचनमा र आदरार्थीमा ई, अनेकार्थीमा आ अन्त्य हुने हुन्छ, अवधारण बुझाउंदा भने सबैमा एकैनास भएर ' तो, दो, एको, ने ' यिनका क्रमै संग ' तै, दै, एकै, न्यै ' यस्ता स्वरूप हुन्छन्. जस्तै :–

म गर्दो छु. मैले देखेकी छु. दिदी जांदी छन. तिनीहरूले पढेका छन. त्यो लेख्ती छ. उसले देखेको थियो. छोरीहरू गएका थिए. त्यो लेख्तै छ. बहिनीहरू आउंदै छन. तिनीहरूले देखेकै थिए. म आउन्यै छु. देख्न्यै थिएं. इ०

**प्रश्न :–**

( १ ) क्रियापद कस्ता कस्ता हुन्छन् ? सरल संयुक्त भनेका कस्ता कस्ता क्रियापद हुन् ? सहायक्रिया भनेको के हो ? क्रियापदमा हुने सामान्य विशेष प्रत्यय कस्ता छन् ? मुख्य कृदन्त शब्द कस्ता हुन ? वर्तमान-कृदन्तका प्रत्यय कस्ता धातुबाट के के हुन्छन् ? भूतकालमा धातुका सामान्यरूपमा के विशेष छ ? संयुक्त-क्रियापदमा कृदन्तका र सहायकका कहां कहां के के विकार हुन्छन् ?

( २ ) तल लेखेका वाक्यमा परेका क्रियापद कस्ता हुन् :–
म भन्दो छु. यिनीहरू खेल्दा छन्. हिजो घाम लागेथ्यो. तिनी चिठी लेख्तथे. हामी सुन्थ्यौं. खोजेको भए पाउंथ्यो. तिमीले देखिथ्यौ. त्यो जान्छे. काम भोलि होला. छोरो भयो.



## १६–क्रियापदको रूपावली.

## ( Conjugation of verbs )

### कर्तृवाच्य ( Active-voice )

### सामान्यार्थ ( Indicative-mood )

१३२. वर्तमानकाल–सामान्य, अपूर्ण, पूर्ण यिनका भेदले तीन थरीका छन्.

### ( १ ) सामान्य-वर्तमान.

### ( Present Indefinite )

१३३. धातुबाट ' छु, छौं ' आदि वर्तमानका विशेष प्रत्यय भई बनेका रूपबाट ' सामान्य-वर्तमान ' बुझिन्छ. यस्तामा सो क्रिया सामान्य स्वरूपले अहिले हुने बुझिन्छ.

( क ) सामान्य-वर्तमानका प्रत्यय हुंदा धातु र प्रत्ययको विचमा खर् ( वर्गका प्रथम, द्वितीय, श्, ष्, स् ) अन्त्य हुने धातुमा विकल्पले त, हश् ( वर्गका तृतीय, चतुर्थ, पञ्चम, य्, र्, ल्, व् ) अन्त्य हुने धातुमा विकल्पले द, अव्यञ्जन ( व्यञ्जनमा नमिलेको ) उकार अन्त्य हुने धातुमा

धातुको अन्त्य स्वर अनुनासिक भई विकल्पले द, अरू अ-जन्त धातुमा नित्यै न् हुन्छ. जस्तै :–

अकर्मक वस्नु क्रिया वस्–धातुका रूप :–

| एकवचन. | स्त्री.ए० | अनेकवचन. | स्त्री.आ० |
|---|---|---|---|
| म—वस्छु, वस्तछु | | हामी- वस्छौं, वस्तछौं | |
| तं—वस्छस, वस्तस् | (-छेस्) | तिमी- वस्छौ, वस्तछौ | (-छ्यौ) |
| त्यो-वस्छ, वस्तछ | ( -छे ) | तिनी- वस्छन्, वस्तछन् | (-छिन्) |

सकर्मक गर्नु क्रिया गर्–धातुका रूप :–

| | | | |
|---|---|---|---|
| मं—गर्छु, गर्दछु | | हामी छौं, गर्दछौं | |
| तं—गर्छस्, गर्दछस् | (-छेस्) | तिमी गर्छौ, गर्दछौ | (-छ्यौ) |
| त्यो-गर्छ, गर्दछ | ( -छे ) | तिनी- गर्छन्, गर्दछन् | (-छिन) |

अक० आउनु० आउ–धातुका रूप :–

| | | | |
|---|---|---|---|
| आउंछु, आउंदछु. | | आउंछौं, आउंदछौं | |
| आउंछस्, आउंदछस | (-छेस) | आउंछौ, आउंदछौ | (-छ्यौ) |
| आउंछ, आउंदछ | ( -छे ) | आउंछन्, आउंदछन् | (-छिन) |

---

( १ ) स्त्रीलिङ्गमा एकवचन र आदरार्थी-अनेकवचनमा फरक हुने ठाउंमा फरक नहुने भाग जोड्ने रेखाको सङ्केत दिई फरक हुने भाग जति मात्र कोष्ठक भित्र देखाइएका छन्. यस्तामा ती दुवै भाग मिलाई ‘ वस्छेस्, वस्तछेस्, वस्छे, वस्तछे, वस्छ्यौ, वस्तछ्यौ, वस्छिन्, वस्तछिन् ’ यस्ता रूप चलाउनू. यस्तै क्रियापदका रूपावलीमा कोष्ठक भित्र दिएका स्त्रीलिङ्गमा हुने विशेष मिलाई रूप चलाउने गर्नू.

अक्र० ज्ञानु० जा—धातुका रूप :—

| | |
|---|---|
| जान्छु | जान्छौं |
| जान्छस् (-छेस्) | जान्छौ (-छयौ) |
| जान्छ ( -छे ) | जान्छन (-छिन्) |

टि. कर्तृवाच्य क्रियापदको रूपावली चलाउँदा यी कुराको याद राखी कर्ता र क्रियापदका लिङ्ग वचन पुरुष मिलाई चलाउनुपर्दछ :—

( १ ) प्रथम पुरुषममा म ह्मामी, द्वितीय पुरुषमा तं तिमी, तृतीय पुरुषमा यी दुइ थरी बाहेक जुनसुकै पनी नाम सर्वनामहरू क्रियापद संग लिङ्ग वचन पुरुष मिलेका प्रथमान्त कर्ता हुन्छन्.

( २ ) अनेकवचनमा सामान्य नियम बमोजिम आदरार्थीमा 'हरू' नजोडेको, अनेकार्थीमा 'हरू' नित्यै हुने शब्दमा नित्यै जोडेको, विकल्पले हुने शब्दमा 'हरू' जोडेको वा नजोडेको कर्ता हुन्छ.

( ३ ) पछि लेखिने विभक्ति-प्रत्ययको नियम बमोजिम अकर्मक क्रियाको कर्तामा सबै ठाउंमा ले प्रत्यय रहंदैन, सकर्मक क्रियाको कर्तामा सामान्य-भूत, सामान्य-सङ्केतार्थमा र विकृत वा अविकृत भूत-कृदन्त ( एको प्रत्ययान्त ) जोडिएका ठाउंमा ले नित्यै रहन्छ, अरू ठाउंमा प्रायः विकल्पले हुन्छ. विध्यर्थको 'नू' प्रत्ययान्त क्रियापद भएमा भने सकर्मकमा नित्यै, अकर्मकमा विकल्पले ले हुन्छ.

## ( २ ) अपूर्ण-वर्तमान. Present Imperfect

१३४. विकार नभएका 'तो, दो' प्रत्ययान्त संग 'छु'

आदि सहायक क्रिया मिलेका रूपबाट ' अपूर्ण-वर्तमान ' बुझिन्छ. यस्तामा सो क्रिया आरम्भ भएर अहिले भइरहेको बुझिन्छ. जस्तै :–

| | |
|---|---|
| म–वस्तो ( ती ) छु | हामी–वस्ता छौं |
| तं– " " छस् | तिमी– " ( ती ) छौ |
| त्यो- " " छ | तिनी– " " छन् |
| गर्दो ( र्दी ) छु | गर्दा छौं |
| " " छस् | " ( र्दी ) छौ |
| " " छ | " " छन् |

यस्तै–आउ-आउंदो छु, आउंदी छु, आउंदा छौं; खा-खाँदो छु, खांदी छु, खांदा छौं; लेख्–लेख्तो छु, लेख्ती छु, लेख्ता छौं; पढ्–पढ्दो छु, पढ्दी छु. इ०

अवधारणमा–वस्तै, गर्दै, आउंदै, खांदै–छु, छौ, छस्, छौ, छ, छन्.

टि. ' म वसिरहेको छु. त्यो गर्दै रहन्छ ' इत्यादि पछि लेखिने सातत्यबोधक मिलित-क्रियाबाट पनी प्रायः ' वस्तो छु, गर्दै छ ' इत्यादि अपूर्ण-वर्तमानको बराबर सो क्रिया अहिले भइरहेको बुझिन्छ.

## ( ३ ) पूर्ण-वर्तमान. ( Present perfect )

१३९. विकार नभएको ' एको ' प्रत्ययान्त संग ' छु ' आदि सहायक क्रिया मिलेका रूपबाट ' पूर्ण-वर्तमान ' बुझिन्छ.

यस्तामा सो क्रिया अहिले भइसकेको बुझिन्छ. जस्तै :–

| | |
|---|---|
| म–बसेको ( की ) छु | हामी–बसेका छौं |
| तं– " " छस् | तिमी– " (की) छौ |
| त्यो- " " छ | तिनी– " " छन् |

| | |
|---|---|
| मैले–गरेको ( की ) छु | हामीले–गरेका छौं |
| तैंले– " " छस् | तिमीले– " ( की ) छौ |
| त्यसले " " छ | तिनीले– " " छन् |

यस्तै–आउ-आएको छु, आएकी छु, आएका छौं; जा-गएको छु, गएकी छु, गएका छौं.

अवधारणामा–बसेकै, गरेकै, आएकै, गएकै–छु, छौं, छस्, छौ, छ, छन्.

टि. १ अंग्रेजीमा Present perfect ( पूर्ण-वर्तमान ) का I have gone ( म गएको छु ) यस्ता रूपबाट त्यो क्रिया अघि आरम्भ भएर अहिले भरखर समाप्त भएको भन्ने बुझिन्छ; हाम्रो भाषामा भने भरखरै समाप्त भएको हुनुपर्ने नियम छैन, ' म पोहोर घर गएको छु ' यस्तो अघि नै समाप्त भएको क्रियामा पनी यसको व्यवहार हुन्छ.

टि. २ ' गरेथें ' इत्यादि पूर्णभूतका रूपबाट क्रिया अघि समाप्त भएको संम बुझिन्छ, कर्ताको अहिले सत्ता हुनाको आवश्यकता छैन; ' गएको छु ' इत्यादि पूर्ण-वर्तमानका रूप भने कर्ताको अहिले सत्ता भएमा मात्र प्रयुक्त हुन्छन्.

टि. ३ अंग्रेजीमा वर्तमानका माथिका तीन भेद बाहेक I have

been writing ( म लेख्तै आएको छु ) इत्यादिमा अघिदेखि अहिले संम हुंदै आएको क्रिया बुझाउने Present perfect continuous (रीति-वर्तमान) भन्ने अर्को भेद पनी मानिएको छ; सो हाम्रो भाषामा ' यो अघिदेखि भइआएको छ. गर्दै आएको छु ' इत्यादि धेरै क्रिया मिलेको मिलित-क्रियाबाट बुझिन्छ. यस्तै भूत आदिमा हुने यस किसिमको काल यस्तै भूतकालका मिलित क्रियाहरूबाट बुझिने हुन्छ.

१३६. भूतकाल-सामान्य, अपूर्ण, पूर्ण, अज्ञात यिनका भेदले चार थरीका छन्.

## ( १ ) सामान्य-भूत. ( Past Indefinite )

१३७. धातुबाट ' एँ, यौं ' आदि भूतका विशेष प्रत्यय भई बनेका रूपबाट ' सामान्य-भूत ' बुझिन्छ. यस्तामा सो क्रिया सामान्य स्वरूपले अघि भएको बुझिन्छ.

(क) सामान्य-भूतमा धातुका सामान्यरूप अघि ( नि. २२८ ख० ) 'एको' प्रत्यय हुंदा लेखे बमोजिम हुन्छन्. जस्तै :-

अक०वस्तु क्रिया वस्-धातुका :- अक०जानु०जा-धातुका :-

| | | | |
|---|---|---|---|
| म—वसें | हामी-वस्यौं | गएं | गयौं |
| तं—वसिस् | तिमी-वस्यौ | गइस् | गयौ |
| त्यो-वस्यो (वसी) | तिनी-वसे (वसिन्) | गयो (गई) | गए (गइन्) |

| सक० गर्नु क्रिया गर्-धातुका :- | | सक० धुनु० धु-धातुका :- | |
|---|---|---|---|
| मैले—गरें | हामीले-गऱ्यौं | धोएं | धोयौं |
| तैंले—गरिस् | तिमीले-गऱ्यौ | धोइस् | धोयौ |
| त्यसले-गऱ्यो(गरी) | तिनीले-गरे(गरिन्) | धोयो(धोई) | धोए(धोइन्) |

| अक० आउनु क्रिया आउ-धातुका:- | | अक० सप्रनु.सप्र-धातुका:- | |
|---|---|---|---|
| म—आएँ | हामी-आयौं | सप्रें | सप्र्यौं |
| तं—आइस् | तिमी-आयौ | सप्रिस् | सप्र्यौ |
| त्यो-आयो(आई) | तिनी-आए(आइन्) | सप्र्यो (सप्री) | सप्रे(सप्रिन्) |

| सक० ला, लैजा-धातुका :- | | सक० दि-धातुका :- | |
|---|---|---|---|
| मैले—लगें | हामीले-लग्यौं | दिएँ | दियौं |
| तैंले—लगिस | तिमीले-लग्यौ | दिइस | दियौ |
| त्यसले-लग्यो (लगी) | तिनीले-लगे (लगिन्) | दियो (दिई) | दिए (दिइन्) |

## (२) अपूर्ण-भूत. ( Past Imperfect )

१३८. विकार नभएका 'तो, दो' प्रत्ययान्त संग 'थिएं' आदि वा विकार ( नि. १३०–१,४) भएका 'तो, दो' प्रत्ययान्त संग 'थें' आदि सहायक मिलेका रूपबाट 'अपूर्ण-भूत' बुझिन्छ. यस्तामा सो क्रिया अघि भइरहेको बुझिन्छ. जस्तै :–

वस्तो(ती)थिएं, वस्तथें, वस्थें   वस्ता थियौं, वस्तथ्यौं, वस्थ्यौं
" " थिइस्, " थिस् थिस   " (ती) थियौं, वस्तथ्यौ, वस्थ्यौ
" थियो,वस्तथ्यो वस्थ्यो.   "   थिए, वस्तथे, वस्थे.
(वस्तीथिई,वस्तथी,वस्थी ) ( वस्तीथिइन्,वस्तथिन्,वस्थिन् )

यस्तै–गर्-गर्दो थिएं, गर्दी थिएं, गर्दथें, गथें, गर्दा थियौं, गर्दथ्यौं, गथ्यौं; आउ–आउंदो थिएं, आउंदी थिएं, आउंदथें, आउंथें, आउंदा थियौं, आउंदथ्यौं, आउंथ्यौं; दि-दिंदो थिएं, दिंदी थिएं, दिन्थें, दिंदा थियौं, दिन्थ्यौं; हु-हुदो थिएं, हुदी थिएं, हुन्थें, हुंदा थियौं, हुन्थ्यौं. इ०
अवधारणमा–वस्तै, गर्दै, आउंदै, दिंदै, हुंदै-थिएं, थियौं, थिइस्, थियौ, थियो, थिए, थिइन्. इ०

टि. यसमा अविकृत ' वस्तो थिएं ' इत्यादि रूप भन्दा अवधारण समेत बुझाउने ' वस्तै थिएं ' इत्यादि ज्यादा प्रयुक्त हुन्छन्.

## ( ३ ) पूर्ण-भूत. ( Past perfect )

१३९. विकार नभएको ' एको ' प्रत्ययान्त संग ' थिएं ' आदि वा विकार ( नि. १३०-३,४ ) भएको ' एको ' प्रत्ययान्त संग ' थें ' आदि सहायक क्रिया मिलेका रूपबाट ' पूर्ण-भूत ' बुझिन्छ. यस्तामा सो क्रिया अघि भइसकेको बुझिन्छ.   जस्तै :–

| | |
|---|---|
| वसेको ( की ) थिएं, वसे( सि ) थें | वसेका थियौं, वसेथ्यौं |
| " " थिइस्, वसिथिस् | " (की) थियौ, वसे(सि)- |
| " " थियो, वसेथ्यो | " थिए, वसेथे [थ्यौ |
| ( वसेकी थिई, वसिथी ) | (वसेकी थिइन्, वसिथिन्) |

| | |
|---|---|
| गरेको(की) थिएं, गरे(रि)थें | गरेका थियौं, गरेथ्यौं |
| " " थिइस्, गरिथिस् | " (की) थियौ, गरे (रि)थ्यौ |
| " थियो, गरेथ्यो. | " थिए, गरेथे |
| ( गरेकी थिई, गरिथी ) | ( गरेकी थिइन्, गरिथिन् ) |

यस्तै–जा–गएको थिएं, गएथें, गएकी थिएं, गइथें, गएका थियौं, गएथ्यौं; पाउ–पाएको थिएं, पाएथें, पाएकी थिएं, पाइथें, पाएका थियौं, पाएथ्यौं; हु–भएको थिएं, भएथें, भएकी थिएं, भइथें, भएका थियौं, भइथ्यौं; दि–दिएको थिएं, दिएथें, दिएकी थिएं, दिइथें, दिएका थियौं, दिएथ्यौं. इ०

## ( ४ ) अज्ञात-भूत. ( Unknown past )

१४०. विकार ( नि., १३०-३ ) भएको ' एको ' प्रत्ययान्त संग ' छु ' आदि सहायक क्रिया मिलेका रूपबाट ' अज्ञात-भूत ' बुझिन्छ. यस्तामा सो क्रिया थाहा नभई भएको बुझिन्छ. जस्तै :–

| | |
|---|---|
| म— वसेछु ( वसिछु ) | हामी- वसेछौं |
| तं— वसिछस् | तिमी- वसेछौ ( वसिछौ ) |
| त्यो- वसेछ ( वसिछ ) | तिनी- वसेछन् ( वसिछन् ) |

| | |
|---|---|
| मैले— गरेछु ( गरिछु ) | हामीले- गरेछौं |
| तैंले— गरिछस् | तिमीले- गरेछौ ( गरिछौ ) |
| त्यसले- गरेछ ( गरिछ ) | तिनीले- गरेछन् ( गरिछन् ) |

यस्तै– जा–गएछु, गइछु, गएछौं, गइछस्, गएछौ, गइछौ; आउ–आएछु, आइछु, आएछौं; हु–भएछु, भइछु, भएछौं; दि–दिएछु, दिइछु, दिएछौं. इ०

टि. १ हाम्रो भाषामा हुने अज्ञात-भूतका विशेष रूपबाट संस्कृत को ' लिट् ' लकारमा झैं अघि हुंदैन भन्ठानेको क्रिया अहिले भइसके पछि मात्र थाहा भएको बुझिन्छ. जस्तै :–

त्यो गएछ ( अघि जांदैन भन्ठानेको थिएं, अहिले गइसकेको थाहा भयो ) म निदाएछु. तिमी आएछौ. इ०

टि. २ कहीं वर्तमानमा पनी अघि अज्ञात भएको क्रिया अहिले ज्ञात भएको बुझाउंदा यसको प्रयोग हुन्छ. जस्तै :–

यो किताप यहीं रहेछ. तिमी अझ वसिरहेका रहेछौ. इ०

१४१. भविष्यत्काल-सामान्य-भविष्यत् र संभावना-भविष्यत यिनका भेदले दुइ थरीका हुन्छन्.

## ( १ ) सामान्य-भविष्यत्.
## ( Future Indefinite )

१४२. धातुबाट ' नेछु, नेछौं ' आदि भविष्यत्का विशेष प्रत्यय भई बनेका रूपबाट 'सामान्य-भविष्यत्' बुझिन्छ. यस्तामा वक्ताको निश्चय झल्कने गरी सो क्रिया पछि हुने बुझिन्छ. यसका सबै लिङ्गमा एकैनास रूप हुन्छन्.

| | | | |
|---|---|---|---|
| म– वस्नेछु | हामी- वस्नेछौं | गर्नेछु | गर्नेछौं |
| तं– वस्नेछस् | तिमी- वस्नेछौ | गर्नेछस् | गर्नेछौ |
| त्यो- वस्नेछ | तिनी- वस्नेछन् | गर्नेछ | गर्नेछन् |

अवधारणमा ' ने ' का ठाउंमा ' न्यै ' भई ' वस्न्यैछु, वस्न्यैछौं ' इत्यादि हुन्छन्.

## ( २ ) संभावना-भविष्यत्.
## ( Future Conditional )

१४३. धातुबाट ' उंला, औंला ' आदि भविष्यत्का विशेष प्रत्यय कहीं विकार समेत भई बनेका रूपबाट ' संभावना-भविष्यत् ' बुझिन्छ. यस्तामा सो क्रिया पछि हुने संभव बुझिन्छ.

( क ) संभावना-भविष्यतमा यस्तो विशेष हुन्छ :–

( १ ) द्वितीयपुरुष अनेकवचनका ' उला, उली ' प्रत्यय

अजन्त सामान्यरूप भएका धातुबाट मात्र, अरूचाहीं सबै-बाट हुन्छन्. स्त्री०मा 'उली' झैं, पुं०मा 'उला' पनी प्रायः आदरार्थीमै हुन्छ.

( २ ) अनेकाक्षर-इकारान्त धातुमा लकारादि र 'उला, उली' प्रत्यय हुंदा प्रत्यय र सामान्यरूपको बिचमा ए थपिन्छ.

( ३ ) यसमा हलन्त, आकारान्त, अनेकाक्षर-इकारान्त धातुको सबै प्रत्यय हुंदा, नकारादि प्रत्यय हुंदा सबै धातुको, एकाक्षर-इकारान्त धातुको प्रथमपुरुषमा, अकारान्त र अनेकाक्षर-उकारान्त धातुको हलादि प्रत्यय हुंदा सामान्यरूप बदलिदैन; अरूमा अकारान्त र अनेकाक्षर-उकारान्त धातुको अन्त्य स्वर कट्टा गरी बांकि अजन्त वा हलन्त भाग, एकाक्षर-इकारान्तको एकारान्त, एकाक्षर-उकारान्त धातुको ओकारान्त सामान्य रूप हुन्छ.

अकर्मक वस्नु०वस्-धातुका रूप :–

| | |
|---|---|
| म– वसुंला | हामी– वसौंला, |
| तं– वस्लास् | तिमी– वसौंला, वस्लाउ. |
| ( वस्लिस् ) | ( वसौंली, वस्लेउ ) |
| त्यो- वस्ला | तिनी– वस्लान् वस्नन्. |
| ( वस्ली ) | ( वस्लिन्, वस्लिन्. ) |

अक० आउनु० आउ–धातुका रूप :–

म– आउंला हामी- आऔंला
तं– आउलास् तिमी- आऔंला, आउला, आउलाउ
(आउलिस्) (आऔंली, आउली, आउलेउ )
त्यो- आउला तिनी- आउलान्, आउनन्
( आउली ) (आउलिन्, आउनिन् )

अक०उभिनु०उभि–धातुका रूप :–

उभिउंला , उभिऔंला
उभिएलास् उभिऔंला, उभिएलाउ-उला.
( उभिएलिस् ) ( उभिऔंली, उभिएलेउ–उली. )
उभिएला उभिएलान्, उभिनन्
( उभिएली ) ( उभिएलिन्, उभिनिन् )

सकर्मक दिनु०दि–धातुका रूप :–

म– दिउंला हामी- दिऔंला
तं– देलास् तिमी- देऔंला, देलाउ, देउला
( देलिस् ) ( देऔंला, देलेउ, देउली )
त्यो- देला तिनी- देलान्, दिनन्
( देली ) ( देलिन्, दिनिन् )

सक०धुनु०धु–धातुका रूप :–

धोउंला धोऔंला
धोलास् धोऔंला, धोलाउ, धोउला.

| | |
|---|---|
| ( धोलिस् ) | ( धोऔली, धोलेउ, धोउली ) |
| धोला | धोलान्, धुनन् |
| ( धोली ) | ( धोलिन्, धुनिन् ). |

टि. १ दुइ किसिमका भविष्यत्मा सामान्य-भविष्यत्का ' गर्नेछु, जानेछु ' इत्यादि रूपबाट अंग्रेजीमा प्रथमपुरुषमा Shall, द्वितीय तृतीय पुरुषमा Will लागेका I shall go ( म जानेछु ), He will do ( त्यो गर्नेछ ) इत्यादि रूपबाट झैं सो क्रिया पछि हुनामा जोर अर्थात् निश्चयको तात्पर्य बुझिन्छ; संभावना-भविष्यत्का ' गर्ला, जाला ' इत्यादि रूपबाट अंग्रेजीमा प्रथमपुरुषमा Will, द्वितीय तृतीय पुरुषमा Shall लागेका I will go ( म जाउंला ), He shall do ( त्यो गर्ला ) इत्यादि रूपबाट झैं सो क्रिया पछि हुनामा जोर नबुझिई संभावनाको किसिम संग भविष्यत् बुझिन्छ.

टि. २ संभावना-भविष्यत्का रूपबाट कहीं भविष्यत् कहीं संभावना मात्र पनी बुझिन्छ. भविष्यत् बुझिएको ठांउमा सामान्यार्थको संभावना-भविष्यत् हुन्छ, संभावना मुख्य भई बुझिएको ठाउंमा भने पछि लेखिने अनिश्चयार्थ हुन्छ; यसले यी रूप दुवै किसिमका अर्थमा पर्दछन्, मौका हेरी छुट्याउनुपर्दछ. जस्तै :–

भविष्यत्– सीता भेटि म फर्कुंला ( फर्कनेछु ) र रघुनाथ्ज्यूका हजुर्मा गई विस्तार् विन्ति गरेर आइ पसुंला (पस्नेछु ) तिम्रो अह्वारा भई. ( भानु. )

संभावना– गोपाल अहिले घरमा होला. यो बोझ को शक्ला ?

## विध्यर्थ. ( Imperative mood )

१४४. धातुबाट ' ऊं, औं ' आदि विध्यर्थका विशेष प्रत्यय कहीं विकार समेत भई बनेका रूपबाट ' विध्यर्थ ' बुझिन्छ. यसमा सबै लिङ्गमा एकैनास हुन्छ.

( क ) विध्यर्थ प्रथमपुरुषमा प्रार्थना आदि, द्वितीयपुरुषमा आज्ञा आदि, तृतीयपुरुषमा विधान आदि विशेष अर्थ बुझिन्छन.

( ख ) विध्यर्थमा सामान्यरूप प्रत्ययहरूमा यी विशेष हुन्छन्:-

( १ ) 'एस्, ए,नू' बाहेक अरू प्रत्यय हुंदा अकारान्त र अनेकाक्षर-उकारान्त धातुको अन्त्य स्वर ( अ, उ ) कट्टा भएको भाग, एकाक्षर-उकारान्त धातुको ओकारान्त, द्वितीयपुरुषमा मात्र एकाक्षर-इकारान्त धातुको एकारान्त सामान्यरूप हुन्छ, अरूमा फरक पर्दैन.

( २ ) द्वितीयपुरुषमा हलन्त धातुमा एकवचनमा प्रत्ययको लोप, दुवै थरी अनेकवचनमा अ प्रत्यय, अकारान्त र अनेकाक्षर सव्यञ्जन-उकारान्त धातुबाट एकवचनमा ई, दुवै थरी अनेकवचनमा अ प्रत्यय, अरू उकारान्त आकारान्त धातुबाट एकवचनमा प्रत्ययको लोप अनेकार्थीमा ओ प्रत्यय, आदरार्थीमा अनेकाक्षर-इकारान्त धातुमा औ, अरूबाट ऊ प्रत्यय

हुन्छ. अरू पुरुषमा आदर अनेक दुवैमा फरक हुंदैन.

( ३ ) द्वितीयपुरुषमा भविष्यत्परोक्ष अर्थात् पछि हुने वक्ताले नदेखिने कुराको विधान बुझाउंदा सबै धातुबाट सामान्य-भूतमा हुने बमोजिम सामान्यरूप भई एकवचनमा एस्, दुवै थरी अनेकवचनमा ए प्रत्यय हुन्छ.

( ४ ) सबै धातुबाट सामान्यरूप नबदली सबै लिङ्ग, पुरुष, वचनमा एकैनासको नू प्रत्यय पनी हुन्छ.

टि. आउनु क्रियाको द्वितीयपुरुष एकवचनमा ' आइज ' यस्तो पनी हुन्छ. लानु क्रियाका ' लगेस्, लगे ' यी रूप मात्र हुन्छन्, अरूमा लैजानु क्रियाकै प्रयोग हुन्छ.

| अक०वस्-धातुका. | | अक०सप्र-धातुका. | | सक०दुह-धातुका | |
|---|---|---|---|---|---|
| वसूं | वसौं | सप्रूं | सप्रौं | दुहूं | दुहौं |
| {वस | वस | सप्री | सप्र | दुही | दुह |
| {वसेस् | वसे | सप्रेस | सप्रे | दुहेस् | दुहे |
| वसोस् | वसून् | सप्रोस् | सप्रून् | दुहोस् | दुहून् |

| अक०जा-धातुका रूप :– | | | अक०आउ-धातुका रूप :– | | |
|---|---|---|---|---|---|
| जाऊं | जाऔं | [ आदर ] | आऊं | आऔं | |
| {जा | जाओ | जाऊ | आ, आइज | आओ | आऊ |
| {गएस् | गए | गए | आएस् | आए | आए |
| जाओस् | जाऊन् | | आओस् | आऊन् | |

| सक० ला, लैजा-धातुका रूप :– | | | सक० दि-धातुका रूप :– | | |
|---|---|---|---|---|---|
| लैजाऊं | लैजाऔं | | दिऊं | दिऔं | |
| लैजा | लैजाओ | लैजाऊ | दे | देओ | देऊ |
| लगेस् | लगे | लगे | दिएस् | दिए | दिए |
| लैजाओस् | लैजाऊन् | | दिओस् | दिऊन् | |

| सक० धु-धातुका रूप :– | | | अक० उभि-धातुका रूप :– | | |
|---|---|---|---|---|---|
| धोऊं | धोऔं | | उभिऊं | उभिऔं | |
| धो | धोओ | धोऊ | उभि | उभिओ | उभिऔ |
| धोएस् | धोए | धोए | उभिएस् | उभिए | उभिए |
| धोओस् | धोऊन् | | उभिओस् | उभिऊन् | |

मैले, हामीले, तैंले, तिमीले, त्यसले, तिनीले—बस्नू, गर्नू, दिनू, सम्झनू, लानू, आउनू. इत्यादि

## अनिश्चयार्थ. ( Subjunctive mood )

१४५. अनिश्चयार्थ दुइ किसिमको हुन्छ :–
(क) संभावनार्थ र (ख) सङ्केतार्थ.

## (क) संभावनार्थ. ( Probability )

१४६. केही क्रियाको संभावना प्रधान भएर बुझिएमा 'संभावनार्थ' हुन्छ.

१४७. सो संभावनार्थ—सामान्य, अपूर्ण, पूर्ण, यिनका भेद्ले तीन थरी हुन्छन्.

## ( १ ) सामान्य-संभावनार्थ.

१४८. संभावना—भविष्यत्मा लेखे बमोजिम 'उंला' आदि प्रत्यय भई बनेका रूपबाट संभावना प्रधान भएर बुझिएमा 'सामान्य-संभावनार्थ' हुन्छ. यस्तामा सो क्रियाको सामान्य संभावना बुझिन्छ.

( क ) संभावना-भविष्यत्मा अघि लेखेका रूप र सामान्य-संभावनार्थका रूप एकै हुन्छन्; भविष्यत् बुझिने मौकामा सामान्यार्थका रूप, संभावना मुख्य भई बुझिने मौकामा संभावनार्थका रूप भनि छुट्याउनुपर्दछ. जस्तै :—

भविष्यत्— म भोलि आउंला ( आउनेछु ). यस पाला छोरो होला ( हुनेछ ).
संभावना— सन्दूकमा रुपियां होला. आगाले पोल्ला.

## ( २ ) अपूर्ण-संभावनार्थ.

१४९. विकार नभएका 'तो, दो' प्रत्ययान्त संग 'हुंला' आदि सहायक क्रिया मिलेका रूपबाट 'अपूर्ण-संभावनार्थ' बुझिन्छ. यस्तामा अहिले भइरहेको क्रियाको संभावना बुझिन्छ.

त्यो पढ्दो होला. तिनीहरू लेख्ता होलान्. दिदी आउंदी होलिन्. त्यो गर्दै होला. गवैयाहरू गाउंदै हुनन्.

टि. १ यसको प्रायः तृतीयपुरुषमैं ज्यादा प्रयोग भएको देखिन्छ, प्रथम द्वितीय पुरुषमा उस्तै मौकामा प्रयोग हुन्छ. यसमा प्रायः अवधारणार्थक ऐकारान्त भएको प्रयोग ज्यादा हुन्छ.

टि. २ कहीं ' तो, दो ' प्रत्ययान्त संग ' हुं, ह्वौं ' आदि सहायक मिलेमा पनी यस्तै अपूर्ण-संभावनार्थ बुझिने हुन्छ. त्यो प्रायः भूतकालको क्रियामा व्यवहार गरिन्छ. जस्तै :–
तिमी आउंदा म खांदो हुं. तपाईंले भेट्ता ती केटाकेटी नै हुंदा हुन्.

## ( ३ ) पूर्ण-संभावनार्थ.

१५०. विकार नभएका ' एको ' प्रत्ययान्त संग ' हुंला ' आदि र सामान्य-भूतका क्रियापद संग ' हुं ' आदि वा ' हुंला ' आदि सहायक क्रिया मिलेका रूपबाट ' पूर्ण-संभावनार्थ ' बुझिन्छ. यस्तामा अघि भइसकेको क्रियाको संभावना बुझिन्छ.

( क ) सामान्य-भूतको क्रियापद जोडिएमा मुख्य र सहाय दुवै क्रियापद लिङ्ग, वचन, पुरुष मिलाई राख्नुपर्दछ. जस्तै :-

म त्यहाँ गएको हुंला, गएँ हुंला, गएँ हुं. हामी गएका ह्वौंला, गयौं ह्वौंला, गयौं ह्वौं. त्यसले देखेकी होली, देखी हो-

ली, देखी हो. तिनीले देखेका होलान्, देखेकै होलान्, देखे होलान्, देखे हुन्.

टि· कहीं अघिको नियम बमोजिम विकार भएको ' एको ' प्रत्ययान्त संग ' हुंला, हुं ' आदि सहायक क्रिया मिलेको रूप पनी पूर्ण-संभावना बुझाउने गरी प्रयुक्त हुन्छ. ' जस्तै :–
तं गइहोलास्, गइहोस्. हामीले देखेह्नौंला, देखेह्नौं.

## ( ख ) सङ्केतार्थ. ( Condition )

१५१. कुनै अनेक क्रियामा एउटाचाहीं क्रिया साधन ( कारण ), अर्कोचाहीं क्रिया साध्य ( कार्य ) भएर ' यसो भए यसो ' भन्ने सङ्केत ( शर्त ) बुझिएमा ' सङ्केतार्थ ' हुन्छ.

( क ) सङ्केतार्थमा प्रायः वाक्य दुइ भई अघिल्लोचाहीं साधन, पछिल्लोचाहीं साध्य भएर बुझिन्छ. त्यसमा भूतकालको क्रिया भए प्रायः सो क्रियाको असिद्धि समेत विशेष बुझिन्छ.

जस्तै :– तपाईंले बोलाए म आउनेछु. किताप पाए ल्याउनू. आएको भए पाउने थियो ( आएन र पाएन ). पानी परेको भए सहकाल हुंदो हो ( परेन र भएन ). इ०

टि· १ कहीं सङ्केतार्थ बुझिने ठाउंमा पनी एउटै वाक्य देखिन्छ. त्यस्तामा अर्को वाक्य दबिएको हुन्छ, मौकाहरूबाट बुझ्नुपर्दछ.
जस्तै :– ( मलाई भनेको भए ) म जाने थिएं, केही भनेनन्. नत्र ( मानेको भए ) म किन कुट्थें ?

टि. २ कहीं उही क्रिया साध्य पनी इच्छा रूपले साधन पनी भएर प्रयुक्त हुन्छ. जस्तै :–

जान्छौ भने ( जान मन छ भने ) जाऊ. गर्दैन भने नगरोस्. खाने भए खाऊ.

१५२. सङ्केतार्थ–सामान्य, अपूर्ण, पूर्ण, असिद्धि यिनका भेदले चार थरी हुन्छन्.

## ( १ ) सामान्य-सङ्केतार्थ.

१५३. धातुबाट ' ए ' प्रत्यय भई बनेको रूपबाट सामान्य-सङ्केतार्थ बुझिन्छ. यो रूप सबै लिङ्ग पुरुष वचनमा एकैनास हुन्छ. धातुको सामान्यरूप सामान्य-भूतमा हुने बमोजिम हुन्छ. यस्तामा सो क्रियाको सामान्य सङ्केत अर्थ बुझिन्छ.

म, हामी, तं, तिमी, त्यो, तिनी–बसे, गए, आए, सपे, उभिए–बेस होला. मैले, हामीले, तैंले, तिमीले, त्यसले, तिनीले–गरे, धोए, दिए, दुहे–असल होला.

टि. यो ' ए ' प्रत्ययान्त शब्द कारण क्रिया बुझाउने नै हुन्छ, कार्य क्रिया बुझाउने क्रियापद भने प्रायः अरू सबै किसिमका हुन शक्छन्.

## ( २ ) अपूर्ण-सङ्केतार्थ.

१५४. विकार नभएका ' तो, दो ' प्रत्ययान्त संग ' भए '

यो सहायक मिलेका रूपबाट 'अपूर्ण-सङ्केतार्थ' बुझिन्छ. सहायक 'भए' शब्द सबै लिङ्ग वचन पुरुषमा एकैनास भएर रहन्छ. यस्तामा भइरहेको क्रियाको सङ्केत बुझिन्छ. जस्तै :-

पानी पर्दै भए बस. तिनीहरू आउंदा भए केही नभन्नू. छोरो धांक्तो भए बेस हो. म लेख्तो भए नबोलाए. छोरी चर्दी भए हप्काउ.

टि. यो अपूर्ण-सङ्केतको क्रियापद कारण पट्टि प्रयुक्त हुन्छ, त्यसमा पनी अवधारणार्थक ऐकारान्त ज्यादा प्रयुक्त हुन्छ; कार्य पट्टि भने अरू सबै किसिमका हुन शक्छन्, तर विध्यर्थको चाहीं ज्यादा प्रयुक्त हुन्छ.

## ( ३ ) पूर्ण-सङ्केतार्थ.

१९९. विकार नभएको 'एको' प्रत्ययान्त संग 'भए' यो सहायक मिलेका रूपबाट 'पूर्ण-सङ्केतार्थ' बुझिन्छ. यसमा पनी सहायक 'भए' शब्द सँधै एकैनास रहन्छ. यस्तामा भइसकेको क्रियाको सङ्केत बुझिन्छ. जस्तै :-

त्यो गएको भए बेस भयो. भात पाकेको भए खाऊ. छोरी आएकी भए दिनुपर्दछ. मैले लेखेको भए भयो हो. तैंले देखेकी भए गरिस् होलिस्.

टि. यो पूर्ण-सङ्केतको क्रियापद पनी कारण पट्टि प्रयुक्त हुन्छ, कार्य पट्टि भने मौका अनुसार अरू सबै किसिमका हुन शक्छन्.

## ( ४ ) असिद्धि-सङ्केतार्थ.

१५६. विकार नभएका ' तो, दो ' प्रत्ययान्त संग ' हुं ' आदि वा विकार नभएका ' ने ' प्रत्ययान्त संग ' थिएं ' आदि वा विकार ( नि. १३०–२,४ ) भएका ' ने ' प्रत्ययान्त संग ' थें ' आदि सहायक मिलेका रूपबाट ' असिद्धि-सङ्केतार्थ ' बुझिन्छ. यस्तामा सो कारण क्रिया नहुनाले कार्य क्रिया नभएको बुझिन्छ.

वस्तो (ती) हुं, वस्ने थिएं, वस्तथें, वस्थें — वस्ता ह्वौं, वस्ने थियौं, वस्तथ्यौं, वस्थ्यौं

वस्तो (ती) होस्, वस्ने थिइस्, वस्तथिस्, वस्थिस् — वस्ता (ती) ह्वौ, वस्ने थियौ, वस्तथ्यौ, वस्थ्यौ

वस्तो (ती) हो, वस्ने थियो (थिई), वस्तथ्यो (थी), वस्थ्यो (थी) — वस्ता (ती) हुन्, वस्ने थिए, वस्तथे (थि), वस्थे (थिन्).

यस्तै–गर्-गर्दो हुं, गर्दी हुं, गर्ने थिएं, गर्दथें, गर्थें, गर्दा ह्वौं, गर्ने थियौं, गर्दथ्यौं, गर्थ्यौं; आउ-आउंदो हुं, आउंदी हुं, आउने थिएं, आउंदथें, आउथें, आउंदा ह्वौं, आउने थियौं, आउंदथ्यौं, आउंथ्यौं; खा-खांदो हुं, खादी हुं, खाने थिएं, खान्थें, खांदा ह्वौं, खाने थियौं, खान्थ्यौं. इ० अवधारणमा–वस्न्यै, गर्न्यै, आउन्यै, खान्यै-थिएं, थियौं.

टि. १ ' वस्तथें, वस्थें, गर्दथें, गर्थें, आउंदथें, आउथे, खान्थें ' इ-

त्यादि रूप '. तो, दो ' प्रत्ययको विकार भएका अपूर्ण-भूतमा र ' ने ' प्रत्ययको विकार भएका सङ्केतार्थमा एकैनास भए पनी अर्थ अनुसार छुट्टिने हुन्छन्. जस्तै :-

अ.भूत–मैले भेट्ता ती घर जान्थे ( जांदा थिए ). पोहोर म काव्य पढ्दथें ( पढ्दो थिएं ).

सङ्केत--पाए देखि ती घर जान्थे ( जाने थिए ). किताप पाए काव्य पढ्दथें ( पढ्ने थिएं ).

टि. २ यी असिद्धि-सङ्केतार्थका रूप भूत वा भविष्यत्कालका क्रियामा प्रयुक्त हुन्छन्. यस्तामा क्रियाको असिद्धि ( अर्थात् कारण क्रिया नहुनाले कार्य क्रिया नहुनु ) भूतमा स्पष्टै बुझिन्छ, भविष्यतमा भने झलक्क संम बुझिन्छ. यसमा भूतमा ' वस्तो हुं ' आदि ' तो, दो ' प्रत्ययान्त जोडेका रूप कार्य पट्टि वा ' त, ता ' यी योजक संग रही कारण पट्टि पनी, ' वस्ने थिएं, वस्तथें, वस्थें ' आदि ' ने ' प्रत्ययान्त जोडेका रूप कार्य पट्टि मात्र, कारण पट्टि पूर्ण-सङ्केताथका रूप पनी प्रयुक्त हुन्छन्; भविष्यतमा कारण पट्टि प्रायः सामान्य-सङ्केतार्थका रूप वा "भने ' यो योजक संग रहेका सामान्य-भूतका रूप भई कार्य पट्टि माथिका रूप प्रयुक्त हुन्छन्. जस्तै :-

भूत–पानी पर्दो हो त सहकाल हुंदो हो, पानी परेको भए सहकाल हुने थियो वा हुन्थ्यो, हुंदो हो ( पानी परेन र सहकाल पनी भएन ). त्यसले डाक्तो हो त वा डाकेको भए म आउंदो हुं, आउने थिएं, आउंदथें, आउंथें. ( डाकेन र आइनं ).

भवि–फुर्सत पाए म पनी जांदो हुं, ( पाउनेछैनं त्यसैले जाओइनं ). यस पाला पास भए वा भइस् भने तँ पनी इनाम पाउंदो

होस्, पाउने थिइस्, पाउंथिस् ( पास हुनेछैनस्, त्यसैले इनाम पाउनेछैनस् ).

टि. ३ सङ्केतार्थमा कारण कार्य दुवै पट्टि मौका अनुसार प्रायः सबै कालहरूका क्रियापद रहन शक्छन्; तर भविष्यत्मा कारण पट्टि भविष्यत्को रूप रहंदैन, त्यसको बदलामा पनी भूतकै रूप प्रयुक्त हुन्छं, भविष्यत्मा कार्य पट्टि भूतको रूप पनी प्रयुक्त हुन्छ. कारण कार्य क्रिया भएका वाक्यका बिचमा तिनलाई जोड्ने ' भने, देखि, भने पो, पो, त, देखि, भने त ' इत्यादि योजक शब्द व्यवहार अनुसार प्रयोग गरिन्छन्, भविष्यत्कालमा 'कि' यो योजक भूतको क्रियापद संग रहेमा शीघ्रता समेत बुझिन्छ.

जस्तै :– नानी पढ्दछ भने मागेको कुरा दिन्छु. पास भइस् भने देखि इनाम पाउलास्. चिठी आयो कि म हिंडें. सोधेको बेलामा भनेन कि चुटाइ खानेछ. त्यसलाई दिऊं भने उ रिसाउनेछ. बदमासी गरिस् भने गोधाइ खाइस्.

टि. ४ अंग्रेजीको Subjunctive mood ( अनिश्चयार्थ ) मा प्रायः दुइ वाक्य हुन्छन्, हाम्रो भाषामा भने संभावनार्थचाहींमा संस्कृतको संभावना-लिङ्मा झैं एकै वाक्य पनी हुन शक्छ, सङ्केतार्थचाहींमा भने संस्कृतका लृङ्, हेतुहेतुमद्भाव–लिङ्मा झैं दुवै वाक्य हुन्छन्, स्पष्ट नभए पनी गुप्त संझनुपर्दछ. संस्कृतको लृङ् लकारमा हाम्रो असिद्धि–सङ्केतार्थमा झैं भूत वा भविष्यत्मा क्रियाको असिद्धि समेत बुझिन्छ, हेतुहेतुमद्भाव–लिङ् लकारमा हाम्रो अरू सङ्केतार्थमा झैं सङ्केत मात्र बुझिन्छ.

प्रश्न :–

( १ ) सामान्यार्थ, विध्यर्थ, अनिश्चयार्थ कस्ता कस्ता हुन्छन् ?

कुन कुन काल अर्थ कति कति किसिमका हुन्छन् ? स्त्रीलिङ्गमा कुन कुनमा के के विशेष हुन्छन् ? सङ्केतार्थमा के के विशेष हुन्छन् ? ( संस्कृतमा र अंग्रेजीमा ह्याम्रो भाषामा भन्दा काल अर्थमा के के विशेष हुन्छन् ? )

( २ ) तल लेखेका वाक्यमा परेका क्रियापदका धातु, वाच्य, काल, अर्थ, लिङ्ग, पुरुष, वचनहरू छुट्याऊ :–

शक्ने भए लैजाओस्. ह्यामी त्यसलाई चिठी लेखाउंदै थियौं. असल माल पाइस् भने किनेस्, यसले पाठ बिर्सेछ. शय वर्ष संम बांचे, यति काम म गरुंला. त्यो भन्दी छ. घाम लागेको भए लुगा शुक्थ्यो. गवैयाहरू गाउंदै होलान्. तिमी हेर्दै थियौ. हे ईश्वर ! म सुखी होऊं.

## १७—अकरण. ( Negative )

१८७. क्रियापदमा निषेध बुझाउने नकार जोडिंदा अकरण अर्थात् क्रियाको अभाव बुझिन्छ. जस्तै :–

गर्दैन, नगरोस्, गएन, गरेनथ्यो, वसेन हो. इ०

टि. संस्कृतहरूमा अकरण बुझाउंदा क्रियापद भन्दा अगाडि निषेध बुझाउने न आदि शब्द रहन्छन्; ह्याम्रो भाषामा भने कहीं त्यस्तै नकार अघिल्तिर रहेको, कहीं प्रत्ययहरू संग नकार मिली प्रत्ययै अर्को जस्तो भएको, कहीं नकार बिचमा परेको हुन्छ.

यस कारणले करणको रूप भन्दा अकरणको रूप प्रायः भिन्नै देखिन्छ.

१५८. क्रियापदमा नकार तीन किसिम संग जोडिने हुन्छन् :-

( १ ) कहीं पहिले जोडिएको—नगरोस्, नजा, नगएं. इ०

( २ ) कहीं प्रत्यय संग मिलेको-बस्तैन, बसेन, जाओइन. "

( ३ ) कहीं बिचमा रहेको—गरेनथ्यो, भनेनछ, बसेन हो. "

१५९. प्रत्यय संग नकार मिल्दा सामान्य प्रत्यय संग मिलेर यस्ता आकार हुन्छन् :—

| | | |
|---|---|---|
| प्रथम पु०— | न + अँ = नँ | न + औं = नौं |
| द्वितीय पु०— | " + अस् = नस् | " + औ = नौ |
| तृतीय पु०— | " + अ = न | " + अन् = नन् |

१६०. यी नकार मिलेका प्रत्यय र कहीं 'न, तै, दै, ऐ, इ, ओइ' आदि विशेष वर्ण समेत थपिई हुनु-क्रियाका सरल रूप यस्ता हुन्छन् :—

| ( १ ) वर्तमान. | | ( २ ) वर्तमान. | | ( १ ) भूत. | |
|---|---|---|---|---|---|
| छैनं | छैनौं | होइनं | होइनौं | थिइनं | थिएनौं |
| छैनस् | छैनौ | होइनस् | होइनौ | थिइनस् | थिए(इ)नौ |
| छैन | छैनन् | होइन | होइनन् | थिए(इ)न | थिए(इ)नन् |

| ( ३ ) वर्तमान. | | ( २ ) भूत. | |
|---|---|---|---|
| हुंदिनं, हुन्नं | हुंदैनौं, हुन्नौं | भइनं | भएनौं |
| हुंदैनस्, हुन्नस् | हुंदै(दि)नौ, हुन्नौ | भइनस् | भए(इ)नौ |
| हुंदैन, हुन्न | हुंदै(दि)नन्, हुन्नन् | भए(इ)न | भए(इ)नन् |

| सामान्य-भविष्यत्. | | संभावना, वा संभा०भविष्यत्. | |
|---|---|---|---|
| हुनेछैनं | हुनेछैनौं | होओइनं | होओइनौं |
| हुनेछैनस् | हुनेछैनौ | होओइनस | होओइनौ |
| हुनेछैन | हुनेछैनन् | होओइन | होओइनन् |

( क ) विध्यर्थ र सामान्य–सङ्केतार्थमा, एक पत्त संभावना-भविष्यत् वा सामान्य–संभावनार्थमा पनी अघिल्तिर नकार मात्र जोडिन्छ. जस्तै :–

नहोऊं, नहोऊ, न होऊन्, नहुनू ; नहुंला, न होलान्, न होऔंला; नभए. इत्यादि

१६१. अकरणमा सरल क्रियापद यसरी बन्दछन :–

( १ ) सामान्य-वर्तमानमा–धातु र प्रत्ययको बिचमा स्वरन्त-धातुमा तै, हशन्त-धातुमा दै, अजन्त-धातुमा न् वा धातुको अन्त्य स्वर अनुनासिक समेत भई दै भएर नकार मिलेका प्रत्यय हुन्छन्. प्रथमपुरुषको एकवचनमा, स्त्रीलिङ्गको एकवचन र आदरार्थीमा ‘ तै, दै ’ को वदला ति, दि यस्तो हुन्छ. जस्तै :–

| | | | |
|---|---|---|---|
| वस्तिनं | वस्तैनौं | गर्दिनं | गर्दैनौं |
| वस्तै(ति)नस् | वस्तै(ति)नौ | गर्दै(दि)नस् | गर्दै(दि)नौ |
| वस्तै(ति)न | वस्तै(ति)नन् | गर्दै(दि)न | गर्दै(दि)नन् |

| | | | |
|---|---|---|---|
| आउंदिनं, | आउन्नं | आउंदैनौं, | आउन्नौं |
| आउंदै(दि)नस्, | आउन्नस् | आउंदै(दि)नौ, | आउन्नौ |
| आउंदै(दि)न, | आउन्न | आउंदै(दि)नन्, | आउन्नन्. |

( २ ) सामान्य-भूतमा—करणको बमोजिम धातुको सामान्य-रूप भई त्यसको र प्रत्ययको बिचमा प्रथम द्वितीय पुरुषको एकवचन र आदरार्थीमा इ, अरूमा ए थपिई नकार मिलेका प्रत्यय हुन्छन्. जस्तै :—

| | | | | | |
|---|---|---|---|---|---|
| वसिनं | वसेनौं | आइनं | आएनौं | धोइनं | धोएनौं |
| वसिनस् | वसे(सि)नौ | आइनस् | आए(इ)नौ | धोइनस् | धोए(इ)नौ |
| वसे(सि)न | " " नन् | आए(इ)न | " " नन् | धोए(इ)न | " " नन् |

( ३ ) सामान्य-भविष्यत्मा—' छैनं, छैनौं ' आदि सहायक मिलेका जस्ता नकार मिलेका प्रत्यय हुन्छन्. जस्तै :—

गर्नेछैनं, गर्नेछैनौं; गर्नेछैनस्, गर्नेछैनौ; गर्नेछैन, गर्नेछैनन्.

( ४ ) संभावना-भविष्यत् वा सामान्य-संभावनार्थमा—अकारान्त र अनेकाक्षर-उकारान्त धातुको अन्त्य स्वर कट्टा भएको भाग, एकाक्षर-इकारान्त धातुको एकारान्त, एकाक्षर-उकारान्त धातुको ओकारान्त सामान्यरूप भई त्यसको र प्रत्ययको

विचमा ओइ थपिई नकार मिलेका प्रत्यय हुन्छन्. जस्तैः-

गरोइनं गरोइनौं आओइनं आओइनौं धोओइनं धोओइनौं
गरोइनस् गरोइनौ आओइनस् आओइनौ धोओइनस् धोओइनौ
गरोइन गरोइनन् आओइन आओइनन् धोओइन धोओइनन्

( ५ ) विध्यर्थमा, सामान्य-संकेतार्थमा, एकपक्ष संभावना-भविष्यत् वा सामान्य-संभावनार्थमा करणको रूपमा अघिल्तिर नकार मात्र जोडिन्छ, जस्तै :-

विधि—नगरोस्, नगरून् ; नजा, नजाओ; नदिनू. इ०
संभा—नगर्ला, नगर्नन् ; नखाउँला, नखाऔंला; इ०
संके—नगरे, नखाए, नभए, नदिए, इ०

१६२. अकरणमा संयुक्त क्रियापद यसरी बन्दछन् :—

( १ ) विकार नभएको कृदन्त जोडिएमा सहायक क्रियाको अकरणको रूप प्रयुक्त हुन्छ. जस्तै :—

अपूर्ण-वर्तमान—गर्दो छैनं, गर्दी छैनं, गर्दा छैनौं, बस्ती छैन. इ०
पूर्ण-वर्तमान-बसेकोछैनं, बसेकीछैनं, बसेकाछैनौं, गएकीछैनन् ”
अपूर्ण-भूत—बस्तो थिइनं, बस्ती थिइनं, बस्ता थिएनौं, इ०
पूर्ण-भूत—बसेको थिइनं, बसेकी थिइनं, बसेका थिएनौं. इ०
अपूर्ण-संभावनार्थ—बस्तो होओइन, गर्दी होओइनं. इ०
पूर्ण-संभावनार्थ—बसेको होओइनं, बसेकी होओइन. इ०

( २ ) विकार भएको ' एको ' प्रत्ययान्त जोडिएमा करणका रूपमा सो कृदन्त र सहायको विचमा नकार थपिन्छ.

पूर्ण-भूत-वसेनथें, वसिनथें, वसेनथ्यौं, गइनथिस्. इ०

अज्ञात-भूत-वसेनछु, वसिनछु, वसेनछौं, गइनछस्. इ०

( ३ ) विकार भएका ' तो, दो, ने ' प्रत्ययान्त जोडिएमा विचमा तै, दै, न् का साथमा नकार थपिई मुख्य क्रियाको सामान्य-वर्तमान तृतीयपुरुष एकवचनमा हुने अकरणको रूप संग सहाय क्रिया जोडिए जस्ता रूप हुन्छन. जस्तै :–

अपूर्ण-भूत वा असिद्धि-संकेतार्थ–वस्तैनथें, वस्तिनथें, वस्तैनथ्यौं, गर्दैनथिस्, गर्दिनथिस्, गर्दैनथ्यौ, गर्दिनथ्यौ, आउंदैनथ्यो, आउंदिनथी, आउन्नथ्यो, इ०

असिद्धि-संकेतार्थ–वस्तैनहो, वस्तिनहो, गर्दैनहुन्, आउंदैन हुं, आउंदिनहुं, आउन्नहुं, आउंदैनह्वौ, आउंदिनह्वौ, इ०

( ४ ) क्रियापद क्रियापद जोडिएमा प्रायः मुख्य क्रियाको सामान्य-भूत तृतीयपुरुष एकवचनमा हुने अकरणको रूप संग सहाय क्रिया जोडिन्छन्. जस्तै :–

गरेन हुं, गरेन हुंला, गरिन हुं, गरिन हुंला, गरेन ह्वौं, गरेन ह्वौंला, गएन हो, गएन होला. इ०

टि. सङ्केतार्थमा साध्य वा साधन जता पट्टि जुन क्रियाको निषेध बुझाउनु छ उसैमा अकरणको रूप प्रयुक्त हुन्छ. त्यसमा सा-

मान्य-सङ्केतार्थमा सो रूपको अघिल्तिर, अपूर्ण-सङ्केतार्थमा सहायकको अघिल्तिर, पूर्ण-सङ्केतार्थमा सहायक वा मुख्य क्रियाको अघिल्तिर नकार जोडिन्छ; असिद्धि-सङ्केतार्थमा ने-प्रत्ययान्त अविकृत भएमा सहाय क्रिया अकरणको हुन्छ, विकृत भएमा अपूर्ण-भूत-अकरणको बराबर रूप हुन्छ, तो-दो–प्रत्ययान्त जोडिएमा अकरणको सहाय क्रिया जोडिने वा मुख्य क्रिया ने-प्रत्ययान्तको विकार भएमा हुने जस्तो रूप भएर जोडिने हुन्छ. जस्तै :-

नपढे कुट्नेछु, पढे कुट्नेछैनं. त्यो धोक्तै नभए हप्काउन्. लेख्तै भए नभनेस्. नफाटेको भए वा फाटेको नभए देऊ. पानी पर्दैनथ्यो त सहकाल हुंदैन हो. तपाईंले डाकेको नभए म आउंदैनथें वा आउन्नथें. भनेको भए जाने थिएन. निगाह नभएको भए सुख पाउंदो होइनं.

१६३. कृदन्त शब्दमा अकरण बुझाउंदा अघिल्तिर नकार जोडिन्छ. जस्तै :—

नगर्नु, नदिनु, नजाने, नगएको, नदेखी, भहेरी, नपढेर, नजान. इत्यादि

प्रश्न :—

( १ ) करण अकरण भनेका के के हुन् ? अकरणमा विशेष के हुन्छ ? अकरणमा नकार कसरी जोडिन्छ ? प्रत्ययमा नकार मिल्दा के के हुन्छन् ? अकरणमा सरल संयुक्त क्रियापद कस्ता रीत संग बन्दछन् ?

( २ ) तलका वाक्यमा परेका अकरण क्रियापदका धातु, अर्थ, काल, लिङ्ग, पुरुष, वचनहरू छुट्याऊ :—

नपद्नेलाई कोही निको मान्दैन. घोकेको भए॰ बिर्सिन्नथ्यो. ती अक्षर पनी आइनन्. तैंले देखिनकस्. यो खराप होइन. त्यो अक्षर उठेकी छैन. तिमी नजाऊ. मलाई नभेटेको भए थाहा पाउंदैन हो. परमेश्वरले नदिए कसैले दिंदैनन्. राम्रु किन गएन होलान्. हामीले त्यो कुरा सुनेनथ्यौं.



## १८—कर्मवाच्य र भाववाच्य.

## ( Passive and Impersonal voice )

१६४. कर्मवाच्य भाववाच्य क्रिया बुझाउंदा सबै धातु इकार थपिएर इकारान्त हुन्छन्.

( क ) कर्म-भाववाच्य हुंदा मूल धातुको प्रायः भूतकालमा हुने सामान्यरूपमा इकार थपिन्छ. ' हु, जा, लैजा ' धातु भने यिनै धातुमा अथवा भूतकालका सामान्यरूपमा इकार थपिई दोहरै किसिमका हुन्छन्.

१६५. सकर्मकमा इकार थपिंदा कर्मवाच्य, अकर्मकमा इकार थपिंदा भाववाच्य क्रिया हुन्छन्. जस्तै :—

**सकर्मक.**

| कर्तृवा. | कर्म.वा. | कर्तृवा. | कर्मवा. | कर्तृवा. | कर्मवाच्य. |
|---|---|---|---|---|---|
| गर्छ— | —गरिन्छ. | लान्छ— | लगिन्छ. | धुन्छ— | —धोइन्छ. |
| कहन्छ— | —कहिन्छ. | दिन्छ— | दिइन्छ. | पाउँछ— | —पाइन्छ. |
| खान्छ— | —खाइन्छ. | दुहुन्छ- | दुहिन्छ. | सिउँछ— | —सिइन्छ. |

**अकर्मक.**

| कर्तृवा. | भाववा. | कर्तृवा. | भाववा. | कर्तृवा. | भाववाच्य. |
|---|---|---|---|---|---|
| बस्छ— | —बसिन्छ. | रुन्छ— | —रोइन्छ. | उभिन्छ- | उभिइन्छ. |
| बहन्छ— | —बहिन्छ. | तुहुन्छ— | तुहिन्छ. | जान्छ— | जा(ग)इन्छ. |
| सप्रन्छ— | सप्रिन्छ. | आउँछ— | आइन्छ. | हुन्छ— | —हो (भ)इन्छ. |

टि. 'जा, हु, लैजा' यिनका वर्तमान आदिमा मात्र 'जाइन्छ गइन्छ, होइन्छ भइन्छ, लगिन्छ लैजाइन्छ' इत्यादि दोहरै सामान्यरूप भएका रूप हुन्छन्, सामान्य-भूत र भूत-कृदन्त जोडिनेमा भने 'गइयो गइएकोछ गइएथ्यो गइएछ, भइयो भइएछ, लगियो लगिएथ्यो' इत्यादि एकोहरै रूप हुन्छन्.

१६६. कर्तृवाच्य क्रियाका झैं कर्मवाच्य क्रियाका पनी सबै काल, अर्थ, लिङ्ग, पुरुष, वचनका भेदले रूप हुन्छन्. सबै धातु इकारान्त हुने हुनाले सबैका 'उभि, विरि' आदि अनेकाक्षर इकारान्त धातुका कर्तृवाच्यका झैं गरी रूप चल्दछन्.

टि. कर्तृवाच्यमा कर्ता मुख्य गरी बुझिने हुनाले कर्ताको अनुसार लिङ्ग वचन पुरुषहरू भई रूप चल्दछन्, कर्मवाच्यमा कर्म मुख्य गरी बुझिने हुनाले कर्मको अनुसार लिङ्ग, वचन, पुरुषहरू भई रूप चल्दछन्. कर्तृवाच्यमा हलन्त अजन्त धेरै किसिमका

धातु हुने हुनाले धातु अनुसार रूपको कायदा फरक हुन्छ, कर्म-वाच्यमा भने यावत् धातु इकारान्तै हुने हुनाले सबैको एकै का-यदा संग रूप चल्ने हुन्छ.

१६७. सकर्मक कर्मवाच्य देखिनु क्रिया देखि-धातुका रूप :-

सामान्य वर्तमान.

करण.

| | |
|---|---|
| म– देखिन्छु | हामी– देखिन्छौं |
| तं– देखिन्छस् (–छेस् ) | तिमी– देखिन्छौ (–छयौ ) |
| त्यो- देखिन्छ (–छे ) | तिनी– देखिन्छन(–छिन् ) |

अकरण.

| | |
|---|---|
| देखिन्नं, देखिंदिनं | देखिन्नौं, देखिंदैनौं |
| देखिन्नस्, देखिंदैनस्(-दिनस् ) | देखिन्नौ, देखिंदैनौ (-दिनौ ) |
| देखिन्न, देखिंदैन (-दिन ) | देखिन्नन्, देखिंदैनन्(-दिनन्) |

यस्तै किसिम संग सबै काल अर्थका रूप चलाउनू.

अपूर्णवर्तमान–म–देखिंदो (दी) छु, हामी–देखिंदा छौं;
तं–देखिंदो (दी) छस्, तिमी–देखिंदा (दी) छौ;
त्यो–देखिंदो (दी) छ, तिनी–देखिंदा (दी) छन्.

पूर्णवर्तमान–म–देखिएको(की)छु, हामी-देखिएका छौं;
तं-देखिएको(की)छस्, तिमी-देखिएका(की)छौ;
त्यो-देखिएको(की)छ, तिनी-देखिएका(की)छन्.

सामान्यभूत-म-देखिएं, हामी–देखियौं; तं–देखिइस्, ति-

मी-देखियौं; त्यो-देखियो(ई),तिनी-देखिए(इन्).

अपूर्णभूत–म देखिंदो (दी) थिएं, देखिन्थें, हामी–देखिंदा थियौं, देखिन्थ्यौं; तं–देखिंदो(दी)थिइस्, देखिन्थिस्, तिमी–देखिंदा (दी) थियौ, देखिन्थ्यौ; त्यो–देखिंदो (दी) थियो (ई), देखिन्थ्यो (थी), तिनी–देखिंदा(दी)थिए(इन्), देखिन्थे(थिन्).

पूर्णभूत–म–देखिएको (की) थिएं, देखिए(इ) थें, हामी–देखिएका थियौं, देखिएथ्यौं; तं–देखिएको(की) थिइस्, देखिइथिस्, तिमी–देखिएका (की) थियौ, देखिए (इ) थ्यौ; त्यो–देखिएको (की) थियो (ई), देखिए(इ) थ्यो (थी), तिनी–देखिएका(की) थिए (इन), देखिए (इ) थे (थिन्).

अज्ञातभूत–म–देखिए(इ)छु, हामी–देखिएछौं, तं–देखिइछस्, तिमी–देखिए(इ)छौ, त्यो–देखिए(इ)छ, तिनी–देखिए(इ)छन.

सामान्य-भविष्यत्–म–देखिनेछु, हामी–देखिनेछौं; तं–देखिनेछस्, तिमी–देखिनेछौ; त्यो–देखिनेछ, तिनी–देखिनेछन्.

संभावना–भविष्यत्–म-देखिउंला, हामी–देखिऔंला; तं–देखिएला(लि)स्, तिमी-देखिऔला, एलाउ-एउला, (औली-लेउ-उली); त्यो–देखिएला(ली), तिनी–देखिएलान्–नन् (लिन्–निन्).

विध्यर्थ–म–देखिऊं, हामी–देखिऔं; तं–देखि, देखिएस्,
तिमी-देखिओ, देखिऔ, देखिए; त्यो-देखिओस्,
तिनी–देखिऊन्. मैले देखिनू.

संभावनार्थ–देखिउंला इ०, देखिंदै हुंला.इ०, देखिएको
(की)हुंला, देखिएं हुंला. इ०

सङ्केतार्थ–देखिए, देखिंदै भए, देखिएको(की)भए, देखिंदो
(दी)हुं, देखिने थिएं, देखिन्थें. इ०

अकरणमा–देखिंदो(दी)छैनं, देखिएको(की)छैनं; देखिइनं,
देखिंदो(दी)थिइनं, देखिन्नथें, देखिएको(की)थि-
एं, देखिए(इ)नथें, देखिए(इ)नछु; देखिनेछैनं,
देखिओइनं; नदेखिऊं; देखिंदै होओइनं, देखिएको
(की)होओइनं, देखिए(इ)हुंला; नदेखिए, देखिं-
दै नभए, देखिएको(की)नभए, देखिंदो(दी)होइन,
देखिंदैनहुं, देखिन्नहुं, देखिंदैनथें, देखिने थिइनं,
देखिन्नथें' इत्यादि काल, अर्थ, लिङ्ग, वचन,
पुरुष अनुसारका रूप हुन्छन्.

१६८. भाववाच्यमा भाव ( क्रिया ) मात्र मुख्य गरी बुझिने
हुनाले हरएक काल अर्थमा तृतीयपुरुष नपुंसकलिङ्ग एकव-
चनका रूप मात्र हुन्छन्. जस्तै :–

वर्त०-सा०-व सिन्छ, वसिंदैन, वसिन्न. अपू०-वसिंदो छ,
वसिंदो छैन. पूर्ण०-वसिएको छ, वसिएको छैन.

भूत-सा॰ वसियो, वसिएन. अपूर्ण॰-वसिंदो थियो, वसिन्थ्यो, वसिंदो थिएन, वसिन्नथ्यो. पूर्ण॰-वसिएको थियो, वसिएथ्यो, वसिएको थिएन. वसिएनथ्यो. अज्ञात॰-वसिएछ, वसिएनछ.

भवि॰-सा॰- वसिनेछ, वसिनेछैन. संभा॰-वसिएला, विधि-वसियोस्, नवसिओस्. [ वसिओइन.

संभावना-वसिएला, वसिंदै होला, वसिएको होला, वसियो हो; वसिओइन, वसिंदै होओइन, वसिएको होओइन, वसिएन हो.

सङ्केत-वसिए, वसिंदै भए, वसिएको भए, वसिने थियो, वसिन्थ्यो, वसिंदो हो; नवसिए, वसिंदै नभए, वसिएको नभए, वसिने थिएन,वसिन्नथ्यो, वसिंदैनथ्यो, वसिंदैन हो, वसिंदो होओइन.

टि. ह्राम्रो भाषामा कर्तृवाच्यको झैं कर्मवाच्य भाववाच्यको उस्तो प्रयोग छैन, कहीं कहीं उस्तै मौकामा मात्र हुन्छ.

प्रश्न :-

( १ ) कर्मवाच्य भाववाच्यमा धातुको के विकार हुन्छ ? कर्मवाच्य भाववाच्य हुंदा धातुको कस्तो सामान्यरूपमा इकार थपिन्छ ? कस्ता धातुको कर्मवाच्य, कस्ता धातुको भाववाच्य हुन्छ.

( २ ) तलका वाक्यमा परेका क्रियापदका धातु, वाच्य, काल, अर्थ, लिङ्ग, पुरुष, वचनहरू छुट्याऊ :-

आज कताबाट आइयो. लड्डू खाइन्छ कि खांइदैन ? बेसरी छ-
तिएछ. गइएको भए पुगिन्थ्यो. हराएको माल पाइनेछैन. इनाम
पाइएला भनिएथ्यो, दुर्नाम पो पाइएछ. नभनेको भए आइंदैनहो.

## १६–प्रेरणार्थक र नामधातु.

## ( Causative and Nominal verbs )

१६९. क्रियाको प्रेरणा बुझाउंदा कुनै मूल धातु 'आउ' प्रत्यय
थपिएर आउ अन्त्य हुने हुन्छन्, तिनलाई **प्रेरणार्थक**
( Causative ) भन्दछन.

( क ) प्रेरणार्थक हुंदा मुल धातुको प्रायः भूतमा हुने सामा-
न्यरूपमा **आउ** थपिन्छ; दुइ स्वर हुने धातुमा आदि स्वर
आ भए त्यसको बदला अ, अनेकाक्षर-इकारान्त धातुको अ-
न्त्य इ-को लोप, कहीं सो आउ–प्रत्ययमा य् व् ल् थपिई
**याउ, वाउ, लाउ** यस्ता विशेष पनी हुन्छन. जस्तै :-

| मूल. | प्रेरणा. | मूल. | प्रेरणा. | मूल. | प्रेरणा. |
|---|---|---|---|---|---|
| गर्छु | गराउंछु | हान्छु | हनाउंछु | दिन्छ | दिआ(या,ला)उंछ. |
| वस्छु | वसाउंछु | नाच्छु | नचाउंछु | छुन्छ | छोआ( वा )उंछ. |
| वहन्छ | वहाउंछ | उभिन्छु | उभ्याउंछु | पिउंछु | पिआ(या,ला)उंछु. |

टि. १ प्रेरणार्थक हुंदा प्रायः ' दि, लि, सिउ, पिउ, जिउ ' आदि एकाक्षर-इकारान्त सामान्यरूप हुने धातुमा आउ याउ लाउ तेह्रै, अनेकाक्षर-इकारान्त ' झिजि, फुर्कि ' आदि कुनैमा आउ याउ दोह्रै, बिरि, डभि, बक्सि ' आदि कुनैमा आउ मात्र, ' छु, धु, रु, दुह्, ब्रुह् ' आदि सव्यञ्जन-उकारान्त धातुमा आउ वाउ दोह्रै, ' खा, पुग् ' आदि कुनै धातुका " खुवाउ, पुऱ्याउ ' आदि विशेष आकार हुन्छन्.

टि. २ सबै धातुमा आउ भएर प्रेरणार्थक बन्ने नियम छैन; ' हुनु, जानु, शक्नु, आँक्नु, पाल्नु, ठान्नु ' आदि र ' आउनु, पाउनु, पठाउनु, समाउनु ' आदि अघिदेखि ' आउ ' भएका मूल धातुका, प्रेरणार्थक आउ भएका धातुका पनी अर्का प्रेरणार्थक बन्दैनन्. यस्ता प्रेरणार्थक नहुनेमा र हुनेमा पनी न-प्रत्ययान्त कृदन्त संग ' लाउनु ' क्रिया जोडेमा प्रेरणार्थकको जस्तो अर्थ बुझिन्छ. जस्तै :–

आउ नहुनेमा–हुन लाउंछ, जान लाउंछ, समाउन लाउंछ. इ०
" हुनेमा—गराउंछ=गर्न लाउंछ, दिलाउंछ=दिन लाउंछ. "
दोस्रो प्रेरणामा-गराउन लाउंछ, दिलाउन लाउंछ. "

टि. ३ आउ भएका धातु सबै प्रेरणार्थक हुने नियम छैन; ' आउनु, पाउनु, समाउनु, पठाउनु, दाउनु, काउनु ' आदि मूल धातु पनी आउ अन्त्यमा हुने हुन्छन्; सेक्नु=सेकाउनु, जड्नु=जडाउनु, वैलिनु=वैलाउनु, रम्नु=रमाउनु ' आदि आउ भए पनी नभएकै बराबर अर्थ हुने पनी हुन्छन्.

टि. ४ कोही दुइ थरी क्रियाका एकैनास प्रेरणार्थक हुन्छन्. जस्तैः-
तर्नु, तार्नु–तराउनु; बल्नु, बाल्नु–बलाउनु; चल्नु, चाल्नु–चलाउनु.

१७०. प्रेरणार्थक क्रिया अकर्मक मूल धातुबाट बनेकाचाहीं सकर्मक (एक कर्म हुने), सकर्मक मूल धातुबाट बनेकाचाहीं द्विकर्मक (दुइ कर्म हुने) हुन्छन्; अकर्मक हुंदैनन. जस्तैः—

एककर्मक-केटाकेटीलाई रोआयो. यसलाई उभ्याउंछु.

द्विकर्मक—गुरुलाई पाठ सुनाउंछु. तंलाई तसवीर देखाउंछु.

१७१. प्रेरणार्थक क्रिया सकर्मकै हुनाले यिनका कर्तृवाच्य र कर्मवाच्य यी दुइ वाच्य हुन्छन्. कर्मवाच्य हुंदा सामान्य नियम बमोजिम उ को बदलामा इ भई 'आइ' अन्त्य हुने इकारान्त धातु बन्दछन्. कर्तृवाच्यमा 'पाउ' धातुको बराबर, कर्मवाच्यमा त्यसैको कर्मवाच्य 'पाइ' धातुको बराबर सबै काल अर्थ लिङ्ग पुरुष वचनका भेदले प्रेरणार्थकका एकैनास संग रूप चल्दछन्. जस्तै :—

| कर्तृवाच्य. | कर्मवाच्य. |
|---|---|
| गराउं (द)छु, गराउंदिन—उन्नं. | गराइन्छु, गराइंदिनं—इन्नं इ० |
| उभ्याउं(द)छु, उभ्याउंदिनं " | उभ्याइन्छु, उभ्याइंदिनं " " |
| खुवाउं(द)छु, खुवाउंदिनं " | खुवाइन्छु, खुवाइंदिनं " " |

१७२. कुनै क्रियामा केही वर्णको विकार हुंदा अकर्मकबाट सकर्मक बन्दछन्. जस्तै :—

| अक. | सक. | अक. | सक. | अक. | सक. |
|---|---|---|---|---|---|
| तर्नु-- | तार्नु. | गल्नु- | गाल्नु. | सप्नु-- | सपार्नु. |
| झर्नु-- | झार्नु. | वल्नु- | वाल्नु. | उम्लनु- | उमाल्नु. |
| मर्नु-- | मार्नु. | गड्नु- | गाड्नु. | उत्रनु-- | उतार्नु. |

१७३. कोही नाम वा नामस्थानिक ( नाम जस्ता भएका ) विशेषण अव्ययबाट इ आउ प्रत्यय कहीं विकार समेत भएर पनी धातु बन्दछन्, त्यस्तालाई **नाम-धातु** (Nominal verb ) भन्दछन्.

( क ) नामधातु हुंदा प्रायः इ आउ भई अकर्मक, **याउ** भई सकर्मक हुन्छन्. अकर्मकमा **इइ आइ** हुंदा भाववाच्य, सकर्मकमा **याइ** हुंदा कर्मवाच्य पनी हुन्छन्. जस्तै :-

| | अकर्मक. | भाववाच्य. | सकर्मक. | कर्मवाच्य. |
|---|---|---|---|---|
| नाम. | रोग—रोगाउंछ | रोगाइन्छ | | |
| | डर—डराउंछ | डराइन्छ | | |
| | लाज—लजाउंछ | लजाइन्छ | | |
| | माटो—मटिन्छ | मटिइन्छ | मट्याउंछ | मट्याइन्छ. |
| विशे. | जिल्ल—जिल्लिन्छ | जिल्लिइन्छ | जिल्ल्याउंछ | जिल्ल्याइन्छ. |
| | सम्म--सम्मिन्छ | सम्मिइन्छ | सम्म्याउंछ | सम्म्याइन्छ. |
| | लामो—लमिन्छ | लमिइन्छ | लम्याउंछ | लम्याइन्छ. |

प्रत्यय. { भित्र—भित्रिन्छ भित्रिइन्छ भित्र्याउंछ भित्र्याइन्छ.
बाहिर-बाहिरिन्छ बाहिरिइन्छ बाहिऱ्याउंछ बाहिऱ्याइन्छ.

यस्तै :– फुरफुर–फुरफुरिन्छ–ऱ्याउंछ, लतपत–लतपतिन्छ–त्याउंछ, घिन–घिनाउंछ, भोक–भोकाउंछ, लोभ–लोभिन्छ–भ्याउंछ, चोइटो- चोइटिन्छ–ट्याउंछ, धुलो–धुलिन्छ–ल्याउंछ, डोरो–डोरिन्छ–ऱ्याउंछ, लात्ति–लत्तिन्छ-त्याउंछ, डबल–डबलिन्छ–ल्याउंछ, अमिलो–अमिलिन्छ-ल्याउंछ, दोवर–दोवरिन्छ- ऱ्याउंछ, हिस्स–हिस्सिन्छ-स्स्याउंछ. इत्यादि

प्रश्न :–

( १ ) प्रेरणार्थक भनेको के हो ? प्रेरणार्थक कसरी बन्दछ ? नाम-धातु भनेको के हो ? प्रेरणार्थक र नाम-धातु सकर्मक वा अकर्मक कस्ता हुन्छन् ? नामधातु कस्ता शब्दबाट बन्दछन् ?

( २ ) तल लेखेका वाक्यमा परेका क्रियापदको बयान गर :–

बादलले पानी बर्षायो. अब पर्दा उठाइएला. तिनलाई लेखाएर लाउंछु. त्यसले चौवऱ्यायो. यो मसिनिंदैन. कुह्नाएर बिगार्छ. चिठी सुनाऊ. तिनले हस्याइन्. मैले खूप हसाएयें. देखाएको भए लेखाउंदैनथ्यो.



## २०-मिलित-क्रिया. ( Compound verb )

१७४. कालहरूमा विशेष बुझाउने झैं अरू विशेष अर्थ बुझाउने गरी ' नु ने तै दै ई न ' प्रत्ययान्त कृदन्त क्रिया जोडिएका पनी संयुक्त क्रिया हुन्छन, त्यस्तालाई **मिलित-क्रिया** ( Compound verb ) भन्दन. जस्तै :-

जानुहुन्छ, गर्नेगर, पार्कै रहोस्, लेखिहाल्यो, गरिबक्सिन्छ, गर्न लाउंछ. इ०

टि. १ ती अनेक क्रियालाई भिन्न भिन्न राखेमा भन्दा मिलित गरी राखेमा कहीं अर्थ फरक पर्नें, कहीं वर्णको विकार हुने पनी हुन्छ. जस्तै :-

भिन्न—चिठी लेखी (बाकसमा) हाल. रुपियां झिकी बक्सियो.

मिलित—चिठी लेखिहाल (झट्ट लेख). रुपियां झिकिबक्सियो.

टि. २ मिलित क्रिया दुइ भन्दा बढता मिलेका पनी हुन्छन्.

जस्तै :- गर्दिनुभयो. लेखिहालिबक्सिएछ, राखिछोडिबक्सनुपर्दछ.

१७५. मिलित-क्रियामा ई-प्रत्ययान्त जोडिएमा सो ई ह्रस्व हुन्छ, दिनु क्रिया संग जोडिंदा लुप्त पनी हुन्छ. जस्तै :-

---

( १ ) संयुक्त वा मिलित क्रियामा वर्णहरूमा कही विकार भएकाचाहीं एकै पद गरेर, विकार नभएकाचाहीं भिन्न भिन्नै पद गरर लेख्ने अथवा ती जोडिएका भागलाई सानो रखाले जोडी लेख्ने पनी व्यवहार छ.

लेखिहाल्यो, गरिबक्सियो, भनिदिन्छु, भन्दिन्छु, गरिदिउंला, गर्दिउंला इ०

टि. सातत्यबोधकमा अतिशय सातत्य बुझाउंदा भने सो ई दीर्घ रहन्छ. जस्तै :- गरीरहन्छ, बसीरहेछ. इ०

१७६. मिलित–क्रियामा अघिल्ला मुख्य क्रिया ' नु, ने, तै, दै, ई, न ' आदि प्रत्ययान्त ' कृदंन्त जुनसुकै पनी हुन्छन्, पछिल्ला सहाय क्रिया भने प्रयोग अनुसार कुनै कुनै हुन्छन्. ती अर्थका हिसाबले यस्ता छन् :–

| अर्थ. | स्वरूप. | मिलित क्रियापद. |
|---|---|---|
| मानबोधक | —नु-हुनु,-ई-बक्सनु मिलेका- | गर्नुहुन्छ, गरिबक्सियो |
| आवश्यकता | –नु-पर्नु मिलेका– | गर्नुपर्छ, दिनुपऱ्यो |
| सातत्यबोधक | –तै दै–जानु गंर्नु हिंड्नु आदि, तै दै ई-रहनु, ने-गर्नु मिलेका– | लेख्तै जाऊ, हिंड्दै गर, भन्दै हिंड, पाक्तै रहोस्, गरिरह, जाने गर्छ |
| समाप्ति | "—ई–सक्नु मिलेका– | गरिसक्छु, लेखिसक्यो |
| शीघ्रता | "—ई–हाल्नु मिलेका– | गरिहाल्छु, खाइहाल्यो |
| परार्थता | "–ई–दिनु मिलेका– | भनिदिन्छु, भन्दिन्छु |
| स्थिति | "—ई–राख्नु मिलेका– | हेरिराख, खोजिराख |
| हठ | ,"—ई–छाड्नु,छोड्नु मिलेका- | गरिछाड्छ, लिइछोड्यो |

प्रेरणा "—न-लाउनु मिलेका- गर्न लाउंछ, भन्न लायो
निश्चय"—तै-दै-अकरण मिलेका- गर्दै गर्दैन, खांदै खाएन

यस्तै अनेक क्रिया मिलेर केही विशेष अर्थ बुझाउने धेरै किसिमका हुन्छन् :—

पुग्न गयो, गरिहेर, गरिआयौं, बोलिउठ्यों, आइगएछ, जाइजानेछ, गइगयो, राखिराख, बढ्न गयो, भन्न चाहन्छु, जान पाऊं, भनिपठायो, देखिन गयो, दिइदिएं. इ०

टि. मानबोधकमा 'हुनु' जोडेमा भन्दा 'बक्सनु' जोडेमा ज्यादा मान बुझिन्छ. यिनबाट कर्तृ-भाव-वाच्यमा कर्ताको, कर्मवाच्यमा कर्मको मान बुझिन्छ. हाम्रो भाषामा मान्यलाई भन्दा सबै क्रियामा यिनै मानबोधकको प्रयोग गर्ने व्यवहार छ. हुनु-जोडेकोचाहीं आफूलाई भन्दा प्रयोग गरिंदैन, बक्सनु-जोडेकोचाहीं भने प्रभुत्वको तात्पर्यले आफूलाई भन्दा पनी प्रयोग गरिन्छ. जस्तै :— गुरु आउनुभयो, तपाईं देखिनुभएन, सरकारबाट गरिबक्सियो, हामीबाट गरिबक्स्यौं, हजुर देखिइबक्सियो, के गर्नुहुन्छ ?

१७७. मिलित क्रियाका पनी सबै काल अर्थहरूमा लिङ्ग वचन पुरुषहरूका भेदले प्रायः सबै थरी रूप हुन्छन्, तर मानबोधक र आवश्यकताबोधकमा सबै रूप नभई यस्ता विशेष हुन्छन् :—

( १ ) हुनु जोडेको मानबोधक र पर्नु जोडेको आवश्यकताबोधकमा सबै काल अर्थमा तृतीयपुरुष नपुंसकलिङ्ग एकवचनका रूप मात्र हुन्छन. जस्तै :—

हात्रा, आमा, तपाञी, यांहाहरु–जानुहुन्छ,, वस्नुभएछ इ०

” ” ” ” ले–दिनुहुन्छ, खानुहोला इ०

मैले, हामीले, त्यसले, तिनीहरूले–जानुपर्छ, गर्नुपऱ्यो इ०

( २ ) बक्सनु-जोडेको मानबोधकमा सबै काल अर्थमा प्रथम पुरुषमा बक्सनु-क्रियाका बहुबचनका रूप मात्र, द्वितीय तृतीय दुवै पुरुषका दुवै वचनमा बक्सिनु–क्रियाका तृतीयपुरुष एकवचनका रूप मात्र प्रयुक्त हुन्छन. जस्तै :–

हामीबाट गरिबक्सन्छौं, गरिबक्स्यौं, गरिबक्सनेछैनौं, गरिबक्सेछौं. याहां, वाहां, हजुरहरू, महाराजबाट–गरिबक्सिन्छ, गरिबक्सियो, गरिबक्सिएछ, देखिबक्सिएनछ, पठाइबक्सिन्थ्यो, दिइबक्सिन्नथ्यो. इ०

टि. यिनमा ई-नु–प्रत्ययान्त कृदन्त जुन बाच्य सकर्मक अकर्मक जस्तो छ मिलित क्रिया पनी उस्तै कहलाउंछ. ‘ पर्नु, हुनु ’ क्रिया भने सबै वाच्यमा कर्तृवाच्यकै रहन्छ, ‘ बक्सनु ’ क्रियाचाहीं कर्मवाच्यमा कर्मवाच्यकै रहन्छ. जस्तै :–

गुरु देखिनुभयो, तपाञी देख्नुहुन्छ, हजुर देखिइबक्सिन्छ.

१७८. क्रिया क्रिया झैं कुनै नामहरू संग क्रिया जोडिएर पनी कुनै मिलित-क्रिया बन्दछन; त्यस्तामा अमिलितमा भ-

न्दा मिलितमा कारकहरूको रचना फरक पर्ने अर्थ फरक प-र्ने पनी हुन्छ.      जस्तै :-

अमिलित—देवताको पूजा गर. आमा बाबुको मान गर्दछ. इ०

मिलित—देवतालाई पूजा-गर. आमा बाबुलाई मान-गर्दछ. ”

प्रश्न :-

( १ ) मिलित क्रिया भनेको कस्तो हो ? मिलित कसरी बन्दछ ? मिलित क्रिया हुंदा के विशेष हुन्छ ? मिलित क्रिया कति किसिमका हुन्छन् ? मानबोधक आवश्यकताबोधकका रूपमा के के विशेष हुन्छन् ?

( २ ) तलका वाक्यमा परेका मिलित क्रियाको बयान गर :-
तिमी भन्दै जाऊ, म सुन्दै जान्छु. सरकारबाट हुकुम दिइबक्सियो. याहां कहां जानुहुन्छ ? बखतमा सबैले धैर्य गर्नुपर्दछ. मैले हेर्नुपरेन. बोलाउंदा बोल्दै बोलिदनथी. भांडामा हालिहालेछ. राम्ररी पढ्ने गर. अड्डामा हिजो जानुपरेनथ्यो. एउटा चूक माफ गर्दिइबक्सिओस्.



## २१—क्रियायोगी. ( Adverb )

१७९. प्रकार देश काल आदि बुझाई क्रियापदको वा कृदन्तको क्रिया संग सम्बन्ध हुने अव्ययलाई **क्रियायोगी** ( Adverb ) भन्दछन्. जस्तै :—

राम्ररी गर. माथि राखेर आऊ. तल जाऊ. हिजो आएकाले झट्ट डाक. त्यहां बस्ने को हो ? पढ्न थाल्दछु. बेसरी कुटे.

१८०. क्रियायोगी शब्द कोही गुण, संख्या, परिमाण, अनुकरण बुझाएर क्रियालाई विशेष गर्ने भई **क्रियाविशेषण;** कोही देश, काल आदि बुझाएर क्रिया संग सम्बन्ध मात्र हुने भई **क्रियान्वयी** यस्ता दुइ किसिमका हुन्छन्. जस्तै :-

क्रियायोगी—राम्ररी लेख. दशपल्ट दियो. सररर बह्यो.

क्रियान्वयी—आज जान्छु. कहां छ ? अवश्य आउनू.

टि. संस्कृतमा विशेषण जातका शब्द क्रियाको प्रकार बुझाई द्वितीयान्त भएकाचाहीं क्रियाविशेषण, अरू देश कालहरू बुझाई क्रियामा अन्वय मात्र हुनेचाहीं क्रियान्वयी भन्ने भेद छ; त्यस्तै हाम्रो भाषामा विशेषणले नामको यस्तो यति भन्ने किसिम झैं क्रियाविशेषणले यसरी भन्ने क्रियाको किसिम बुझाउंछ, क्रियान्वयीचाहीं देश काल आदि बुझाई क्रिया संग सम्बन्ध मात्र हु-

ने हुन्छ. अंग्रेजीमा भने यी दुइ थरीलाई नछुट्याई क्रियायोगी ( Adverb ) भन्ने एकै व्यवहार हुन्छ.

१८१. क्रियायोगी शब्द तीन किसिमका हुन्छन् :–

( १ ) साधारण (Simple) आफ्नो अर्थ मात्र बुझाउने.

( २ ) योजक ( Relative ) वाक्य समेत जोड्ने.

( ३ ) प्रश्नार्थक ( Interrogative ) प्रश्न बुझाउने.

१८२. सम्बन्धी-सर्वनामबाट बनेकाचाहीं ' योजक ', प्रश्नार्थक-सर्वनामबाट बनेकाचाहीं ' प्रश्नार्थक ', अरू प्रायः 'साधारण ' हुन्छन्. जस्तै :–

| क्रियाविशेषण. | | साधारण. | योजक. | प्रश्नार्थक. |
|---|---|---|---|---|
| | गुणबोधक– | राम्ररी, त्यसरी, चांडै, बिस्तारै | जसरी, जसो | कसरी, कसो |
| | संख्या ” – | एकबाजि-चोटि पटक, बारंबार | जतिबाजि चोटि-पल्ट | कतिबाजि-चोटि-पटक |
| | परिमाण ”- | धेरै, थोरै, उपध्द्र, विछट्ट, अलिकति | जति | कति |
| | अनुकरण”- | सरासर,दनदन,ढ्वाक्क, धमाधम, भुर्र | | |

क्रियान्वयी.

| | | | |
|---|---|---|---|
| स्थान ”— | यता, उता, त्यहां, माथि, तल, पर | जहां जता | कहां कता |
| काल ”— | आज, हिजो, पछि, यतिन्जेल. | जब जैले, जहिले | कहिले, कतिन्जेल |
| निषेधादि ”— | न, पक्का, सित्तै, व्यर्थै, | | किन |
| क्रियान्तर ”— | खाई-एर-न, गरी-रेर-र्न | | |

टि. १ प्रायः परिमाणबोधक ‘ धेरै थोरै ’ आदि क्रियाविशेषण शब्द ‘ धेरै दगुऱ्यो, थोरै हिंड्छ ’ इत्यादिमा क्रियामा झैं, ‘ धेरै राम्रो, थोरै रातो, खुप राम्ररी, विकट्ट मूर्ख, धेरै विस्तारै ’ इत्यादिमा विशेषण क्रियाविशेषणमा विशेष बुझाउने पनी हुन्छन्. यिनमा कुनै शब्द ‘ धेरै मानिस, थोरै पुस्तक ’ इत्यादिमा विशेषण भएर पनी प्रयुक्त हुन्छन्. विशेषण शब्दमा ‘ गरी ’ जोडेर पनी ‘ राम्रो गरी, एकेक गरी ’ इत्यादि क्रियाविशेषण बन्दछन्.

टि. २ विशेषणमा झैं क्रियाविशेषणमा ‘ चांडै, झन् चांडै, चौपट्ट चांडै; विस्तारै, त्यस भन्दा विस्तारै, सबै भन्दा विस्तारै ’ इत्यादि प्रयोग गरेमा तारतम्य बुझिने हुन्छ.

टि. ३ अनुकरणबोधक शब्द धेरै किसिमका भई चलन अनुसार कुनै शब्द कहीं प्रयुक्त हुन्छन्. यस्ता कुनै शब्द नाम विशेषण हुने, कहीं ‘ गरी, गरेर ’ जोड्दा क्रियाविशेषण हुने पनी हुन्छन्. जस्तै :-

फटाफट अवाज आयो. आगो दनदन भयो. सररर गरी बग्यो. इ०

टि. ४ अंग्रेजीमा पूर्वक्रियाबोधक ‘ having eaten ( खाई, खाएर )’ इत्यादि मुख्य क्रियाको कर्ताका विशेषण, फलक्रिया-

बोधक ' to go ( जान )' इत्यादि क्रियार्थक क्रियापद भनि मानिएका छन्; तर संस्कृतमा ई-एर–प्रत्ययको बराबर त्का-प्रत्यय, न प्रत्ययको बराबर तुमुन्–प्रत्यय भएका शब्द अर्को मुख्य क्रियामा अन्वय हुने अविकारी शब्द हुनाले सो बमोजिम हाम्रो भाषामा पनी क्रियान्वयी नै हुन्छन्; कहीं ' मुख बाएर सुत्तछ. हिंडी आएं ' इत्यादिमा एर–ई-प्रत्ययान्त शब्द क्रियाको प्रकार बुझाई क्रियाविशेषण पनी हुन्छन्.

टि. ५ ' माथि, भित्र, बाहिर, अघाडि, पछाडि ' आदि कुनै शब्द आफु संग सम्बन्ध हुने पछिल्तिरका नामहरूमा विभक्ति भएका भएमा र, कहीं सो नामहरू त्यसै बुझिने गरी एक्लै रहेमा क्रियायोगी हुन्छन्; विभक्ति नरहेका पछिल्तिरका नामहरू संग जोडिई रहेमा भने पछि लेखिने नामयोगी जातका हुन्छन्. यस्तै अरू किसिमका अव्यय पनी मौका अनुसार भिन्न भिन्न जातका हुने हुन्छन्. जस्तै :–

क्रियायोगी–किताप माथि छ. किताप मेचको माथि छ.

नामयोगी–किताप मेच माथि छ. सन्दूक भित्र रुपियां छ.

टि. ६ संख्या, स्थान, काल आदि बुझाउने कुनै अव्यय कहीं नाम जस्ता भई तिनमा विभक्ति-प्रत्यय जोडिने, षष्ठीका प्रत्यय जोडिएमा विशेषणको काम दिने भेदक पनी हुन्छन्. जस्तै :–
आजको पाठ, भोलिदेखि आउन, तीनपल्टको चोर, कताबाट आयौ ?, त्यहांदेखि पर, कहिलेलाई चाहिन्छ, त्यहांको माल. इ०

प्रश्न :–

( १ ) क्रियायोगी क्रियान्वयी क्रियाविशेषण भनेका के के हुन् ?

ती कति किसिमका हुन्छन् ? तिनबाट के के अर्थ बुझिन्छन् ? ( कस्ता शब्द कुन कुन जातका हुन शक्छन् ? नामयोगी क्रियायोगी दोहरै हुने शब्द कसरी छुट्टिन्छ ? )

( २ ) तलका वाक्यमा परेका क्रियायोगीको बयान गर :–

छीटो गरी चिठ्ठी लेखेर बाकसमा चांडै ह्याल्न जाऊ. यसरी धेरै आलस्य गरे कसरी काम होला ? फटाफट आएर थबक्क वस्यो. तिमी नआउन्जेल वसीरहन्छु. घरको अघाडि पछाडि फोहोर नराख. वर पर हेरी कुरा गर. पछाडिको बाटो हेर्नुपर्दछ. ध्वास्स परेर नवस.

---

## २२–नामयोगी. ( Preposition )

१८३. कुनै नाम वा नामस्थानिक सर्वनाम विशेषण आदि संग विभक्ति जोडिए झैं मिल्ने आफ्नो केही स्वतन्त्र अर्थ पनी हुने अव्ययलाई ( **नामयोगी** ) ( Preposition) भन्दछन्. जस्तै :–

घर तिर, वन संग, मेच माथि, त्यस तर्फ, म सित, रातो पट्टि, बुढो सित, घर भित्र, यो सँग. इ०

टि. १ अंग्रेजीमा विभक्तिको काम दिने of in आदि नामयोगी ( Preposition ) मिलेको नामलाई त्यसको कर्म ( Object )

भन्ने व्यवहार छ ता पनी ह्राम्रो भाषामा संस्कृतमा झैं क्रियाको मात्र कर्म हुने हुनाले सो नामयोगी मिलेको नामलाई त्यसको सम्बन्धी भन्दछन्, सो सम्बन्धीको सामान्यरूप मात्र प्रयुक्त भई त्यसमा विभक्तिको प्रत्यय रहंदैन, संस्कृतमा भने ' प्रति ' आदि नामयोगी मिलेको नाममा प्रायः द्वितीया भई ' गृहं प्रति ' इत्यादि प्रयोग हुन्छ.

टि. २ प्रायः देश काल बुझाउने कुनै अव्यय शब्द पनी नाम जस्ता भई तिनमा व्यवहार अनुसार ' नेर, तिर, संम, मनि ' आदि कुनै नामयोगी मिल्दछन्. जस्तै :–

त्यता तिर, त्यहां संम, कहां नेर, पोहोर तिर, आज संम.

१८४. नामयोगी शब्द यस्ता विभक्तिको अर्थ बुझाउने हुन्छन् :–

द्वितीयार्थ–' सित, संग ' :– गुरु सित वा संग ( गुरुलाई ) सोध.

तृतीयार्थ–करण--'द्वारा ' :– चिठी द्वारा (चिठीले) कुरा भयो. साहित्य– ' सित, संग ' :– म सित वा संग हिंड. राहित्य–' विना, बाहेक ' :– त्यो विना वा बाहेक कसले शक्छ ? तुल्यता–' माफिक, बमोजिम ' :-- त्यस माफिक वा बमोजिम गर.

चतुर्थ्यर्थ–' निंति, निमित्त' :- यस निंति वा निमित्त म आएं.

पञ्चम्यर्थ–' सित, संग, भन्दा ' :– यिन सित वा संग ( यि-

नबाट ) पाएं. म भन्दा राम्रो छैन.

सप्तम्यर्थ– प्रान्त-' तिर, तर्फ, पट्टि ' :– घर तिर वा तर्फ वा पट्टि गयो. समीप--' नेर ' :– घर नेर छ. अवधि– ' संम ' :– सहर संम जान्छु. निवास-' कहां ' :– भाइ कहां जान्छ. निर्द्धारण–' मध्ये ' :– यिन मध्ये एउटा छान. प्रदेश–' माथि, मनि, भित्र, बाहिर, वारि, पारि ' :– घर माथि, खाट मनि, सन्दूक भित्र, सहर बाहिर, खोला वारि, डांडा पारि छ. काल–' पछि ' :– त्यस पछि को जान्छ ?

यस्तै :– विभक्ति नभएका नाम संग मिलेर रहने अरू अव्यय पनी नामयोगी हुन्.

टि. १ कुनै शब्द व्यवहार अनुसार नाम, नामयोगी, क्रियायोगी आदि अनेक किसिमका पनी हुन शक्छन्. जस्तै :–

नाम——— मेरो नजीकमा वस. माथिको किताप ल्याऊ.

ना. योगी– घर नजीकै रुख छ. मेच माथि किताप छ.

क्रि. योगी– नजीक आऊ. मेरो नजीक आऊ. माथि छ.

टि. २ नामयोगी कोही एकहरा ( Simple ) :– घर नेर बगैंचा छ. सन्दूक भित्र छ. इ०; कोही दोहरा ( Double ) म पछि पछि आउन. खोला वारि पारि रुख छन्. इ०; कोही

अनेक शब्द जोडिएर कहीं विकार समेत भएका समस्त ( Compound ) :– घर माथि तिर, मास्तिर, माथिल्तिर, मनितिर, मन्तिर, अघिल्तिर, पछिल्तिर छ. १०

प्रश्न :–

( १ ) नामयोगी भनेको के हो ? नामयोगीबाट के के अर्थ बुझिन्छन् ? ( नामयोगीको सम्बन्धी कस्तो हुन्छ ? नामयोगी कसरी छुट्टिन्छ ? )

( २ ) तलका वाक्यमा परेका नामयोगीको बयान गर :–

त्यो म कहां आउंदैन. आफू माथि प्रेम नगर्ने तिर ईश्वरको सुदृष्टि पर्दैन. अहिले संम कता तिर गएका थियौ ? विद्या निमित्त परिश्रम साथ उद्योग गर्नुपर्दछ. को सित गयो ?



## २३–संयोजक. ( Conjunction )

१८५. समुच्चय, विकल्प, क्रम, कारण, सङ्केत आदि अर्थ बुझाई अनेक पद वा वाक्यलाई जोड्ने अव्ययलाई **संयोजक** ( Conjunction ) भन्दछन्. जस्तै :–

गोपाल र गोविन्द गए. त्यो गयो अनी म आएं. त्यो कि यो लिन्छौ. हुनत म जानेछु, तर काम हुनेछैन.

टि. १ सम्बन्धी–सर्वनाम वा त्यसबाट बनेका क्रियाप्रयोगीहरु पनी वाक्य जोड्ने हुन्छन्. जस्तै :–

मैले जुन काम अह्राएथें, त्यो त्यसले पूरा गऱ्यो. जसलाई दिन्छौ, उसलाई देऊ. जसरी गर्छौ, उसरी गर. जस्तो मनपर्छ, उस्तो किन.

टि. २ संयोजकले पदहरु जोडेमा कहीं, वाक्य छोटकरी हुन्छ. जस्तै :– रामु पनी कालु पनी गए. ( रामु पनी गए, कालु पनी गए ). यो कोट बलियो र बाक्लो छ ( यो कोट बलियो छ, यो कोट बाक्लो पनी छ ).

१८६. वाक्यमा प्रयोग हुने संयोजक दुइ थरी हुन्छन् :–

( १ ) सापेक्षयोजक ( Subordinative ) अर्थात् मुख्यवाक्य ( अर्को वाक्य जसमा जोडिन आउंछ ) संग अधीनवाक्य ( जो अर्को वाक्यमा जोडिन जान्छ ) लाई जोड्ने शब्द. जस्तै :–

सामानाधिकरण्यबोधक–' जो, भनि, भन्ने, कि ' इ० :–
' भोलि छुट्टी छैन ' भन्ने कुरा भयो. ' म आउंदिनं ' भनि त्यो भन्दछ. मैले सुनें कि ' त्यो पढ्दैन '.

कारणबोधक–' किनकि, किनभने, जेले, र ' इ० :–
गुरुले कुट्नुभयो, किनकि पाठ सुनाउन शकिनं. तिमीले बोलायौ, र म आएं.

सङ्केतबोधक–' यदि, भने, भनेदेखि, पो, त '. इ० :–
जान्छौ भने जाऊ. चिठी आए त म हिंड्नेछु. कुरा गरे पो मन बुझ्दथ्यो.

( २ ) **निरपेक्षयोजक** ( Co-ordinative ) अर्थात् परस्पर समान स्वतन्त्र ( छुट्टा छुट्टा ) अनेक वाक्यलाई जोड्ने शब्द. जस्तै :–

समुच्चयबोधक–' पनी, समेत, र' इ० :– गोपाल पनी गोविन्द पनी गए. मैले पाठ सुनाएं, इनाम समेत पाएं.

विकल्पबोधक–' वा, किंवा, अथवा, कि ' इ० :– तिमी जान्छौ कि त्यो जान्छ. भाइले पुस्तक दिनेछन् वा कलम दिनेछन्.

विशेषबोधक–' हुनत, तर, यद्यपि, तथापि, तैपनी, परन्तु' :- हुनत जान आटेको हुं, तर फुर्सत पाइनं. यो कुरा भन्नुपर्ने हो ता पनी भनेन.

उपपत्तिबोधक–' तसर्थ, किनकि, किनभने, अतएव, र' इ० :- त्यो पनी भाग्ने छ, किनकि त्यसका साथी भागे. पानी पर्‍यो र ठण्डा भयो. मैले रास्त्ररी संझाएको छु, तसर्थ अब बदमासी गरोइन.

टि. १ वाक्य तीन किसिमका हुन्छन्:–(१)'घोडा दौड्यो. हामी नाटक हेर्न जान्छौं' इत्यादि सरल ( Simple) अर्थात् एकेक उद्देश्य विधेय भएका एकला वाक्य हुन् ; यस्तामा वाक्य जोड्ने संयोजक हुंदैन. (२) 'जहाँ म जान्छु, उहां तिमी पनी आए. रामे आयो, भने म जाउंला' इत्यादि मिश्र ( Complex ) अर्थात् अघिल्ला सापेक्ष ( नाम विशेषण क्रियायोगीको सामर्थ्य लिएर अर्कामा जोडिन जाने ) अधीन वाक्य ( Dependent ), अर्को मुख्य वाक्य ( Principal ) मा जोडिई एक भएका वाक्य हुन्; यस्तामा वाक्य जोड्ने 'जहां, भने' यी सापेक्षयोजक हुन्.(३)' घोडा भाग्यो, अनी सयस पछि पछि दौड्यो. चिठी आयो, कि त्यसले भन्यो ?' इत्यादि संयुक्त ( Compound ) अर्थात् समान स्वतन्त्र अनेक वाक्य जोडिएर एक भएका वाक्य हुन्; यस्तामा वाक्य जोड्ने ' अनी, कि' यी निरपेक्षयोजक हुन्.

टि. २ एक वाक्यार्थमा अर्को वाक्यार्थ खूद कारणै हुने भएमा सापेक्ष वाक्य जोड्ने कारणबोधक, कारण भने नहुने साधक ( निमित्त ) संम मात्र हुने भएमा निरपेक्ष वाक्य जोड्ने उपपत्तिबोधक हुन्छ. 'तसर्थ, यसर्थ ' आदि प्राय: उपपत्तिबोधकै, 'किनकि, र' आदि ता मौका अनुसार दुवै किसिमका हुन शक्छन्. 'किनकि' आदि शब्द भएमा दोस्रो वाक्यार्थ, 'र तसर्थ' आदि शब्द भएमा अघिल्लो वाक्यार्थ अर्को वाक्यार्थको कारण वा उपपत्ति भएर बुझिने हुन्छ.

टि. ३ संयोजक शब्द अरू किसिमका अर्थ बुझाउने पनी हुन्छन्. जस्तै :–

तारतम्य–त्यो जत्तिको राम्रो छ, त्यत्तिको यो पनी छ. देश–जहां भन्छौ, उहां जान्छु. काल-जहिले डाकौंला, उहिले आउन. प्रका-

र—जसरी भन्नुहुन्छ, उसै गरी लेख्छु. गुण—त्यो जस्तो उल्टा छ, यो पनी उस्तै छ. परिमाण—जति पाइन्छ, त्यति ल्याऊ. संख्या—जतिपल्ट आउंछ, उतिपल्ट पैसा माग्छ. क्रम—रात्रु गए, अनी काल्हु आए. सादृश्य—त्यसले झैं यसले यतिको खान शक्तैन. राहित्य—त्यसको बाहेक यसको बुद्धि पुग्दैन. अपेक्षा—बाबुलाई भन्दा छोरालाई धेरै चाहिन्छ. शीघ्रता—चिठी आयो कि म हिंडें. घाम पनी झुल्क्यो म पनी हिंडें. इत्यादि.

१८७. सापेक्षयोजक वाक्य मात्र जोड्दछन्, निरपेक्षयोजक भने यस्ता यस्तालाई जोड्छन् :—

वाक्य—— गोपाल पढ्न लागे कि अझ खेल्दै छन्.

नाम, सर्वनाम— त्यो र म गयौं. काले र रामे गए.

विशेषण —— गोपाल चलाक पनी सोंवती पनी छ.

क्रियायोगी— रात्ररी पनी चांडै पनी लेख्न शक्तछु.

वाक्यांश—— भनेको नमान्नाले र बुद्धि नहुनाले दुःख भयो.

टि. १ निरपेक्षयोजकले जोडिने पद वा वाक्यांश एकै किसिमका हुनुपर्दछ. जस्तैः—

त्यसको भन्दा यसको ठूलो छ. मैले पनी त्यसले पनी देख्यौं. चांडो कि ढीलो लेख्छ.

टि. २ क्रियापद पिछे एकेक वाक्य हुने हुनाले क्रियापद मात्र जोडिए जस्तो भएमा अरू पद अध्याहार हुने भई वाक्यै जोडिएको संझनुपर्दछ. जस्तैः—

त्यो जाओस् कि (त्यो) नजा वस्. म पाठ घोक्छु. अनी (म) लेख्छु.

टि. ३ निरपेक्षयोजकमा समुच्चयबोधक 'र पनी' शब्द र, सादृश्य-तारतम्य-साहित्य-बोधक यी प्रायः पद वा तत्स्थानिक वाक्यांशलाई, विशेष-उपपत्ति-शीघ्रता बोधक यी प्रायः वाक्यलाई, समुच्चयबोधक 'पनी' शब्द र विकल्प–क्रमबोधक यी प्रायः पद वाक्यांश वाक्य सबैलाई जोड्दछन्.

टि. ४ क्रियायोगीहरू झैं संयोजक पनी कोही सरल ( Simple ), कोही संयुक्त ( Compound ) हुन्छन्. जस्तैः–

सरल– र, पनी, झैं, त, तर, भने, अनी, कि. इ०

संयुक्त– तैपनी, अनिखेरि, किनभने, यद्यपि, किनकि. "

टि. ५ संयोजक शब्द कुनै जोडा भएर प्रयोग हुने हुन्छन्.

कि——कि कि त्यो ल्याऊ, कि यो ल्याऊ.

न——न न कालो छ, न रातो छ.

तथापि–यद्यपि यद्यपि त्यो बेस हो, तथापि विचार गर.

हुनत—तर , हुन त असल हो, तर महंगो छ.

यदि—भने यदि जान मन छ भने जाऊ.

पनी—पनी यता पनी उता पनी बिग्र्यो.

यस्तै :– अरू विकल्पबोधक आदि पनी व्यवहार अनुसार कहीं जोडा भएर प्रयुक्त हुन्छन्.

प्रश्न :–

( १ ) संयोजक भनेको के हो ? संयोजक कति किसिमका हुन्छन् ? सापेक्षयोजक निरपेक्षयोजक भनेका कस्ता कस्ता हुन् ?

सापेक्षयोजकले के केलाई जोड्दछन् ? (जोडा भएर प्रयोग हुने शब्द कस्ता हुन् ? संयोजक कति किसिमका छन् ? )

( २ ) तलका वाक्यमा परेका संयोजकको बयान गर :–

त्यसको बदमासी थाहा भयो, यसैले सजाय पायो. हुनत आंप मीठो लाग्दछ, तर फायदा गर्दैन. दाउ लाग्नु बिना बिग्रनु कहिल्यै छैन. यिनी चांडो पनी राम्रो पनी लेख्तछन्. अहिले भन्दा उहिले बेस थियो. सहरमा र गाउंमा समेत खोजें. तिनी काली कि गोरी छन् ? पाठशाला चांडै जाऊ, किन भने दश बज्न लाग्यो. रुपियां पाइयो भने घर खेत जीरिएला.



## २४–विस्मयादिबोधक. ( Interjection )

१८८. आश्चर्य, हर्ष, शोक आदि मनको भावलाई अकस्मात बुझाउने अव्ययलाई **विस्मयादिबोधक** ( Interjection ) भन्दछन्. जस्तै :–

ओहो ! कस्तो राम्रो रहेछ. अहा ! क्या ! मज्जा भयो.

१८९. अर्थको हिसावले विस्मयादिबोधक धेरै थरी छन् :–

विस्म. बोधक–ओहो, क्या. प्रशं.बोधक स्यावास्, क्यावात्.
हर्ष ,,—आहा निन्दा ,,–छिः, धत्, धिक्कार.

शोक ”—हा, हाइ सम्बोधन”—ए, हे, ओ, रे, अरे.
पीडा ”—ऊ, ऐया, उहू च्युति ”—आच्चे, ज्या३, थक्क.

यस्तै :—‘अ३, अँ३, आ३, ई३, ए३, आथू, जा३, हत्तेरि, उः बाःवा, वावा इत्यादि विशेष विशेष अर्थ बुझाउने हुन्छन.

टि. १ देवतालाई कहने कुनै शब्द पनी शोक बुझ्फाउने गरी प्रयुक्त हुन्छन्. जस्तै :—

राम ! राम ! विगार भयो. हरे शिव ! यस्तो के भयो? शिव ! शिव !

टि. २ कहीं अरू किसिमका शब्द, वाक्यांश, वाक्यहरू पनी विस्मयादिबोधक भएर कहीं दोहरा तेहरा परेर पनी प्रयुक्त हुन्छन्. जस्तै :—

लूट ! लूट !! महालूट !!!, बहुतै खवर्दार !, हा हा महा अनर्थ भयो!

टि. ३ विस्मयादिबोधकको वाक्यका अरू पद संग सम्बन्ध नभई मौका अनुसार जहां नेर जुन भावलाई अकस्मात् बुझ्फाउनु छ उहीं नेर प्रयोग हुन्छ. यसले यिनलाई वाक्यखण्ड ( Parts of speech ) मा गणना नगरी स्वतन्त्र वाक्य जस्तै माने पनी हुन्छ.

प्रश्न :—

( १ ) विस्मयादिबोधक भनेको के हो ? तिनबाट के के अर्थ बुझ्फिन्छन् ?

( २ ) तलका वाक्यमा परेका विस्मयादिबोधक कस्ता हुन् :—
बाःवा पण्डितजी ! यस्तो के काम गर्नुभयो ? ओ ! नानीहो यता आओ. अँ मैले जानें. नारायण ! नारायण ! बडो विगार भएछ.

## २५–शब्दरचना. ( Word building )

१९०. शब्द दुइ किसिमका हुन्छन् :–

( १ ) **मूल** शब्द (Primitive-word ) अर्थात् अ-र्को शब्दबाट नबनेका आदि–शब्द. जस्तै :– हु गर् खा आदि धातु, त्यो, यो, र, पत्नी इत्यादि.

( २ ) **व्युत्पन्न** शब्द ( Derivative-word ) अ-र्थात् अर्को शब्दबाट बनेका दोस्रा शब्द. जस्तै :– हु–हुने भएको, रस–रसिलो, राज-काज इत्यादि.

१९१. व्युत्पन्नशब्द तीन किसिमका हुन्छन् :–

( १ ) **कृदन्त** ( Primary-derivative ) अर्था-त् धातुबाट ' नु, ने ' आदि कृत्प्रत्यय भई बनेका नाम, विशे-षण, अव्यय. जस्तै :–

गर्–गर्नु गर्ने गरेको गरी गरेर गर्न. हु–हुनु भएको भई. इ०

( २ ) **ताद्धितान्त** ( Secondary-derivative) अर्थात् अर्का नामहरूबाट ' आई, ई ' आदि तद्धित–प्रत्यय भई बनेका नाम, विशेषण, अव्यय. जस्तै :–

दुष्ट-दुष्ट्यांइ, इलम-इलमी, त्यो-त्यति, त्यस्तो, त्यहां, त्यति इ०

( ३ ) **समस्त** ( Compound-word ) अर्थात् अनेक शब्दको समास भई ( जोडिई) बनेका एक शब्द. जस्तै :-

राज–काज, काली–माटी, लिन–दिन, दाज्यु-भाइ. इ०

टि. वास्तवमा सवै व्युत्पन्न शब्दको मूल धातु नै हुनुपर्दछ. त्यसबाट कृत्प्रत्यय भई बनेका कृदन्तचाहीं प्राथमिक–व्युत्पन्न, सो कृदन्तबाट पनी तद्धितप्रत्यय भई बनेका तद्धितान्तचाहीं द्वितीय-व्युत्पन्न शब्द, त्यस्ता व्युत्पन्न शब्द जोडिई बनेका एक शब्द समस्त-शब्द हुन्; तर धातुलाई भैं यस धातुबाट बनेका भनि पत्ता नलागेका नाम सर्वनाम आदि शब्दलाइ पनी मूल-शब्द भन्ने, यस धातुबाट कृत्प्रत्यय भई बनेका भनि पत्ता लागेका नाम विशेषण आदि शब्दलाई कृदन्त-शब्द भन्ने, कृदन्तबाट भैं अरू किसिमका नाम आदिबाट तद्धितप्रत्यय भई बनेका देखिने नाम विशेषण आदिलाइ तद्धितान्त-शब्द भन्ने, मूल वा व्युत्पन्न शब्द जोडिएर बनेका देखिने एक शब्दलाई समस्त-शब्द भन्ने व्यवहार हुन्छ. मूल-शब्द भनि मानेका शब्दको पनी अर्को मूल पत्ता लागेमा सोही अर्को शब्द मूल मानी त्यसलाई व्युत्पन्न भन्नुपर्दछ; यसैले संस्कृतहरूबाट आएका ‘ राम, दाता, कार्य ’ आदि शब्द भाषाको दृष्टिले मूल-शब्द हुन् तापनी संस्कृतको दृष्टिले तिनका पनी ‘ रम्, दा, कृ ’ यस्ता मूल शब्द हुनाले ती व्युत्पन्न भनि कहन शकिने हुन्छन्.

## ( १ ) कृदन्त. ( Primary derivative )

१९२. प्रायः सबै किसिमका धातुबाट धातुको जति अर्थ बुझाउंदा नु, कर्तृवाच्यमा कर्ता, कर्मवाच्यमा कर्म बुझाउंदा ने, सकर्मकबाट भूत-कर्म, अकर्मकबाट भूत-कर्ता बुझाउंदा एको, कर्तृवाच्यमा वर्तमान-कर्ता, कर्मवाच्यमा वर्तमान-कर्म बुझाउंदा तो दो, पूर्व-क्रिया बुझाउंदा ई एर, उत्तर-क्रिया बुझाउंदा न प्रत्यय भई कृदन्त नाम विशेषण अव्यय बन्दछन. यी मुख्य कृदन्तमा हुने विशेष अघि ( नि. १२८ ) लेखेको छ.

जस्तै :– पढ्नु बेस हो. दिउसो सुत्नु बेस छैन. पढ्ने मानिसलाई सबै चाहा गर्दछन्. सुनाइने कुरा राम्रो छ. बल्दो आगो नकुल्च. भात पाक्तो छ. गएको मानिस आएन. पढेको पाठ घोक. भात खाई वा खाएर आउंछु. बेकाममा बसी वा बसेर के गर्नू? पढ्न जान्छु. सुत्न आऊ.

( क ) यस्तै विशेष अर्थमा कुनै धातुबाट ' आइ ' आदि अरू प्रत्यय र कहीं दुइ स्वर हुनेको आदि स्वर आ भए त्यसको बदला अ इत्यादि विशेष भएर पनी कृदन्त बन्दछन.

नाम. { आइ-भनाइ, गराइ, पढाइ, नचाइ, बचाइ, नपाइ; आवट–लेखावट, बनावट, दबावट; ओट–लेखोट, भनोट, भरोट,; आउ–दबाउ, पक्डाउ, भनाउ; अ- चाल, बोल, तौल. इ०

विशेषण. { आहा–पोलाहा, दवाहा, मिचाहा, सुताहा; ऐया–गरैया, खवैया, गवैया, देवैया, पढैया; उवा–चलुवा, सरुवा, भणुवा; अन्त–घुमन्त, फिरन्त, मगन्त, उडन्त; अक्कड–बोलक्कड, घुमक्कड, बुझक्कड. इ०

टि. १ नु आदि प्रत्यय हुंदा कहीं केही विशेष अर्थ, ने एको आदि प्रत्यय हुंदा अरू किसिमका कारक विशेष्य राखेमा अरू कारक रूप विशेष अर्थ बुझिने पनी हुन्छ. जस्तै :–

यसले गर्नु ( गर्नें संम ) गऱ्यो. भन्नु नभन्नु ( भन्न नहुने ) भन्यो. किताप छपाइ ( छाप्ने खर्च ) कति लाग्यो ? खाने ( अधि.) भांडा, काट्ने ( कर.) चक्कू, दिने ( संप्र.) बाहुन, गर्ने (कर्म) काम; पढेको ( कर्ता ) मानिस, खाएको ( अधि.) ठाँउ.

टि. २ कहीं अर्को शब्द संग मिलेमा नु-प्रत्ययको न ना, एको–प्रत्ययको ए, काल बुझाउंदा तो दो–प्रत्ययको ता दा, एको–प्रत्ययको ए यस्ता विकार पनी हुन्छन्. काल बुझाउने ' ता, दा, ए ' भएमा नाम बनी सप्तमीको ' मा ' प्रत्यय पनी कहीं हुन्छ. जस्तै :– खानु संम, खान संम, खाना संम खायो. भनेको झैं भने झैं, भने जति, देखे संम, गए नेर, घाम झुल्कंदा (मा) नि-

स्यो. चार दर्जे ( मा ) आउन्. मवस्ता ( मा ) त्यो आएन.

टि. ३ ई, एर, न प्रत्यय भएमा जुन क्रियाको अनुसारले त्यो क्रिया पूर्व उत्तर हो, सो अर्को मुख्य क्रिया बुझाउने क्रियापद वा कृदन्त रहन्छ. कहीं समान-क्रिया हेतु-क्रियामा पनी ई एर, विषय-क्रियामा पनी न प्रत्यय हुन्छन्. जस्तैः :—

यो लिएर जाऊ. खान जान्छ. हल्लेर पढ्छ. सुख पाएर सुत्ने, खान खोज्छ. जान चाहने, कालु रिसाएर गएन. ढल्की ढल्की हिंड्छ.

## (२) तद्धितान्त. (Secondary derivative)

१९३. कुनै शब्दबाट भाव ( धर्म ) बुझाउंदा ई, आइ, याइ, पना, पाना आदि प्रत्यय, सम्बन्धी ( धर्मी ) बुझाउंदा ई, मन्त, वन्त, इलो, इयार, आलु, ए आदि प्रत्यय, तद्भव ( त्यहां हुने वा रहने ) बुझाउंदा ई, ली, ले, ए, इया आदि प्रत्यय, क्षुद्रता ( सानो ) बुझाउंदा ई प्रत्यय भएर नाम विशेषण तद्धितान्त बन्दछन. यी प्रत्यय हुंदा कहीं विशेष विकार पनी हुन्छन. जस्तै :—

भाव { ई—अमीरी, गरीबी, नोकरी, चाकरी; आइ—लमाइ, उचाइ, गोलाइ, मोटाइ; यांइ—दुष्ट्यांइ, पण्डित्यांइ, मूर्ख्यांइ; पना-पाना—मूर्खप(पा)ना, धूष्टप(पा)ना, सानोपना. इ०

सम्बन्धी. — ई–खुनी, बैगुनी, इल्मी, गुनी; मन्त–श्रीमन्त, बुद्धिमन्त; वन्त–धनवन्त, भाग्यवन्त; इलो–रसिलो, जांगरिलो, मलिलो, नूनिलो; इयार–होसियार, मतियार; आलु–खर्चालु, दूधालु, विषालु; ए-डोके, दाउरे, गडवडे, द्वारे. इ०

तद्देशीय. — ई–नेपाली, अछामी, जङ्गली; ली–गोरखाली, पाल्पाली, पोखराली, टोखाली; ले–ठिमिले, गाउंले, सांखुले; ए–पर्वते, भोटे, पाटने, दैलखे, कांठे; इया-सहरिया, बजारिया, चीनिया, पूर्विया. इ०

क्षुद्रता–ई-गाग्रो–गाग्री, कोदालो–कोदाली, थाल–थाली. इ०

( क ) यस्तै अरू विशेष प्रत्यय भएर पनी विशेष तद्धितान्त बन्दछन्. जस्तै :–

उ-ए–रातु राते, कैलु कैले; ए–बेसारे, बतासे, अकासे; याल-सिग्याल, अज्र्याल; ऐया–घरैया, बनैया, गंवैया; इया–जांगरिया, करिया, भरिया. इ०

टि. १ यी सबै प्रत्यय सबै थरी शब्दबाट हुने नियम छैन, व्यवहार अनुसार विशेष अर्थमा विशेष शब्दबाट हुन्छन्.

टि. २ मान्यलाई कहंदा ज्यू जी जोडिने पनी हुन्छ. जस्तै :–
रामजी शिवजी, पण्डितजी, बुवाज्यू, मुमाज्यू, गुरुज्यू. इ०

१९४. संख्यावाचक शब्दबाट विशेष अर्थमा विशेष प्रत्यय भई विशेष किसिमका यस्ता तद्धितान्त शब्द बन्दछन् :–

एक—एक्का, एकान्, पहिलो, एउटा, एकवटा, एकहरो.

दुइ—दुवा, दुनि-ना, दोस्रो, दोटा, दुइटा, दोहरो-वर.

तीन—तिया, तिर्कि, तियाँ, तेस्रो, तीनवटा, तेहरो, तेवर.

चार—चौका, चौको, चौथो, चारवटा, चौहरो, चौवर.

दश—दहर, दशान्, दशौं, दशवटा, दशौंद.

शय—शयौं, शयन्, शयकडौं, शयकडा, शयवटा.

लाख-लाखौं, लाखां, लाखन्, लक्खौं, लक्खां, लक्खन्.

यस्तै व्यवहार अनुसार सबै संख्यावाचकबाट धेरै थरी शब्द बन्दछन्.

टि. संख्याबोधक र यति उति कति जति त्यति शब्दबाट 'बाजि, चोटि, पल्ट, पटक, वार, वटा' आदि जोडिएर पनी शब्द बन्दछन्.

१९५. कुनै सर्वनाम शब्दबाट पनी विशेष अर्थमा विशेष प्रत्यय भई यस्ता विशेष तद्धितान्त बन्दछन् :–

| | विशेषण. | अव्यय. |
|---|---|---|
| त्यो | त्यस्तो, त्यत्रो, त्यति, त्यतिको, त्यतिउं | त्यहां, त्यता, त्यसरी, त्यहिले, त्यसो, त्यतिन्जेल, त्यतिखेर, त्यसै इ० |
| यो | यस्तो, यत्रो, यति यतिको, यतिउं | यहां, यता, यसरी, यस्तरी, अहिले यसो, यतिन्जेल, यतिखेर, यसै इ० |

उ– { उस्तो, उत्रो, उति, उतिको, उतिउं — उहां, उता, उसरी, उहिले, उसो, उतिन्जेल, उतिखेर, उसै इ०

जो { जस्तो, जत्रो, जति, जतिको, जतिउं — जहां, जता, जसरी, जहिले, जैले, जसो, जतिन्जेल, जतिखेर, जसै इ०

को { कस्तो, कत्रो, कति, कतिको, कतिउं — कहां, कता, कसरी, कहिले, कैले कसो, कतिन्जेल, कतिखेर, कसै इ०

१९६. अवधारण ( निश्चय ) बुझाउंदा प्रायः क्रियापद बाहेक सबै थरी शब्दमा व्यवहार अनुसार ऐ यै ही ई प्रत्यय, कहीं केही विकार समेत हुन्छ. कहीं निश्चय आधिक्यहरू बुझाउंदा शब्द भित्रको व्यञ्जन डबलिने, कहीं स्वर दीर्घ प्लुत गरेर व्यवहार हुने पनी हुन्छ. जस्तैः–

मेरै, तिम्रै, मुल्यै, रामुल्यै, रामैले, यही, उही, त्यही, सोही, रातै, कालै, उस्तै, यतै, उहीं, त्यहीं; सफा–सफ्फा, असल–अस्सल, रातो–रा३तो, हरियो–हरीयो इ०

१९७. क्रिया बुझाउने कुनै शब्दमा र अनुकरण बुझाउने कुनै शब्दमा पनी व्यवहार अनुसार विशेष विशेष अर्थमा शब्दहरू दोहरिएर विशेष शब्द बन्दछन्. जस्तैः–

घटिघटाउ, बढिबढाउ, घटाघटि, बढाबढ, हानाहान, कुटाकुट,

चोरचार, टापटिप, पाटपिट, फटाफट, सरासर, लहलह, रमरमि.

टि. वाक्यमा वीप्सा ( प्रत्येकमा हुनु ), साकल्य ( जंमै ), संभ्रम ( हडवडि ), आनन्द, शोक आदि विशेष बुझाउने गरी शब्द दोहरिने कहीं वाक्यै समेत दोहरिने पनी हुन्छ. इ०

घर घर डुल्छ. घरका घर भत्के. चोरं आयो चोर आयो. हरेशिव ! हरेशिव ! श्यावास ! श्यावास ! बेस भयो. इ०

## ( ३ ) समस्त ( Compound )

१९८. समास हुंदा परस्पर मेल भएका अनेक पद मिली भित्र पर्ने विभक्ति–वचन–प्रत्यय लुप्त भई कहीं केही विकार समेत भई एक पद बन्दछन. जस्तैः–

राजाको+काज=राजकाज, राम र लक्ष्मण=रामलक्ष्मण,
कालो+माटो=कालीमाटी, रातमा+अन्धो=रतन्धो,
लिनु र दिनु=लिनदिन, दिन भए संम=भरदिन. इ०

टि. समास भएमा कहीं पूर्व ( अघिल्लो ) पदार्थ, कहीं उत्तर ( पछिल्लो ) पदार्थ, कहीं उभय ( दुवै ) पदार्थ, कहीं अन्य ( बाहिरिया) पदार्थ प्रधान भएर बुझिन्छ. सो अर्थ विग्रह ( Resolution) अर्थात् समासको अर्थ देखाउने अनेक पदको रचनाबाट बुझिने जति मात्र, कहीं विशेष समेत बुझिने हुन्छ. जस्तैः–

सामान्य अर्थ. विशेष अर्थ.

पूर्व. प्र– दिन भए संम=दिनभर अस्ति भन्दा पहिले=अनअस्ति,

उत्तर.प्र { राजाको काज=राजकाज बाघकोचाल=बाघचाल ( खेल )
दुइ बाटाको समूह=दोबाटो दुइ मनको समूह=दोमन(सन्देह)
भलो आदमी=भलादमी कालोमाटो=कालीमाटी

उभय.प्र– लिनु र दिनु=लिनदिन दाज्यू र भाइ=दाज्यूभाइ(सगोत्री)
अन्य.प्र–कालोमुख भएको=कल्मुखा दुइ जिउ भएकी=दोजिया गर्भिणी

१९९. समास छ किसिमका हुन्छन् :–

( १ ) **तत्पुरुष** ( Determinative ) भिन्न भिन्नलाई कहने भिन्न विभक्ति भएका पदको प्रायः उत्तर पदार्थ प्रधान हुने समास :– राजाको काज=राजकाज, घर देखि फुट्टा=घरफुट्टा, रातमा अन्धो=रतन्धो, नपद्ने=अपद्, गोडा धुने=गोडधुवा, लाखको पति=लखपति, खराप काम=नकाम

( २ ) **कर्मधारय** ( Appositional ) समानाधिकरण नाम, विशेषण विशेष्यको प्रायः उत्तर पदार्थ प्रधान हुने समास :– कालो माटो=कालीमाटी, ठुली नानी=ठुलीनानी ठुल्नानी, भानिज दाइ=भानिजदाइ, गहु झैं गोरो=गहुंगोरो, मुखरूपी चन्द्र=मुखचन्द्र, देखेको सुनेको=देखेसुनेको. इ०

( ३ ) **द्विगु** ( Numeral ) अनेक-संख्यावाचक विशेषण र विशेष्यको प्रायः समूह अर्थ प्रधान हुने समास :– दु-

इ बाटाको समुदाय=दोबाटो, चार मासको समुदाय=चौमाससा, दुइ मनको समुदाय=दोमन, तीन मुहानको समुदाय=तीनमुहानी. इ०

( ४ ) द्वन्द्व ( Copulative ) भिन्न भिन्नलाई कहने अनेक पदको प्रायः उभय पदार्थ प्रधान हुने समास :— राम र लक्ष्मण=राम लक्ष्मण, दाज्यू र भाइ=दाज्यूभाइ, लिनु र दिनु=लिनदिन, नाती र नातिनी=नातिनातिना, दश वा बीश=दशबीश, मानु र पाथी=मानापाथि. इ०

( ५ ) बहुव्रीहि ( Attributive ) विशेषण विशेष्यहरूको अन्य पदार्थ प्रधान हुने समासः— तीन मुख भएको=तीनमुखे, दुइ पाउ भएको=दोपाया, मोल नभएको=अमोल, लामो कान भएको=लमकन्ना, बाघको जस्तो मुख भएको=बघमुख्ना, तीन हात परिमाण भएको=त्रिहत्ती. इ०

( ६ ) अव्ययीभाव ( Adverbial ) अव्यय संग अर्कौ पदको प्रायः अव्यय पदार्थ प्रधान हुने समास :— थिति नहुनु=वेथिति, दिन भए संम=दिनभर, गरेको झैं=गरेझैं. हिजो आज=हिजोआज, लेखेको बमोजिम=लेखेबमोजिम, अघिल्लो तिर=अघिल्तिर, प्रत्येक सालमा=हरसाल. इ०

टि. १. तत्पुरुषमा अघिल्लो पद प्रथमा आदि विभक्त्यन्त, नशब्द, उपपदहरू हुन्छन्. प्रथमा-तत्पुरुषमा उल्टो क्रम संग विग्रह हुन्छ, प्रथमा-तत्पुरुषमा पूर्व, अरूमा उत्तर पदार्थ प्रधान हुन्छ, कहीं विकार पनी हुन्छ. उपपद-तत्पुरुषमा उत्तर पद बेगलै प्रयोग नहुने कृदन्त हुन्छ. जस्तैः—

प्रथमातत्पुरुष-आधाकपाल, आधारात, द्वि०तत्-भीकमगन्त, घरभणुवा, तृ०तत्–तरवारहैन्धा, 'डरछेरुवा, च०तत्–कामलायक, पं०तत्–घरफुट्टा, मेचीपश्चिम, महाकालीपूर्व, ष०तत्–बाब्वैरी, घरधन्दा, राजकाज, स०तत्–रतन्धो, ओछेनमुतुवा, नञ्तत्–नकाम, अजान, अकाल, उपपदतत्–मुखफोरा, नदीकाट, गोडधुवा. इ०

टि. २. कर्मधारयमा पूर्वपद विशेषण वा उपमान, उत्तरपद आरोप्य, उभयपद विशेषण वा नाम हुने हुन्छ, कहीं विकार पनी हुन्छ. जस्तैः-

विशेषणपूर्वपद– कालीमाटी, भलादमी, ठुलीदिदी ठुल्दी ठुल्दिदी, बुढीऔंलो-ली-ला, सानावा, विशेषणोभयपद– ठुटोपाको, जेठोबाठो, पढेगुनेको, देखेसुनेको, नामोभयपद–भानिजदाइ भान्दाइ, भान्जीदिदी भान्जीदी भान्दिदी, उपमानपूर्वपद–गहुंगोरो, पानढुट्टा, आरोप्योत्तरपद–विद्याधन, ज्ञानरत्न, मुखचन्द्र. इ०

टि. ३. द्विगुमा समूह अर्थ प्रधान भई प्रायः एकवचन हुन्छ, सो विशेषण संख्यावाचकमा प्रायः विकार हुन्छ. जस्तैः—

दोबाटो, दोमन, त्रिपाइ, चौमास, चौमहल, चौगिर्द, चौपाटा इ०

टि. ४. द्वन्द्वमा प्रायः प्राणिवाचकको इतरेतरयोग ( अनेक व्यक्ति ) बुझाउने गरी अनेकवचन हुने, अप्राणिवाचकको समाहार ( समूह ) बुझाउने गरी एकवचन हुने र विशेषण विशेषणको विकल्प वा समुच्चय बुझाउने गरी विशेष्य अनुसार हुने समास हुन्छ, कहीं विकार पनी हुन्छ. जस्तैः–

इतरेतरयोग–रामलक्ष्मण, दाज्यूभाइ, नातिनातिना, छोराछोरी, लाटालाटी छन्. समाहार–दिनदिन, गानबजान, लेखपढ, खानपिन, पुस्तकपत्र, कुटोकोदालो छैन. विशेषणोभयपद–भएनभएका, गरेनगरेका, दशवीश, दशपांच. • इ०

टि. ५. बहुव्रीहिमा सम्बन्ध, परिमाण, उपमा, निषेध बुझाउने गरी समास भई प्रायः बाहिरिया पदार्थको विशेषण हुन्छ. कहीं विकार पनी हुन्छ. जस्तैः–

सम्बन्धार्थी–तीनमुखे, चारकुने, रातमाटे, फलमुखा, एकरंगागी-गे, दोपाया, लमकना, परिमाणार्थी–दशहाते, त्रिहत्ती, तीनहाते, दसगजा-जी-जे, उपमार्थी–मखिबुट्टे, चरिनङ्ग्रे, परेवाआंखि-खे, बघुमुखा, बौमुखा, निषेधार्थी–अमोल-को, वि(बे)जोडा, नि(र्वि)कम्मा, विनाकामको, निमुखा. इ०

टि. ६. अव्ययीभावमा पूर्व वा उत्तर वा दुवैपद अव्यय हुन्छ. समास भए पछि अव्यय पदार्थ प्रधान हुने गरी जम्मै शब्द अव्यय हुन्छ. कहीं विकार पनी हुन्छ. जस्तैः–

अव्ययपूर्वपद– वि(बे)थिति, वि(बे)काम, विनाकाम, हरसाल, भरदिन, अव्ययोत्तरपद–अंविलितर, लेखेबमोजिम, जा-

नासाथ, अव्ययोभयपद्-हिजोआज, झन्अस्ति, भोलिपर्सि. इ०

टि. ७. संख्यावाचक शब्द एकदेखि नौ सम्मका, दहाइका, शय हजार आदि मूल शब्द हुन्; एगाह (एक र दश), उनन्तीस ( ऊन-एककम-तीस ) चौसट्ठी ( चार र साठी ) सवाशय ( सवा-सपाद-शय ) इत्यादि शब्द समास भई बनेका हुंन्.

प्रश्न :–

( १ ) शब्द कति किसिमका हुन्छन् ? मूल र व्युत्पन्न भनेका कस्ता हुन् ? व्युत्पन्न शब्द कस्ता कस्ता हुन्छन् ? समास कति किसिमका छन् ? कुन कस्तो समास हुन्छ ? अवधारण बुझाउंदा के विशेष हुन्छ ? ( कृदन्त तद्धितान्त समस्त शब्दमा के के वि-शेष हुन्छन् ?)

( २ ) तल लेखेका शब्द कस्ता हुन् बयान गरः–
समाउन, वसाइ, पौडने, भुटेको, भोटे, चहकिलो, धोक्रे, नेप्टे, कोदाली, बउयांइ, कहां, गाउंले, अफाप, भनेनभनेको, दुइचार, दोसांध, कुकुरपुक्रे, अपुतो, वेइज्जती, भरमुलुक, तीनतिग्रे, घरजुवाञी, घरधन्दा, नदीकाट, सानीमा, मामाशशुरा, घोडचढी, चौकुना, भनसुन.



## २६—पदव्याकरण. ( Parsing )

२००. वाक्यमा परेका प्रत्येक पदका जात, किसिम, लिङ्ग, वचन आदि विशेष बयान गर्नालाई पदव्याकरण ( Parsing ) भन्दछन.

( क ) पदको व्याकरण गर्दा अघि ठाउं ठाउंमा लेखेका सबै कुरा याद गरी हरएक पदका जात किसिम र नाममा लिङ्ग वचन विभक्ति, सर्वनाममा लिङ्ग पुरुष वचन विभक्ति त्यसको स्थानी, विशेषणमा त्यसको विशेष्य, क्रियापदमा वाच्य काल अर्थ लिङ्ग पुरुष वचनहरू र कर्ता कर्म पूरक भएसो पनी, क्रियायोगीमा त्यसको सम्बन्ध हुने क्रिया, नामयोगीमा त्यसको सम्बन्धी, संयोजकमा त्यसले जोडिने पद वाक्यसमेत देखाउनुपर्छ. जस्तै :—

ए ! ( सम्बोधन बुझाउने विस्मयादिबोधक ), बालकहो ! ( सामान्यनाम पुलिङ्ग सम्बोधन अनेकवचन ), तिमीहरू (द्वितीय-पुरुषवाचक सर्वनाम पुलिङ्ग प्रथमा अनेकवचन, यसको स्थानी बालक ), ईश्वर ( सामान्यनाम पुलिङ्ग एकवचन ), साथि ( सप्तम्यर्थक नामयोगी, यसको सम्बन्धी ईश्वर ), अटल ( गुणबोधक उद्देश्यविशेषण, यसको विशेष्य विश्वास), विश्वास (भाववाच-

कनाम नपुंसकलिङ्ग द्वितीया एकवचन ), र ( समुच्चयबोधक संयोजक, यसले जोडिने वाक्यांश अटल विश्वास, सच्चाभक्ति ), सच्चा ( गुणबोधक उद्देश्यविशेषण, यसको विशेष्य भक्ति ), भक्ति ( भाववाचकनाम नपुंसकलिङ्ग द्वितीया एकवचन ), सधैं ( राख्नुक्रियामा अन्वय हुने कालबोधक क्रियायोगी ), कायम ( गुणबोधक विधेयविशेषण, यसको विशेष्य विश्वास भक्ति ), राख ( सकर्मक विध्यर्थ पुलिङ्ग द्वितीयपुरुष अनेकवचन सरलक्रियापद, यसको कर्ता तिमीहरू, कर्म विश्वास भक्ति, कर्मसम्बन्धी पूरक कायम ) , यस्तै–शब्द अनुसार सबैमा गर्नुपर्दछ.

टि. उही शब्द ठांउ अनुसार भिन्न भिन्न जात किसिमको पनी हुन शक्ने हुनाले अघि अघिका नियमहरू याद गरी व्याकरण गर्नुपर्दछ.

प्रश्न :–

( १ ) पदको व्याकरण भनेको के हो ? पदको व्याकरणमा के के कुरा देखाउनुपर्दछ ?

( २ ) तलका वाक्यमा परेका पदको व्याकरण गर :—

गोर्खाली सिपाही शूरा हुन्छन्. पशुपतिनाथले तिमी र हामीलाई रक्षा गर्नुहुन्छ. विद्याले नम्रता र विवेक पैदा गर्दछ. चार विद्यार्थी त्यहां छन्. तिनीहरू दिल दिएर पढ्दछन्. आचे ! मैले बिर्सेछु.



# III योजनाविचार. ( Syntax )

## २७—वाक्य. ( Sentence )

२०१. योजनाविचारमा ठीक अर्थ बुझाउने गरी वाक्यमा पद जोड्ने रीतिहरूको वयान हुन्छ.

२०२. एक पूरा कुरा बुझाउने गरी योजना भएका अनेक पदको समुदायलाई **वाक्य** ( Sentence ) भन्दछन्.

जस्तै :– चरा उड्यो. घोडा दौडन्छ. गोपालले पाठ पढे. बुद्धिमान् मानिसहरू मन लाएर काम गर्दछन्. संसारका सबै पदार्थमा सब भन्दा उत्तम विद्या हो.

टि. कोही अनेक पद मिलेर केही पूरा जस्तो अर्थ बुझाउने, तर त्यतिबाट मात्रै कुरा पूरा नबुझिने भई पूरा गर्ने अर्को वाक्य संग मिलेर प्रयुक्त हुने अङ्ग-वाक्य ( Clause ) हुन्छन्, ती पनी एक किसिमका वाक्य हुन्. जस्तै :–
जसलाई मैले भनेथें-( त्यसले गर्‍यो ). हुनत जानुपर्ने हो-( तर जान शकिनन् ). घाम लागेको भए ( हिलो सुक्तथ्यो ) .

२०३. वाक्यमा कसैको विषयमा केही कुरा देखाई पूरा कुरा बुझाइने हुनाले उद्देश्य र विधेय यी दुइ थोक हुनुपर्दछ.

( १ ) **उद्देश्य** ( Subject ) अर्थात् जसको विषयमा केही कुरा भनिन्छ सो.

( २ ) **विधेय** ( Predicate ) अर्थात् कसैको विषयमा जे कुरा भनिन्छ सो.

( क ) वाक्यमा प्रथमान्त अर्थात् कर्तृवाच्य क्रियाको कर्ता वा कर्मवाच्य क्रियाको कर्म उद्देश्य, सवैमा क्रियापद विधेय भई रहन्छ. जस्तैः—

| | उद्देश्य. | | अरू पद. | विधेय. |
|---|---|---|---|---|
| कर्तृवाच्य. | घोडा ( कर्ता ) | | | दौड्यो. |
| | तिमी | ” | मलाई वेकाममा किन | कुद्तछौ ? |
| | हामी | ” | नाच | हेर्दछौं. |
| कर्मवाच्य. | नाटक ( कर्म ) | | | देखियो. |
| | पाठ | ” | बेसरी घोकेर तयार | गरिनेछ. |

टि. १ ‘ चरा उड्यो. घोडा दौडन्छ ’ इत्यादि वाक्यमा ‘ चरा घोडा ’ यी उद्देश्य मात्र, ‘ उड्यो, दौडन्छ ’ यी विधेय मात्र भनेमा कुरा नपुग्ने हुनाले प्रत्येक वाक्यमा उद्देश्य विधेय यी दुइ थोक आवश्यक हुन्छन्, कहीं स्पष्ट नदेखिए पनी गुप्त संझनुपर्दछ; अरू किसिमका पद मौका अनुसार रहन्छन्.

टि. २ कहीं उद्देश्य विधेय अरू पदहरू प्रयोग नगरे पनी मौ-

काले त्यसै बुझिने भई एक पद सम्मको संक्षिप्त ( छोटकरी ) वाक्य हुन्छ, त्यसमा ती गुप्त पदको कल्पनालाई अध्याहार ( Restoration ) भन्दछन्. जस्तै :–

यो लड्डु को खान्छ ?,–म ( लड्डु खान्छु ). तिमी आजकाल के गर्दछौ ?, ( म ) नोकरी गर्दछु. ए बाबु ! ( तं ) घर जा. रामे गयो, अनी सेते (गयो). सन्दूक गह्रौं छ, ( त्यसले ) किच्ला.

२०४. कोही अनेक पद मिली नाम विशेषण अव्यय जस्तो केही एक अर्थ मात्र बुझाउने कुरा भने पूरा नगर्ने हुन्छन्, त्यस्ता वाक्य-खण्डलाई **वाक्यांश** ( Phrase ) भन्दछन्. जस्तै :–

नामवाक्यांश–ठुला विद्वान्को लेखोट–( गहिरो हुन्छ ). म गएको हुनाले–( काम भयो ).

विशे. वा०—ढाकाको पटुका बांधेकी-( स्त्री देखिइ). सुनको पानीले लेखेको ( पुस्तक हेरें ).

अव्यय वा०–चोकदेखि उत्तर पट्टि–(इनार छ ). घाम झुल्कने वेला संम–( सुत्तछ ).

टि. केही अर्थ बुझाउने गरी योग्य स्वरूप क्रमले अनेक पदको योजना भए पछि त्यति पदको एक अर्थ बुझाउने एक समुदाय हुन्छ; सो समुदाय पूरा कुरा बुझाउने भए वाक्य, कुरो पूरा नगर्ने केही अर्थ मात्र बुझाउने भए वाक्यांश हुन्छ. तर त्यस-

द्वारमा परा कुरा बुझाउने वाक्यको नै प्रयोग हुन्छ; वाक्यांश भने नामवाक्यांशचाहिं कर्ता कर्म आदि स्वरूपले रहने, अव्ययवाक्यांशचाहिं देश काल प्रकार आदि बुझाउने, विशेषणवाक्यांशचाहिं गुण आदि बुझाउने भई वाक्य भित्र परेर मात्र प्रयुक्त हुन्छ, खालि प्रयुक्त हुंदैन.

२०५. वाक्यमा कर्ता कर्महरू नाम वा नामस्थानिक ( सर्वनाम, विशेषण, वाक्यांश ) स्वरूपले योजना गरिने हुन्छन.

| जस्तै :- | कर्ता ( उद्देश्य ). | कर्म. | क्रियापद(विधेय). |
|---|---|---|---|
| नाम—— | गोपालले | छोरालाई | डाके. |
| सर्व—— | तिमी | मलाई | हेर. |
| विशे—— | पढेकाले | जान्नेलाई | मान्दछन . |
| वाक्यांश— | ईश्वरको भरोसा | निर्विघ्नता | गर्दछ. |
| | गरी काम गर्नाले | साथको सिद्धि | |

२०६. वाक्यमा पदको योजना गर्दा यी तीन मुख्य कुराको विचार हुन्छ :—

( १ ) **पदको मेल**( Concord ) पुरुष वचन आदिमा तुल्यता.

( २ ) **विभक्तिनियम** ( Government ) विभक्ति हुने व्यवस्था.

( ३ ) पदको क्रम ( Order ) अघाडि पछाडि रहनु.

## ( १ ) मेल. ( Concord )

( क ) उद्देश्य विधेयको लिङ्ग, पुरुष, वचनमा मेल—

२०७. उद्देश्य विधेयको अर्थात् कर्तृवाच्यमा कर्ताको र क्रियापदको, कर्मवाच्यमा कर्मको र क्रियापदको लिङ्ग वचन पुरुष एकै हुनुपर्दछ. जस्तै :—

कर्तृ०—मालिनी माला गांथ्तछे. हामीले सुनेनौं. तं बस्.

कर्म०—तं देखिनेछस्. चोरहरू पक्रिए. हामी भेटियौं.

टि. यसलाई अघि ठाउं ठाउंमा (नि.-४३,४४,५३ क.ख.ग. घ, ५५ क. टि २,६९–७३,७४ टि. १, १२३ टि १. ४, १३३ टि, १६६ टि ) यस्ता यस्तामा यो यो लिङ्ग पुरुष वचनं हुन्छन् भनि लेखेका कुरा याद गरी सो अनुसार उद्देश्य विधेयको पुं स्त्री नपुं सामान्य लिङ्ग, प्रथम द्वितीय तृतीय पुरुष, एक आदरार्थी अनेकार्थी अनेकवचन मिलाई प्रयोग गर्नुपर्दछ. मानबोधक आवश्यकताबोधक मिश्रितक्रियामा ( नि १७७ ) र भाववाच्य क्रियामा ( नि १६८ ) भने अघि लेखेबमोजिम विशेष हुन्छ, तुल्यता चाहिंदैन. जस्तै :—

दश पल्टनले तलब पाए. सुनहरू किनियो. पानी पोखिएछ. तिमी के गर्दछौ ? दिदी गइछन्. बाघ मासु खान्छ. पचास पुस्तक

बांकि छ. दोषहरू उडे. दाज्यूभाइ छैनन्. गानवजानु भयो. बाबाले दिनुभयो. तपाईंहरू आउनुहोला. मालिकहरूले हेर्नुपर्दछ. यांहाले भन्नुपऱ्यो.

२०८. समुच्चय बुझाउने गरी मिलेका नाना उद्देश्य भएमा तिनमा जुनसुकै वचन भए पनी समान पुरुषका भए उही पुरुषको, भिन्न पुरुषका भए प्रथम र अरू ( द्वितीय तृतीय ) पुरुष मिलेमा प्रथम-पुरुषको, द्वितीय तृतीय पुरुष मिलेमा द्वितीय-पुरुषको, अनेकवचनान्त क्रियापद हुन्छ; क्रियापदको लिङ्ग भने नाना उद्देश्यमा समान भए उही लिङ्ग, असमान भए प्रायः सामान्य लिङ्ग हुन्छ. जस्तैः

समानपु०—रामे र काले गए. कमारो पनी कमारी पनी भागेछन्. राम लक्ष्मण सीता वनमा गए.

भिन्नपु०— त्यो र तं जाओ. गोपाल पनी तिमी पनी पढाइनेछौ. हामी तिमी तिनी एकै हौं. म तं ती गयौं.

टि. समानाधिकरण, प्रत्येकबोधक विशेषण जोडिएका, एक किसिमको भावले एक जस्तो वस्तु बुझाउने प्रायः निर्जीवबोधक, यस्ता एकवचनान्त नाना उद्देश्य भएमा प्रायः एकवचनान्त क्रियापद हुन्छ. जस्तै :—

समाना:—बाबुचा ज्यापु बलियो छ. मोतीचन्द्र दयाचन्द्र जुहारी हो.

प्रत्येक.— प्रत्येक राङो बोको भेडो काटियो.

एकभाव.—दालभात ( खाने कुरा ) पाक्यो. सहीछाप ( स्वीकार-चिन्ह ) भयो. घरखेत ( ज्यथा ) उडाइयो. भिन्नभिन्न गरी बुझाएमा भने—यो बिरामीलाई दाल भात पथ्य छन्. साहुले घर र खेत लिइए.

२०९. विधि वा निषेधरूपले विकल्प बुझाउने गरी मिलेका नाना उद्देश्य भएमा प्रायः क्रियापदको सन्निहितवाहीं उद्देश्यको बराबर लिङ्ग, पुरुष, वचन क्रियापदमा हुन्छन्. त्यस्तामा अरू उद्देश्यमा मिल्ने क्रियापद गुप्त भएको संझनुपर्दछ. जस्तैः—

विधि—छोरो (जान्छ) कि छोरी जान्छे ? म ( बसूं ) कि तिमीहरू बस्छौ ?

निषेध—न त्यो ( गयो ) न उ गयो. न हामी ( खान सक्छौं ) न त्यो खान शक्छ.

टि. कहीं समुच्चय बुझिने ठाउंमा पनी विकल्पमा झैं सन्निहित उद्देश्यको बराबर क्रियापदको पनी प्रयोग हुन्छ. जस्तै :—
यो धन दौलत कमारा कमारी घर खेत तिम्रै हो वा यी तिम्रै हुन्.

( ख ) नाम सर्वनामको लिङ्ग, वचनमा मेल—

२१०. सर्वनाम जुन नामको ठाउंमा आएको छ, सोही नामको बराबर लिङ्ग वचन सर्वनाममा हुन्छन्. जस्तैः—

राम गए ती ( राम ) भोलि फर्कनेछन्. सीता रामकी पत्नी हुन्. ती ( सीता ) वांहाकी ( रामकी ) प्यारी थिइन्. ए मन ! तँ ( मन ) कति रुन्छस् ?

टि. १ सम्बन्धी सर्वनाम जुन नामको सट्टामा आएको छ, सो नामको बराबर लिङ्ग वचन सो सम्बन्धीमा र त्यसको जोडा दर्शकमा पनी हुन्छन्. जस्तैः-

जे ( काम ) भयो, सो ( काम ) भयो. जस जस ( विद्यार्थी ) लाई जुन जुन ( गुरु ) ले जे जे ( ग्रन्थ ) पढाएका थिए, त्यस त्यस ( विद्यार्थी ) ले उन उन ( गुरु ) को नाउंमा त्यस त्यस ( ग्रन्थ ) मा जांच दिए.

टि. २ नामस्थानिक वाक्यांशको सट्टामा आएको सर्वनाममा नपुंसकलिङ्ग एकवचन हुन्छ. जस्तैः-

जो तिमी संधै खेलिरहन्छौ, त्यो ( संधै खेलिरहनु ) बेस होइन. मूर्खहरू विचार गर्दैनन्, त्यसले ( विचार नगर्नाले ) तिनको ( मूर्खहरूको ) हेला हुन्छ.

( ग ) विशेष्य विशेषणको लिङ्ग, वचन, विभक्तिमा मेल–

२११. विशेष्यमा जुन लिङ्ग वचन विभक्ति छन, सोही लिङ्ग वचन विभक्ति विशेषणमा पनी हुनुपर्दछ. तर विशेषणचाहींमा विभक्ति–वचन–प्रत्यय रहंदैन, ओकारान्त र स्त्रीप्रत्यय हुनेमा लिङ्ग वचन अनुसार सामान्यरूप मात्र बदलिने हुन्छ. जस्तै :–

कालो कोट फाटयो. विद्वान् मानिसले भनेका कुरामा पूरा ध्यान देऊ. राम्री कन्या खोजिनेछन्. दश बालकले राता किताप लिएका छन्.

टि. नामस्थानिक विशेषणमा आफ्नो स्थानी नामको बराबर लिङ्ग वचन हुन्छन्. जस्तै :—

बुद्धिमान् ( मानिस ) हरूको काममा खराप ( कुरा ) हुंदैन. मूर्ख ( विद्यार्थी ) ले भनेको ( कुरा ) सुनेर सबै ( मानिस ) लाई आश्चर्य लाग्दछ.

टि. २ एक विशेष्यका नाना विशेषण भए प्रत्येक विशेषण आफ्नो विशेष्यको बराबर हुन्छ. नाना विशेष्यको एक विशेषण भए विशेष्यमा जुनसुकै वचन भए पनी समुच्चयमा प्रायः विशेषण अनेकवचनान्त हुन्छ. लिङ्ग भने विशेष्यमा समान भए उही लिङ्ग, असमान भए सामान्य लिङ्ग हुन्छ; विकल्पमा ता सन्निहित विशेष्यको बराबर भएर विशेषण रहन्छ. जस्तै :—

मैलो, गन्हाउने, फाटेको लुगा लाउंदिनं. छोरा, छोरी, चाकरहरू गोरा छन्. भनेको नमान्ने चाकर, विद्यार्थी, छोरा काम लाग्दैनन्. गोरो छोरो कि, छोरी कि, बुहारी राम्री लाग्दछे.

टि. ३ स्त्रीप्रत्यय हुने विशेषण बडादमीलाई भन्दा स्त्रीको आदरार्थीमा पनी प्रायः अनेकार्थीमा झैं आकारान्त हुन्छ. जस्तै :—

जेठा बडा महारानी, माहिला रानी साहेब, कान्छा मैया साहेब.

## ( घ ) भेद्य भेदकको प्रत्यय द्वारा मेल—

२१२. ओकारान्त विशेषण विशेष्य अनुसार ओ-ई-आकारा-

न्त हुने झैं, भेदक अर्थात षष्ठयन्त शब्द आफ्नो भेद्य अर्थात् अन्वय हुने नाम पुं नपुंको एकवचन भए ओकारान्त (को रो नो), स्त्रीको एक वा आदरार्थी भए ईकारान्त ( की री नी ), अनेकार्थी वा पुंको आदरार्थी भए आकारान्त ( का रा ना ) प्रत्यय भएर रहने हुन्छ. जस्तै :–

रामुको, मेरो, आफ्नो–छोरो; घर. बाहुनकी, हाम्री, आफ्नी–छोरी गई वा गइन्. तिनका, तिम्रा, आफ्ना-छोरा, छोराहरू, छोरीहरू, घरहरू देखिए.

टि. स्त्रीप्रत्यय हुने विशेषण झैं भेदक पनी बडादमीलाई भन्दा स्त्रीको आदरार्थी भेद्य भए पनी आकारान्त हुने, नाना भेद्य भएमा समुच्चय विकल्प अनुसार माथि लेखे झैं हुने हुन्छ. जस्तैः– हाम्रा महारानी संग सोध. सरकारका मुमाबाट अह्राइबक्सियो. हजुरका छोरा, छोरी, दोमाया, चौपाया आराम रहुन्. हजुरकी भैम्पाको कि छोराको विवाह भयो ?

## ( २ ) विभक्तिनियम. (Government)

२१३. क्रियाका कारक छ किसिमका हुन्छन्, तिनमा यी विभक्ति हुन्छन् :–

( १ ) कर्ता ( Agent ) अर्थात् गर्ने. यो कर्तृवाच्यमा उद्देश्य भई प्रथमान्त हुन्छ. त्यसमा ले प्रत्यय भई अकर्मकमा

विध्यर्थ 'नू' प्रत्यय भएमा विकल्पले रहन्छ, अन्त रहँदैन; सकर्मकमा भने सामान्य-भूत, सामान्य-सङ्केतार्थ, भूत-कृदन्त जोडिएको, विध्यर्थ 'नू' प्रत्यय भएको, यिनमा नित्यै रहन्छ, अन्त प्रायः विकल्पले रहन्छ. कर्म-भाववाच्यमा तृतीयाको **ले** प्रत्यय हुन्छ. जस्तै :-

कर्तृवा-म सुत्तछु. हामीले देख्यौं. त्यसले पाएछ. तैंले जानू वा तं जानू. छोरो गएको छ. तैंले भन्नू. उसले पाए. त्यो खाला, त्यसले खाला.

क.भा-मैले देखियो. रामले रावण मारियो. त्यसले सुतिन्छ.

टि. मानबोधक क्रियापद भएमा 'महाराजबाट बक्सियो. बाबाबाट गर्नुहुनेछ' इत्यादि लेको ठाउंमा बाट प्रत्यय गरेर पनी प्रयोग हुन्छ.

( २ ) **कर्म** (Object) अर्थात् गरिने. त्यसमा कर्तृवाच्यमा द्वितीया हुन्छ. त्यसमा **लाई** प्रत्यय भई प्रायः सजीवमा रहने, निर्जीवमा नरहने हुन्छ. कर्मवाच्यमा त्यो उद्देश्य भई प्रथमान्त हुन्छ, प्रत्यय नित्यै रहँदैन. जस्तै :-

कर्तृवा-छोरालाई बोलाऊ. मैले चिठी लेखें. धैर्य गर.

कर्मवा-मैले चिठी लेखियो. रामले राक्षसहरू मारिए.

टि. १ क्रियार्थक (Cognate) कर्म राखी अकर्मकबाट स-

कर्मक बनेको क्रियामा पनी अरू सकर्मकको बराबर हुन्छ.
जस्तै :– मैले चार लडाइ लडें. गाढा नींद निद्राएछु. मैले चार लडाइ लडिए.

टि. २. सकर्मकबाट बनेका प्रेरणार्थक क्रियामा मूल अवस्थाको कर्म प्रधान-कर्म ( Direct obj ), प्रेर्य-कर्ताचाहीं अप्रधान–कर्म ( Indirect obj ) भई कर्तृवाच्यमा दुवै कर्म द्वितीयान्त हुन्छन्, कर्मवाच्यमा जुन भए पनी एउटा कर्म उद्देश्य भई प्रथमान्त, अर्कोचाहीं द्वितीयान्त हुन्छ. कहीं प्रेर्य-कर्तामा तृतीयाको बाट प्रत्यय, त्यस्तै द्वारा शब्द जोडेर पनी प्रयोग हुन्छ. ' भन्नु ' आदि कुनै मूल क्रिया पनी द्विकर्मक हुन्छन्.        जस्तै :–
गुरु मलाई व्याकरण पढाउनुहुन्छ. मैले भालूलाई पुराण सुनाइयो. त्यसबाट वा त्यसद्वारा वा त्यसलाई काम गराउंछु.

टि. ३ क्रियापदका झैं कृदन्त क्रियाका पनी कहीं बेगलै कर्ता कर्महरू हुन्छन्, त्यस्ता गौण ( कृदन्त ) क्रिया संगको वाक्यांश भिन्न मात्र सम्बन्ध हुने कर्ता कर्महरूलाई विच्छिन्न (Absolute ) भन्दछन्; तिनमा पनी प्रायः माथि लेखेझैं विभक्ति हुन्छन्; व्यवहार अनुसार कहीं कर्ता कर्ममा षष्ठी आदि विशेष हुने पनी हुन्छ.            जस्तै :–
' वेद पढ्नु ' असल हो. ' मैले तिमीलाई बोलाउनाले ' उनी रिसाए. ' मेरो खाउ ' सकियो. ' यसको कौमुदी पढाइ ' राम्रो छैन. ' झूटो बोल्नाले ' पाप लाग्छ. ' सूर्यले प्रकाश फैलाउंदा ' अन्धकार हट्यो. ' आंखा चिम्लेर ' सुत. ' गोपीलाई बोलाउन ' गए. ' तिनले यो कुरा गर्दा ' कसैले सुनेन.

( ३ ) **करण** ( Instrumental ) अर्थात् जसको द्वारा क्रिया हुन्छ सो. यसमा तृतीयाको ले हुन्छ. जस्तै :-

लट्ठीले हान्छ. आंखाले देखें. मनले शोच. ढकनीले छोप.

( ४ ) **सम्प्रदान** ( Dative ) अर्थात् जसको निमित्त क्रिया हुन्छ सो र जसलाई दिनु अर्थ भएको क्रिया हुन्छ सो. त्यसमा चतुर्थीको **लाई** हुन्छ. जस्तै :-

खानालाई आएं. व्यापारलाई माल मगाउंछु. बाहुनलाई दिन्छ. राजालाई चढाऊ. मलाई बक्सिओस्.

( ५ ) **अपादान** ( Ablative ) अर्थात् जसलाई अवधिं ( हद ) तुल्याएर छुट्टिनु अर्थ भएको क्रिया हुन्छ सो र जसबाट हुनु, डराउनु, रिसाउनु, बांच्नु आदि कुनै क्रिया हुन्छ सो. यसमा पञ्चमी भई प्रायः डर लाज रिस आदि मानसिकभाव-क्रियाको अपादानमा **देखि देखिन्**, विभाग बुझिने क्रियाको अपादानमा केही दूरता बुझाउंदा **देखि देखिन्** दूरता नबुझाउंदा **बाट**, अरू क्रियाको अपादानमा **बाट** प्रत्यय हुन्छन्. जस्तै :-

चोरदेखि-न् डराउंछ. मदेखि-न् रिसाए. घोडाबाट खस्यो. धुरिदेखि-न् खस्यो. रोगबाट बांच्यो. घरबाट आउंछ. यसबा-

ट हुंदैन. तपाञीबाट पाउँला.

( ६ ) अधिकरण (Locative) अर्थात् क्रियाको आ-धार देश काल र विषय. यसमा सप्तमीको **मा** हुन्छ. कहीं दे-श काल अधिकरणमा **मा** विकल्पले रहन्छ. जस्तै :–

सहरमा बस्छ. गाउं (मा) गयो. सांझमा निस्के. भांडामा रा-ख. पढ्नामा मन छ. यसमा छलफल भयो. मेरो घर पूर्व (मा) छ. घर ( मा ) गयो.

२१४. अरू अरू अर्थमा पनी यस्ता विभक्ति हुन्छन :–

( १ ) सम्बन्ध ( Genitive ) मात्र बुझाउंदा भेद्य अ-नुसार भेदकमा षष्ठीका प्रत्यय हुन्छन्. जस्तै :–

राजाको घोडा, मेरो टोपी, आफ्नी छोरी, तिनका छोराहरू, तिम्रो मन.

( २ ) विशेषणमा विशेष्यको बराबर समानाधिकरणमा स-मानाधिकरण नामको बराबर विभक्ति हुन्छन्; प्रत्यय भने रहँदैन. जस्तै :–

विशे–सेतो लुगामा रातो पटुका शुहाउंदैन. कैली गाईको दू-ध मीठो छ.

समा—रामु बाज्येको धैर्य गुणमा महत्व छ. यो मेरो छोरो हो.
दश धार्नी घिउ छ.

( ३ ) कुनै पदार्थको नाम लिंदा प्रथमा भई प्रत्यय नरहने, संबोधनमा ( Vocative ) सम्बोधनको हो प्रत्यय भई एकवचनमा नरहने, अनेकवचनमा विकल्पले रहने हुन्छ. जस्तैः—

नाम लिंदा-रामु, गोपाल, घर, खेत, रातो, पहेलो.

बोलाउंदा-ए नानी ! ए नानीहो ! पण्डितजीहरू ( हो ) !

( ४ ) केही कुराको अवधि देखाउंदा पञ्चमी भई कालवाचकमा **देखि देखिन्**, देशवाचकमा **बाट** पनी हुन्छ.

जस्तै :— घरदेखि-देखिन-बाट पूर्व, दशैंदेखि-देखिन् अघि.

( ५ ) मध्ये भन्ने अर्थमा र तत्परता निपुणताको विषय देखाउंदा पनी सप्तमीको **मा** प्रत्यय हुन्छ. जस्तै :—

मानिसमा ( मध्ये ) क्षत्रिय शूरा हुन्छन्. विद्यार्थीमा ( मध्ये ) यो बेस छ. काममा तत्पर, बोल्नामा सिपालु, जुवामा लग्गु, कुरामा खग्गु.

टि. कारण देखाउंदा तृतीयाको ले, पञ्चमीको बाट; केही क्रिया बिषमा बुझिएमा कहीं ले कहीं बाट; आशीकमा, खर्चको फांटमा, व्यवहारी कागजको उद्देश्यमा चतुर्थीको के; कल्याण सुख

हित स्वस्ति स्वाहा शब्दको उद्देश्यमा चतुर्थीको लाई हुने; एक श्रेणीका अनेक शब्दमा पछिल्लामा विभक्तिवचन-प्रत्यय रही अरू-मा लोप गरेर पनी प्रयोग हुने हुन्छ. जस्तै :—

धनले–बाट धर्म हुन्छ. विद्याले–बाट विनय हुन्छ. एक धोतीले ( धोती लाएर ) बाहिर गयो. सस्तो भाउले (भाउ गरी) किनें. झ्यालबाट ( झ्यालमा वसी ) हेर्छ. छोराके आशीक. गोपालके गएको दश. मुलुकी अड्डाके पुर्जी. तपाईलाई कल्याण सुख हित होओस्. राजालाई स्वस्ति. अग्निलाई स्वाहा. गोपाल ( ले ), गोविन्द (ले), रामहरिहरूले इनाम पाए. नपढेको बाहुन, कातर क्षत्रि, लाटो व्यापारीहरू वेकम्वा हुन्छन्.

## ( ३ ) क्रम. ( Order )

२१५. वाक्यमा पद राख्नाको क्रम वैयाकरण र आलङ्कारिक यी दुइ थरी हुन्छन्.

२१६. साधारण लेख्ता बोल्दा खेरिको सरल क्रमलाई **वैयाकरण** (Grammatical), केही विशेष कुरामा जोर दिने गरी रहेको विशेष क्रमलाई **आलङ्कारिक** ( Rhetorical ) भन्दछन्. जस्तै :—

वैयाकरण क्रम-म काम गर्छु, त्यो इनाम पाउंछ.

आलङ्कारिक क्रम—काम गर्छु म, इनाम पाउंछ त्यो.

टि. १ साधारण किसिमको लेखपढ बोलचालमा र गद्यकविता संम पनी प्राय: सरल-क्रमले रचना हुन्छ, कहीं विशेष मतलव बुझ्काउनुपरेमा र छन्दको अनुरोधले पद्य-लेखमा आलङ्कारिक-क्रमले पनी रचना हुन्छ. तर आलङ्कारिक-क्रम भएका ठाउंमा पनी सरल-क्रमको कल्पना गरी बुझ्नुपर्दछ.

टि. २ अंग्रेजीमा विभक्ति नहुनाले पदको उल्टापाल्टीले अर्थ फरक पर्ने हुनाले क्रमको विशेष आवश्यकता छ, हाम्रो भाषामा भने संस्कृतमा झैं विभक्ति हुनाले अलि अलि तलमाथि परेसंम पनी कुरा फरक पर्ने प्राय: हुंदैन, खालि वेक्रम संग रहंदा नराम्रो देखिने हुन्छ; यसैले क्रमको उस्तो विचार हुंदैन; तर ' यो–मेरो छोरो हो, मेरो छोरो-यो हो, मेरो यो-छोरो हो ' इत्यादि क्रमको भेदले मतलव भिन्न हुने, 'उनको साटियो संग घडी किताप आज मेरो ( आज मेरो घडी उनको किताप संग साटियो )' यस्तामा अर्थै नबुझिने पनी हुनाले हाम्रो भाषामा पनी अर्थ मतलव स्पष्ट हुने क्रम संग पदको रचना गर्नुपर्दछ.

२१७. व्याकरणमा वैयाकरण-क्रमको बयान हुन्छ, त्यसमा हाम्रो भाषामा प्राय: यस्तो सामान्य व्यवस्था छ:–

( १ ) वाक्यमा उद्देश्य पहिले तिर, विधेय सब भन्दा पछि, उद्देश्य पट्टि अन्वय हुने विशेषण भेदक आदि उद्देश्य भन्दा अघि, विधेय पट्टि अन्वय हुने कर्ता कर्म विधेयविशेषण क्रियायोगी पूरक अरू कारक आदि उद्देश्य भन्दा पछि विधेय भन्दा अघि रहन्छन. जस्तै :–

राजाको घोडा खूप दौडन्छ. त्यो बहुत उल्लू छ. चन्द्रमाले आफ्नो प्रकाशले सारा जगत् उज्यालो गर्नुभयो. राम अयोध्याका राजा हुन्. यसलाई मेचमा राख.

( २ ) उद्देश्यविशेषण र भेदक आफ्ना विशेष्य भेद्य संगै अघि, तिनमा पनी भेदक भन्दा विशेषणचाहीं नजीकै, क्रियापदमा अन्वय हुनेमा अरू कारक भन्दा क्रियायोगी, सो भन्दा पनी पूरक क्रियाको नजीकै संग रहन्छन्. जस्तैः—

राजाको सेतो घोडा घोडदौडमा खूप पहिला भयो.

( ३ ) गौण ( कृदन्त ) क्रिया भएमा सो क्रिया प्रधानक्रियाका पूरक क्रियायोगीहरू भन्दा अघाडि, सो गौणक्रियामा अन्वय हुने चाहीं त्यस भन्दा पनी अघि रहन्छन्. जस्तैः—

हामी पाठ पढेर तमासा हेर्न जान्छौं.. खूप राम्ररी मन लगाएर काम गर्ने मान्सिलाई सबै निको मान्दछन्.

यस्तै किसिम संग व्यवहार अनुसार जस्तो क्रम संग रहेमा ठीक अन्वय भई अर्थ स्पष्ट बुझिने हुन्छ सोही क्रम संग रचना गर्नुपर्दछ.

प्रश्नः—

( १ ) वाक्य वाक्यांश के के हुन्? उद्देश्य विधेय भनेका

के के हुन्, कस्ता कस्ता हुन्छन् ? वाक्यमा कर्ता कर्महरू कति किसिम संग रहन्छन् ? वाक्यको योजनामा के के कुराको याद गर्नुपर्दछ ? मेल भनेको के हो ? कस्ता कस्ताको के केमा मेल चाहिन्छ ? कारक कति किसिमका छन् ? कुन कारकमा कुन विभक्ति हुन्छन् ? भिन्नपुरुष नाना उद्देश्य भएमा क्रियापद कस्तो हुन्छ ? क्रम कति किसिमको हुन्छ ? क्रममा सामान्य नियम कस्तो छ ?

( २ ) तलका वाक्यमा रचना अशुद्ध भए शुद्धगरी रचना गरः—
मेरो छोरीको घरमा बडा सुविस्ता छन्. हामी यो कुरा जान्दैन. तिम्री दिदीहरू कहां गइन् ? लाटो मानिसहरू केही थाहा पाउंदैन. हामी र त्यो संग संगै होला. तपाम्री कहां जानुहुन्छन् ? हामीले धेरै मानिस ल्याउनुपरेनन्. तिनको छोराहरू भनेका कुरा कत्ति मान्दैन.

( ३ ) तलका वाक्यमा क्रम नमिलेको मिलाई, तिनमा भएका कारक र विभक्तिहरूको बयान गरः—
हजारन् उदाउंछन् तारा राति आकाशमा. जेठो तिनको छोरो खूप चौरमा उफ्री खेल्दछ. तर्छु क्षार समुद्र आज सहजै. नविर्स हरिनाम हे सुजनहो ! सदा सर्वदा. यो ग्रन्थ राख्तछु गुणी जनको अघाडि.



## २८—वाक्य—व्याकरण. ( Analysise )

२१८. वाक्य भित्रको प्रत्येक भाग फोरेर तिनको आफूसमा सम्बन्ध बुझाउनीलाई **वाक्य-व्याकरण** (Analysise) भन्दछन्.

२१९. जति पद मिलेर एक पूरा अर्थ बुझिने हुन्छ, त्यति पदको समुदाय एक पूर्ण वाक्य हुन्छ. ती तीन किसिमका हुन्छन्ः—

( १ ) **सरल** ( Simple ) एकेक उद्देश्य विधेय भएको एकलो वाक्य. जस्तैः— ईश्वरको भजन गर. हामीले त्यसलाई देख्यौं. इ०

( २ ) **मिश्र** ( Complex ) एक मुख्य वाक्यमा अर्को अङ्ग ( सापेक्ष ) वाक्य मिलेको वाक्य. जस्तै :— जसले यो काम गर्‍यो, त्यो उल्लू छ. इ०

( ३ ) **संयुक्त** ( Compound ) समान स्वतन्त्र अनेक वाक्य मिलेको वाक्य. जस्तैः— उपकारले यश पनी हुन्छ, धर्म पनी हुन्छ. इ०

टि. स्पष्ट वा गुप्त भएको क्रियापद पिछे एकेक वाक्य हुने हुनाले एक क्रियापद भएको वाक्य सरल, अनेक क्रियापद हुनाले अनेक वाक्य मिली एक भएमा त्यस्ता मिलेका अनेक वाक्यलाई सापेक्षयोजकले जोडी एक भएको वाक्य मिश्र, निरपेक्षयोजकले जोडी एक भएको वाक्य संयुक्त हुन्छन्.

## ( १ ) सरल वाक्य. ( Simple sentence )

२२०. सरल वाक्यमा नाम वा नामस्थानिक सर्वनाम विशेषण वाक्यांश स्वरूपले रहेको एक उद्देश्य, क्रियापद स्वरूपले रहेको एक विधेय हुन्छ.

२२१. वाक्यका उद्देश्य र विधेय यी दुइ मुख्य र आवश्यक अङ्ग हुन. कहीं कुनैचाहीं स्पष्ट नदेखिए पनी योग्य पदको अध्याहार ( कल्पना ) गरी पुरा गर्नुपर्दछ. लामा वाक्यमा यी दुइ बाहेक अरू पद पनी हुन्छन्. ती अन्वय अनुसार कुनै उद्देश्य पट्टि कुनै विधेय पट्टि मिली तिनलाई बढाउने भई वाक्यलाई उद्देश्य र विधेय यी दुइ भागमा विभक्त गर्दछन.

टि. सो विभाग यसरी हुन्छ :—

( १ ) उद्देश्यको उद्देश्यविशेषण, वा तत्स्थानिक, भेदक, समानाधिकरणहरू र तिनमा अन्वय हुने अरू पद समेत साक्षात् परम्पराले उद्देश्य पट्टि मिली उद्देश्यलाई बढाउने जति उद्देश्यति-

स्तार ( Adjuncts to the Subject ) हुन्छन्.

( २ ) विधेयको कर्म, पूरक, क्रियायोगी आदि विधेय पट्टि मिल्दछन्. तिनमा कर्म र पूरक यी दुइ विधेयकै अवयव जस्ता हुन्. अरू कारक क्रियायोगीहरू र तिनमा अन्वय हुने अरू पद समेत साक्षात्, परम्पराले विधेय पट्टि मिली विधेयलाई बढाउने जति विधेयविस्तार ( Adjuncts to the Predicate ) हुन्छन्. यस्तै कर्म पट्टि मिली कर्मलाई बढाउने जति कर्मविस्तार ( Adjuncts to the Object ), पूरक पट्टि मिली पूरकलाई बढाउने जति पूरकविस्तार ( Adjuncts to the Complements ) हुन्छन्.

२२२. सरल वाक्यको व्याकरण गर्दा यी अंश भए जति छुट्याई देखाउनुपर्दछ.

| | | | |
|---|---|---|---|
| उ. भाग | | (१) उद्देश्य | नाम वा नामस्थानिक |
| | | (२) उद्देश्यविस्तार | उद्देश्यविशेषण वा तत्स्थानिकहरू |
| विधेय भाग. | (३) विधेय. | क्रियापद | सरल वा संयुक्त वा मिलित |
| | | पूरक विस्तारसहित | कर्तृ-कर्मसम्बन्धी नाम विशेषणहरू |
| | | कर्म विस्तारसहित | नाम वा नामस्थानिक |
| | | (४) विधेयविस्तार | क्रियायोगी वा करण आदि |

जस्तै :— वाक्य. दशरथका जेठा छोरा राम अयोध्याका प्रतापी राजा भए. तिम्रो छोरोले हिजो सन्दूक भित्रको रुपियां चोरेको छ. आफ्ना देशका राजा प्रत्यक्ष फल दिने ईश्वर हुन्.

त्यो मैले अह्राएको काम खूप राम्ररी गर्दछ. तिनको बहुतै प्यारो चरा खूप वेगलें माथि संम उड्यो.

| उद्देश्यभाग. | | विधेयभाग. | | | |
|---|---|---|---|---|---|
| | | विधेय. | | | |
| उद्देश्य. | उ. विस्तार | क्रियापद | पूरक सविस्तार | कर्म सविस्तार | वि. विस्तार |
| राम | दशरथका, जेठा, छोरा | भए | अयोध्याका प्रतापी-राजा | | |
| छोरोले | तिम्रो | चोरेको छ | | सन्दूकभित्र को-रुपियां | हिजो |
| राजा | आफ्नो देशका | हुन् | प्रत्यक्षफल दिने-ईश्वर | | |
| त्यो | | गर्दछ | | मैले अह्राए को-काम | खूप राम्ररी |
| चरा | तिनको, ब-हुतै प्यारो | उड्यो | | | खूप वेगले, माथि संम |

## (२) मिश्र वाक्य. (Complex sentence)

२२३. मिश्र वाक्यमा एक मुख्य-वाक्य संग अर्को अङ्ग-वाक्य मिलेको हुन्छ. तिनमा जुन वाक्यमा अर्को वाक्य मिल्न आएको छ सोचाहीं **मुख्य** (Principal), जुन वाक्य अर्को वाक्यमा अगाडिबाट वा पछाडिबाट वा पेट भित्र मिल्न गएको छ सोचाहीं **अधीन** वा **अङ्ग** (Subordinate or clause) वाक्य हुन्छ. जस्तै :—

(मु)-इतिहासमा सुनिन्छ कि, (अ)-आफन्त पनी फुट्तछन्.

(अ)-जहाँ मन लागेथ्यो, (मु)-उहां जान पाइनं.

(मु)-विद्यार्थीहरू—(अ)-अहिले जांच कडा छ-भनि भन्दछन्.

२२४. अधीन वाक्य तीन किसिमका हुन्छन् :—

(१) **नामवाक्य** (Noun Clause) मुख्य वाक्यका कर्ता कर्म आदि नाम जस्तो हुने. जस्तै :—

त्यसले ' म आउंदिनं ' भन्यो. ' भोलि छुट्टि हुन्छ ' भन्ने मर्जी भयो.

(२) **विशेषणवाक्य** (Adjective Clause)

मुख्य वाक्यका कर्ता कर्म आदिको विशेषण जस्तो हुने.

जस्तै :— जुन चीज धेरै दिनदेखि थियो ( धेरै दिनदेखि रहेको ) त्यो हरायो.

( ३ ) **अव्ययवाक्य** ( Adverbial Clause )

मुख्य वाक्यका क्रियायोगीहरू जस्तो हुने. जस्तै :—

जहां भन्छौ, उहां जान्छु. जसरी भनेथे, उसैगरी गरें.

टि. १ अधीनवाक्य व्यवहार अनुसार संयोजक अव्यय, सम्बन्धी सर्वनाम, त्यसबाट बनेका योजकहरूले जोडिन्छन्; कहीं योजक शब्द गुप्त रहने पनी हुन्छ.

टि. २ मुख्यवाक्य एकै हुन्छ, अधीनवाक्य भने मौका अनुसार एक पनी अनेक पनी हुन्छन्. कहीं एउटा अधीनवाक्यको अर्को अधीनवाक्य पनी हुन्छ. जस्तै :—

( क ) जसले बेसरी इलम गरेको छ, जो बुद्धि पुर्‍याई काम गर्दछ, जसमा आलस्य छैन, त्यही परिणाममा सुखी हुन्छ.

( ख ) यस पाला अनाज धेरै भएन, त्यसैले रुपियां उठ्न शक्तैन, भन्ने खबर मैले पाएं.

टि. ३ नामवाक्यमा नामयोगी जोडिएर पनी कहीं प्रयोग हुन्छ. जस्तै :— त्यसले ' म आउंछु ' सम्म भन्यो, अरू केही भनेन. ' म जान्दिनं ' बाहेक अरू केही भन्दैन.

टि. ४ अर्काको उक्तिको अनुवाद गर्दा अंग्रेजीमा शब्दानुवाद

(Direct Narration) अर्थानुवाद (Indirect Narration) का भेदले क्रियापदको रचनामा विशेष हुन्छ; मिश्र-वाक्य भित्र प्रधान र अधीन वाक्यमा पनी ठांउ हेरी क्रियापदमा कालको रचनामा विशेष हुन्छ, हाम्रो भाषामा भने संस्कृतमा झैं शब्दानुवाद मात्र हुने हुनाले यस्तामा पनी अरू सरहै अर्थ अनुसार हुन्छ, विशेष हुंदैन. जस्तै :–

त्यसले ' म जान्छु ' भन्यो. त्यो भन्दछ कि म अस्तिनै गएथें.

२२५. मिश्र वाक्य भित्रका मुख्य अधीन प्रत्येक वाक्य सरल वाक्य जस्ता भई तिनमा पनी सरल वाक्यमा झैं एकेक उद्देश्य विधेय हुन्छन, लामा वाक्यमा विस्तार, पूरक, कर्महरू पनी हुन्छन्.

२२६. मिश्र वाक्यको व्याकरण गर्दा मुख्य वाक्य, अधीन वाक्य, अधीन वाक्यको क़िसिम, स्पष्ट वा गुप्त तिनको योजक समेत देखाइ सरल वाक्यमा झैं प्रत्येक वाक्यका उद्देश्य विधेय आदि देखाउनुपर्दछ. जस्तै :–

वाक्य :– हिजो आज पूरा संचो छ भनि छोराले लेखेको थियो. जुन किताप आलमारीको गहना थियो, त्यो मैले भाइलाई दिएं. जहिले तिम्रा जेठा छोरा आएका थिए, उहिले मैले तिनलाई बेसरी जांचेको छु.

| | | उद्देश्यभाग. | | विधेयभाग. | | | |
|---|---|---|---|---|---|---|---|
| | | | | विधेय | | | |
| | संयोजक | उद्देश्य | उ०विस्तार | क्रियापद | पूरक सविस्तार | कर्म सविस्तार | विधेय-विस्तार |
| मुख्य | भनि | छोराले | | लेखेकाथियो | | | |
| अधीन (नाम) | | संचो | पूरा | छ | | | हिजोआज |
| मुख्य | | मैले | | दिएं | | त्यो | भाइलाई |
| अधीन (विशेष.) | जुन | किताप | | थियो | आलमारी-को गहना | | |
| मुख्य | | मैले | | जांचेकोछु | | तिनलाई | उहिले बेसरी |
| अधीन (अव्यय) | जहिले | छोरा | तिम्रा, जेठा | आएकाथिए | | | |

## (३) संयुक्त वाक्य. (Compound sentence)

२२७. संयुक्त वाक्यमा परस्पर निरपेक्ष हुनाले समान भएका स्वतन्त्र अनेक वाक्य समुच्चय विकल्प आदि बुझाउने योजक शब्दले मिलेका हुन्छन्. जस्तै :–

घाम पनी लाग्यो, पानी पनी पर्‍यो. गोपाल पहिला भए कि रामु पहिला भए.

२२८ संयुक्त वाक्य यस्ता किसिमका हुन्छन् :–

( १ ) **समुच्चायक** ( Cumulative ) समुच्चय बुझाउने. जस्तै :– गोठालो गाई दुहुन्छ, घांस पनी काट्छ.

( २ ) **वैकल्पिक** ( Alternative ) विकल्प बुझाउने. जस्तै :– गोपाल पास भयो कि फेल भयो ?

( ३ ) **विशेषक** ( Adversative ) विशेष बुझाउने. जस्तै :– त्यसको बोली कडा छ, तर भित्र दया छ.

( ४ ) **उपपादक** ( Illative ) उपपत्ति बुझाउने.

जस्तै :— यो पनी पास हुनेछ, किनकि यस पाला जांच गाह्रो थिएन.

यस्तै-संयोजकको भेदले क्रमबोधक शीघ्रताबोधक आदि पनी हुन्छन्.

टि. संयुक्त वाक्य निरपेक्षयोजकले र कहीं निरपेक्षयोजकको जस्तो अर्थ बुझाउने सम्बन्धी सर्वनामले पनी जोडिने हुन्छ. संयुक्तमा प्रायः अघिल्लो वाक्यमा परेको पद नदोहोरिएर सङ्कुचित भई दोस्रो वाक्य संक्षिप्त हुन्छ.

२२९. संयुक्त वाक्य भित्रको प्रत्येक वाक्य एक किसिमको सरल वाक्य हो, त्यसमा पनी अरूमा झैं उद्देश्य विधेय र लामो वाक्यमा विस्तार, पूरक, कर्महरू पनी हुन्छन्.

२३० संयुक्त वाक्यको व्याकरण गर्दा प्रत्येक वाक्य छुट्याई तिनको योजक देखाई सरल वाक्यमा झैं प्रत्येक वाक्यका उद्देश्य विधेयहरू गुप्त भएका समेत स्पष्ट गरी देखाउनुपर्दछ :—

वाक्य :— ईश्वरले हामीलाई पैदा गर्नुभएको छ, वाहांले हरदम हाम्रो रक्षा पनी गर्नुहुन्छ. हुनत यो बालक धेरै बेर घोक्छ, तर पढेको पाठ कहिल्यै आउंदैन. कि यसले मलाई ठुलो आनन्द होला, कि त परिश्रम यसै माटो होला.

| | | उद्देश्यभाग. | | विधेयभाग. | | | |
|---|---|---|---|---|---|---|---|
| | | | | विधेय | | | |
| | योजक | उद्देश्य | उ०विस्तार | क्रियापद | पूरक सविस्तार | कर्म सविस्तार | विधेय विस्तार |
| पहिलो | | ईश्वरले | | गर्नुभएकोछ | पैंदा | हामीलाई | |
| दोस्रो | पनी | वाहांले | | गर्नुहुन्छ | | हाम्रो-रक्षा | हरदम |
| पहिलो | हुनत | बालक | यो | घोक्तछ | | | धेरैवेर |
| दोस्रो | तर | पाठ | पढेको | आउंदैन | | | कहिल्यै |
| पहिलो | कि | आनन्द | ठुलो | होला | | | यसले मलाई |
| दोस्रो | कित | परिश्रम | | होला | माटो | | यसै |

प्रश्न :–

( १ ) वाक्य कति किसिमका हुन्छन् ? सरल मिश्र संयुक्त वाक्य कस्ता कस्ता हुन्छन् ? अधीनवाक्य कस्तो हुन्छ ? कति किसिमको छ ? वाक्यको व्याकरण गर्नु भनेको के हो ? कस्ता वाक्यको कसरी व्याकरण गर्नुपर्दछ ? संयुक्तवाक्य कति किसिमका हुन्छन् ? वाक्यका कति अंश हुन्छन्, कस्ता कस्ता हुन्छन् ?

( २ ) तलका एकेक पूर्णवाक्य छुत्याई तिनको कोष्ठक बनाई व्याकरण गर :–

जन्मभूमिमा प्रेम गर्नाले यस लोकमा पनी यश हुन्छ, परलोकमा पनी कल्याण हुन्छ. आलस्य नगर, जसले तिमीहरूलाई उन्नति गर्न दिंदैन. संसारमा सव भन्दा ठूलो विद्या हो. जो अर्काको सुख दुःखमा दिल मिलाउंछ, त्यस संग सवैको प्रेम कायम हुन्छ. राति आकाश तिर हेरे ईश्वरको विचित्र रचना प्रत्यक्ष हुन्छ. राम्रु र कालु साथी हुन्.

## २६–चिन्ह. ( Punctuation )

२३१. वाक्यहरू लेख्ता वर्ण पद वाक्य स्पष्ट बुझिने गरी दफा दफा अलग गरी अर्थ गोलमाल नहुने गर्नालाई ठाउं ठाउंमा चिन्हहरू समेत दिनुपर्दछ.

टि. पद वाक्यहरू नछुट्याई लहरै लेख्ता ' देशरामशराः ' जस्तो भई अर्थ बुझ्न गाह्रो हुने हुन्छ, ठाउं ठाउंमा चिन्ह नदिएमा एक अर्थ बुझिनुपर्नेमा अर्कै थोक बुझिन जाने पनी हुन्छ, चिन्ह दिनाले अन्वय अर्थहरू स्पष्ट बुझ्नालाई सजीलो हुन्छ. जस्तैः–

देवदत्त ! यज्ञदत्त कहां छन् ? देवदत्त, यज्ञदत्त कहां छन् ? देवदत्त यज्ञदत्त कहां छन्.

२३२. लेखमा वारंवार काम पर्ने प्रसिद्ध चिन्ह यस्ता छन् :-

, पादविराम-चिन्ह. यो समान पद, वाक्यांशहरू छुट्याउंछ

; अर्धविराम-चिन्ह. यो सापेक्ष वाक्यहरू छुट्याउंछ.

. पूर्णविराम-चिन्ह. यो वाक्य पूर्ण भएको बुझाउंछ.

? प्रश्न-चिन्ह यो प्रश्न अर्थ बुझाउंछ.

! उद्गार-चिन्ह यो सम्बोधन आश्चर्य आदि बुझाउंछ.

' ' अवतरण-चिन्ह यो कोही विशेष पद वाक्यहरू देखाउंछ

– अंश-चिन्ह यो अवयवको जोड देखाउंछ.

जस्तैः– एउटा सानो केटो, आफ्नो अन्धो बाबुको हात समातेर, घर घर भीक माग्न जान्थ्यो. अनी सबै त्यसलाई देखेर रुपियां पैसा खाने कुरा दिन्थे. त्यो सबैलाई देख्ना साथ ' जय जय ' भनि भन्दथ्यो. त्यसको स्वभावले ' ओहो ! यो कस्तो सुशील केटो रहेछ ' भनी माया गर्दथे. ' तंलाई के चा-

हिन्छ ?' भन्दै जस जसलाई जे जे मन लाग्यो, सोही सोही कुरा त्यसलाई प्रीति-दान गर्दथे.

यस्तैः—व्यवहार अनुसार अरू किसिमका चिन्हको पनी उपयोग हुन्छ.

प्रश्न :—

( १ ) चिन्ह दिनाले के फायदा हुन्छ ? चिन्ह कति किसिमका छन् ? कुन चिन्ह कस्तो ठाउंमा दिनुपर्दछ ?

( २ ) तलका लेखमा ठाउं ठाउंमा दिनुपर्ने चिन्ह देऊ :—

हे परमेश्वर हजुरको रसीलो दृष्टि हामी अनाथ माथि करुणा साथ परीरहोस् जसको प्रभावले संसारका आधि व्याधि आदि सबै किसिमका तापहरू कुन हट्तैनन् हजुरको पाउमा दृढ भक्ति अटल विश्वास पूरा भरोसा राख्ने यावत् प्राणीहरू सदा सर्वदा आनन्दको अनुभव गर्दछन्.



